प्रकाशक :
पब्लिकेसन नेपालय
कालिकास्थान, काठमाडौँ
फोन :०१-४४३९७८६
इमेल :publication@nepalaya.com.np
www.nepalaya.com.np



संस्करण:पहिलो, सन् २०११
दोस्रो, सन् २०११
१ २
आवरण :जेएनआर डिजाइन
मुद्रक :जगदम्बा प्रेस
हात्तीवन, ललितपुर

# साधुवाद

विद्यार्थीकालदेखि नै अमेरिकाप्रतिको मेरो धारणा नकारात्मक थियो। तर जीवनको उत्तरार्धमा त्यहाँ पुगेर घुम्दै-हेर्दै जाँदा त्यहाँको व्यवस्था र मान्छेहरूको व्यवहारबाट म मुग्ध भएँ। त्यहाँको जस्तो भौतिक विकास त अन्यत्र पनि भइरहेको छ, तर त्यहाँका मानिसहरूको सोचको फराकिलो आकाशले मलाई हुनसम्मै प्रभावित पार्‍यो।

मैले त्यहाँ जे देखेँ, त्यसलाई आफ्नो सोचको स्तरबमोजिम इमानदारीसाथ जानेसम्मको सीप प्रयोग गरेर लेखेको छु। मेरो लेखनीले पाठकलाई अमेरिकाबारे सामान्य जानकारी र थोरै मात्रामा भए पनि आनन्द दिन सकेछ भने आफ्नो मिहिनेत सफल भएको ठान्नेछु।

यस पुस्तकको पूर्ण श्रेय म छोरी रचना र ज्वाइँ रविलाई दिन्छु। उनीहरूले कर गरेर अमेरिका नबोलाएका भए यसको गर्भाधान नै हुने थिएन। अमेरिकाको

यात्राभरि मसित छायासरह रहेकी र यो नियात्रा लेख्न मलाई सधैँ हौस्याइरहने मेरी श्रीमतीलाई के भनूँ र खोइ ... धन्यवाद प्रिया !

अमेरिकाका मेरा दुई विद्वान् मित्र प्रा.डा. विजयराज शर्मा र प्रा.डा. लक्ष्मीप्रसाद ज्ञवालीप्रति सुझाव तथा सहयोगका निम्ति आभारी छु। गहकिला सुझावसहित मलाई लेख्न उत्प्रेरित गर्ने भाइ अविनाश श्रेष्ठलाई पनि धन्यवाद।

यो पुस्तकको सुन्दर सम्पादन गरेर भाषा सिँगारिदिने भाइ पारसप्रकाश नेपाललाई मेरो साधुवाद छ। प्रकाशनको जिम्मा लिइदिने नेपालयप्रति हार्दिक सद्भावसहित आभार व्यक्त गर्दछु।

प्रकाश सुवेदी
omsubedi@hotmail.com

# विषयसूची


१. म अन्ततः पुगेँ
२. स्वप्निल संसारमा प्रवेश
३. हृदयप्यारीको टोलमा सफाइ हेर्दै
४. आज अमेरिकामा रमिता छ
५. गुडमर्निङको रङ्गमा धुम्मिएको आकाश
६. बसैमा सररर
७. तारा टेक्दै नाच्दो छ हलिउडको सडक
८. ऐँसेलु, सुत्केरी र बिरालो
९. जादुनगरीको सयर
१०. हिमाल त हिमालै हो नि
११. पापको सहरमा आफ्नासित
१२. बाई गाइज

# म अन्ततः पुगेँ

२८ जुन, २००७।

युनाइटेड एयरलाइन्सको जहाज बिहीबार स्थानीय समय बिहानको पौने दस बजे सियाटलको विमानस्थलमा ओर्लियो। मनमा अनेक कौतूहल र थुप्रै तर्कना लिएर म र मेरी श्रीमती रानी जहाजबाट ओर्लेर अध्यागमन कक्षतर्फ लाग्यौँ। यात्रुहरू कताबाट कता जानुपर्ने हो, त्यसको स्पष्ट सङ्केत टोक्योको नारिता विमानस्थलमा जस्तै यहाँ पनि देखाइएकाले गन्तव्यमा पुग्न गाह्रो भएन।

सम्झिएँ– उपयुक्त सङ्केतपाटीको अपर्याप्तताले ब्याङ्कको सुवर्णभूमि अन्तर्राष्ट्रिय विमानस्थलमा हामीले राम्रै धपेडी खेप्नुपरेको थियो। त्यसै बेला द्विविधा र त्रासयुक्त अनुहार लिएर हस्याङफस्याङ गर्दै मलेसिया जाने विमान समात्न पुग्नुपर्ने गन्तव्य

सोध्दै बीस जनाजति नेपाली युवालाई त्यहाँ भौँतारिएको देख्दा मलाई थप खिन्नता अनुभव भएको थियो। सोधपुछ डेस्कमा गएर पनि उनीहरूले कुरा गरेका थिए। तर दुवैतिरको भाषागत समस्याले गर्दा अन्योल झन् बढेझैँ लागेको थियो। मैले प्रयास गर्दा पो हुन्छ कि भनेर त्यहाँ खटिएकी थाई महिलासित सक्दो सरल अङ्ग्रेजीमा कुरा गरेको थिएँ। तथापि केही समाधान निस्कन सकेको थिएन र हामी सबै रामभरोसेको स्थितिमा यताउतिका सङ्केतपाटीहरूमा आँखा अल्झाउँदै अघि बढेका थियौँ।

२७ जुन अर्थात् २०६४ सालको असार १३ गते बुधबार दिउँसो थाई एयरलाइन्सको विमानबाट काठमाडौँदेखि ब्याङ्कका लागि उड्दा मछेउको सिटमा झापाका एक युवक पनि थिए। उनी मलेसियाका निम्ति उडेका रहेछन्। पन्ध्र महिना भएको रहेछ उनी त्यहाँको प्याङ्गन भन्ने ठाउँमा काम गर्न गएको। अहिले दुई साताको छुट्टीपछि घरबाट फर्कँदै रहेछन्। उनी त्यहाँ काम गरेर सन्तुष्ट रहेछन्। कम्पनीले

बस्ने एउटा कोठा दिएको रहेछ। त्यसैमा उनी अन्य छ जना नेपाली सहकर्मीहरूसँग मिलेर बस्ने-खाने गर्दा रहेछन्। केबुल कारखानामा तार प्याकिङ गर्ने काम रहेछ। भारी काम गर्नुपर्दो रहेनछ। तलब भने थोरै रहेछ। तर उनले दिनको चार घण्टा बढी समय काम गरेर खाने र पाकेट खर्च पुऱ्याउँदा रहेछन् र महिनाको पन्ध्र हजारजति रुपैयाँ घर पठाइरहेका रहेछन्।

मलेसिया आउँदा म्यानपावर कम्पनीलाई बुझाउनुपरेको डेढ लाख रुपैयाँ उनले एक वर्षभित्रै घर पठाइसकेका रहेछन् र अहिले थप साठी हजार रुपैयाँ छोडेर आएका रहेछन्। उनका अनुसार मलेसियाबाट नेपाल रकम पठाउन पनि एकदमै सजिलो छ रे। मनी ट्रान्सफर कम्पनीमा रकम जम्मा गरेकै दिन, नभए भोलि पल्ट त उनका घरका मान्छेले पैसा बुझ्सिक्छन् रे। उनी बाह्र कक्षा पास रहेछन्। अङ्ग्रेजी बोल्न जानेका हुनाले पनि कम्पनीले उनको कामको करार अवधि अझ दुई वर्ष थप गर्न खोजेको छ रे।

उनको जस्तो सन्तुष्टिको कथा मलेसिया काम गर्न जाने अधिकांश नेपाली युवकहरूको होला भन्ने मलाई लाग्दैन। त्यहाँ गएका नेपाली कामदारका दुर्दशाका खबरहरू नेपाली पत्रपत्रिकामा बेलाबेला प्रकाशित भइरहेका छन्। मेरा एक जना भाइ पर्नेले त्यहाँ दुई वर्ष काम गरेका थिए, तर पैसा ल्याउने कुरो त परै जाओस्, उनी बल्लतल्ल ज्यान जोगाएर फर्केका थिए। त्यस बेला उनको परिवारलाई परेको चिन्ता सम्झँदा मलाई अहिले पनि ठूलो फिक्री लाग्छ। मलेसिया मात्रै होइन, कोरिया, दुबई, साउदी अरेबिया आदि ठाउँमा काम गर्न गएका प्राय: सबै नेपालीको कथा धेरथोर उस्तै छ। गरिब नेपाली परिवारले ऋृण काढेर, कसैकसैले त घरबारै बेचेर पनि छोराछोरीलाई ठूलै सपनासाथ वैदेशिक रोजगारमा पठाइरहेका छन्। परिणाममा भोग्नुपरेका अनेक हन्डर र ठक्करदेखि सन्तानै गुमाउनुसम्मको पीडा जसलाई परेको छ उसले मात्र बोध गर्न सकेको होला। मलेसियातर्फ उड्दै गरेका झापाली युवक जस्ताले पठाएको रेमिटचान्स

भनिने धनराशिले देशको अर्थतन्त्रमा केही टेवा त पुगेकै होला, तर यसले हाम्रो समाजमा उल्लेख्य रूपमा सन्ताप पनि बढाएको छ। विदेशी कामदारका रूपमा गएका धेरै युवाहरू त्यहाँ शोषित, उत्पीडित र असुरक्षित छन्। केही त प्रारम्भमै स्वदेशीबाट ठगिएर धोती न टोपी भएका छन्। के यस व्यवसायलाई हामीले व्यवस्थित र सुरक्षित बनाउन सक्दैनौँ ? वैदेशिक रोजगारमा जानु गरिब नेपालीको विवशता र हाम्रो नियतिको विडम्बना हो। ब्याङ्कक एयरपोर्टमा भौँतारिएको त्यो नेपाली युवा जमातलाई देख्दा मेरो मन त्यसै खिन्न भएको थियो र सोचेको थिएँ– के हामी नेपालीले विदेशी भरिया र ज्यामी भएर शोषित, पीडित हुनुपर्ने नियतिबाट कहिल्यै मुक्ति पाउन सक्दैनौँ ? देशभित्रै यसको वैकल्पिक व्यवस्था मिलाउन हामीले कहिले सकौँला, खोइ !

हामी अध्यागमन परिसरमा पुगिसकेछौँ। सङ्केतपाटीमा आगन्तुकहरू नम्बर ३, ४ र ५ कक्षमा भन्ने लेखोट पढ्दै थिएँ, एक महिला कर्मचारीले हामीलाई ३

नम्बरतिर जान इसारा गरिन्। त्यहाँ प्रत्येक आगन्तुकको पासपोर्ट जाँचिँदो रहेछ र सोधपुछका आधारमा अमेरिका बस्न पाउने एन्ट्री भिसा दिइँदो रहेछ। काठमाडौँमा भिसा दिँदा दूतावास कार्यालयले हाम्रो पासपोर्टमा पर्यटकका रूपमा पटकपटक आवतजावत गर्न सक्ने पाँचवर्षे मल्टिपल भिसाको छाप लाइदिएको थियो। त्यो देखेर मैले सोचेको थिएँ– हामी त्यसै भिसाका आधारमा पाँच वर्षसम्म अमेरिका आउजाउ गर्न सक्छौँ र एक पटक जाँदा छ महिनासम्म बस्न सक्छौँ। तर यहाँ कुरा अर्कै रहेछ। पोर्ट अफ एन्ट्रीका अध्यागमन अधिकारीले जतिको भिसा दिन्छन् त्यति अवधिसम्म मात्रै त्यस मुलुकमा बस्न पाइने रहेछ। जाँचका क्रममा केही शङ्का लागे उनले आगन्तुकलाई भित्र छिर्नै नदिई त्यहीँबाट फिर्ता पठाइदिन पनि सक्ने रहेछन्। छोरीले हामीलाई पहिले नै “छ महिना बस्छौँ भन्नुहोला, नत्र कसैकसैलाई दुई महिनाको मात्रै पनि भिसा दिन्छ” भनेर फोनमा सचेत गराएकी थिइन्।

लाममा उभिएर मैले सोचें– टिकट माग्यो भने ? सोझै झूटो बोलेको ठहर्छ, अनि ? हामीले तीन महिना त्यहाँ बस्ने हिसाबले आतेजाते टिकट लिएका थियौँ। अन्योलअन्योलमै मैले अध्यागमन डेस्कतर्फ चियाएँ।

त्यहाँका अग्ला गोरा अधिकारीले भारतीय जस्ता देखिने एक जोडी युवायुवतीको पासपोर्ट जाँच्दै सोधपुछ गर्दै थिए। युवक हात नचाउँदै जवाफ दिँदै थियो। उनीहरूको भावभङ्गीबाट युवक अत्तालिए जस्तो देखिन्थ्यो भने युवती डराए जस्ती। युवकको इसारामा युवतीले पर्सबाट एउटा कागज झिकेर दिई। सियाटलनेर रहेको कम्प्युटरसम्बन्धी प्रख्यात कम्पनी माइक्रोसफ्टमा एसियाका धेरै कम्प्युटर इन्जिनियरहरू कार्यरत छन् भन्ने सुनेको थिएँ। केटो त्यही कम्पनीमा काम गर्छ होला, उसले भर्खरै बिहे गरेर दुलही लिएर आएको होला र त्यसैसम्बन्धी कागजात ती अधिकारीले हेर्न खोजेका होलान् भन्ने मैले लख काटेँ। अधिकारीले कागज नियाले र युवतीतिर हेरे। जाँचिसकेपछि पासपोर्टहरू फर्काउँदै उनले केही भने। ती दुवै जना

उज्यालो अनुहार लाएर "धन्यवाद" भन्दै अगाडि बढे ।

अधिकारीले हामीतिर हेरेर "आउनुहोस्" भनेपछि हामी दुवै जना सँगसँगै डेस्कअगाडि गएर उभियौं । उनले हाम्रो पासपोर्ट मागेर मुसुक्क हाँस्दै सोधे– "तपाईंहरू अमेरिका किन आउनुभयो ?"

"छोरी-ज्वाइँ भेट्न, तपाईंहरूको देश हेर्न, घुम्न ।" मैले पनि हाँस्न खोजेझैँ गरी जवाफ दिएँ ।

भिसाका निम्ति सोधपुछ गर्ने क्रममा काठमाडौंको अमेरिकी दूतावासको याक एन्ड यती होटेल परिसरमा रहेको भिसा शाखाकी हिस्सी परेकी गोरी केटीले पनि प्रारम्भमै यस्तै प्रश्न तेर्स्याएकी थिइन्– "तपाईंहरू अमेरिका किन जाने ?"

आह, कति तनावमा थियौं हामी दुवै त्यस प्रतीक्षालयमा अन्तर्वार्ताको पालो पर्खिरहेका बेला ! अनेकौं ऊहापोहसाथ म र मेरी श्रीमती उभिएका थियौं ती केटीका सामुन्ने । "अहिले त्यहाँ गर्मी हुन्छ बरु तपाईंहरू पछि

जाडोयाममा जानुहोला नि" भन्दै हाँसेर उनले हाम्रो पासपोर्ट फर्काइन् भने अथवा "बा, तपाईं भर्खरै सेवानिवृत्त हुनुभएको रहेछ; केही दिन आराम गर्नुहोस्; अहिले आमालाई यसो घुमेर आउन दिनुहोस् है" भनिन् भने ? अथवा, मेरी श्रीमतीलाई रोकेर मलाई मात्र जान दिइन् भने? उनको त्यो प्रश्नसँगै धेरै कुरा सलबलाएका थिए मेरो मनमा। मैले अरूहरूबाट सुने अनुसार अमेरिकी अध्यागमनका अधिकारीहरू भिसा नदिन जे पनि भन्न सक्छन् र कसैलाई पनि कुनै कारण नजनाई भिसा पाउनबाट वञ्चित गर्न सक्छन्। त्यहाँ पालो कुर्न बस्दा पनि मैले भित्तामा झुन्ड्याइएको सूचनापाटीमा "कसैलाई भिसा दिनु वा नदिनु अध्यागमन अधिकारीको अधिकारको कुरो हो; कसैले पनि किन भनेर प्रश्न नगर्नुहोला" जस्तै आशयका जानकारीहरू लेखेको देखेको थिएँ।

छोरी-ज्वाइँले "एक पटक अमेरिका घुम्न आउनुहोस्" भनेर हामीलाई घरीघरी अनुरोध गरिरहेका थिए।

"आउँला नि पछि कुनै बेला, अहिल्यै के हतारो छ

र ?" हामीले टारिरहेका थियौँ।

नोकरीको सिलसिलामा ट्रेनिङ, सेमिनार आदिमा भाग लिने सन्दर्भमा मैले केही मुलुकको भ्रमण गरिसकेको हुँदा घुम्नका निम्ति मात्रै भनेर अमेरिका जाने मेरो इच्छा थिएन। अऊ यता आएर अमेरिकी दूतावासले बाह्र-सत्ताइस कुरा गरेर धेरैलाई भिसा नदिएको वर्णन सुन्दा अमेरिका जानेतर्फ सामान्य चाख पनि कहिल्यै जागृत भएन।

"छोरा भेट्न जान्छु" भनेकी आमालाई "तपाईं शाकाहारी हुनुहुँदो रै'छ; अमेरिकामा त मासु मात्रै खान पाइन्छ" भनेर र कसैलाई "ए, आमालाई सधैँ शिवजीको पूजापाठ गर्नुपर्दो रै'छ तर अमेरिकामा त तपाईंका देवता छैनन्; त्यसैले बरु यहीँ बसेर भगवान्को आराधना गर्नुहोस् है" भनेर भिसा नदिएको; छोराछोरी दुवै अमेरिकामा भएका आमाबाबुलाई कुनै कारण नै नजनाई दुई-दुई पटकसम्म अनुत्तीर्ण गरेको; आमा र दाइले निवेदन दिएकामा बूढी आमालाई नदिई तन्नेरी दाइलाई मात्र बहिनी भेट्न जान दिएको जस्ता

अनगिन्ती कथाहरू मैले सुनिसकेको थिएँ। माथिल्लै सरकारी ओहदाका मेरा एक मित्रलाई अमेरिकामा घरजम गरेर बसेकी छोरी भेट्न जान नदिएको पनि थाहा थियो। यस पटक मेरै एक आफन्तले अमेरिका पढ्न जान भिसाको निवेदन दिँदा "यो सर्टिफिकेट कहाँबाट ल्यायौ" भन्ने जस्ता लाञ्छना लाएर रोकेकाले भएको पीडा प्रत्यक्ष अनुभव गरेको थिएँ। हुन त पछि पुनः निवेदन दिएर उनी अहिले अमेरिकामा पढिरहेका छन्, तर ती केही दिन तिनलाई र अनेकौँ कष्ट उठाएर महँगो शुल्क तिरीतिरी छोरा पढाएका तिनका आमाबाबुलाई परेको चिन्ता सम्झँदा नै नरमाइलो लाग्छ।

यस पटक छोरी-ज्वाइँको ज्यादै भावुक आग्रह र परिवारका सबै सदस्यहरूको इच्छाको विचार गर्दै मैले भिसाको निवेदन दिने निधो गरेको थिएँ। तर सोचेको पनि थिएँ– यदि भिसा दिएन भने? आफ्नो पैसा खर्च गरेर आफन्तहरू भेट्छु, त्यहाँ उनीहरूले गरेको विकास हेर्छु भन्दा के कारणले नदिने? हाम्रो बिराम के? के

हामी बदमास हौँ? त्यहाँ अपराध गर्न जान खोजेका हौँ? कसैलाई भिसा नदिएको सुन्दा मेरो मनमा यस्तै तर्कनाहरू उठ्थे। अन्त्यमा, यो नौटङ्की अमेरिकाले आफ्नो बडप्पन देखाउन अनि हामी नेपालीको गरिबीको उपहास गर्न गरेको हो भनेर आफूलाई ढुक्क पार्थें। भिसा नदिएको अवस्थामा मलाई हुन सक्ने ग्लानिबारे सम्झेर पनि मन त्रस्त भइरहन्थ्यो।

"कस्तो भएमा भिसा पाइन्छ?" मैले अमेरिका डुलीवरी आएका साथीहरूसँग पनि सोधपुछ गरेको थिएँ।

प्राय: साथीले भनेका थिए– "यो त्यहाँ गएर बस्दैन, फर्केर आउँछ भन्ने उनीहरूलाई लागे भिसा दिन्छन्, नत्र दिँदैनन्।"

"के-कस्ता कागजात पेस गरे उनीहरूलाई हामी नेपाल फर्कन्छौँ भन्ने विश्वास लाग्छ त?" मैले थप जिज्ञासा राख्दै गएको थिएँ।

"आफ्नो घरजग्गाको मूल्याङ्कन, ब्याङ्कमा भएको

रकमको विवरण र नोकरी गर्दै गरेको सर्टिफिकेट पेस गर्ने नि।" सबैको सुझाव थियो।

हाम्रो घरजग्गाको मूल्याङ्कन रकम अमेरिकी डलरमा हेर्दा कति पो हुन्छ र ? व्यापार गर्नेहरूको त ब्याङ्कमा राम्रै रकम होला रे, तर नोकरी गर्नेहरूको ? त्यसो भए घरजग्गा वा पैसा नभएका गरिब-गुरुबाले आफ्ना छोराछोरी भेट्न अमेरिका जान नपाउने ? म सोच्थेँ– श्रीमती त स्कुलमा पढाउँछिन्, सर्टिफिकेट भइहाल्छ तर मेरो ? म त पाँच महिनाअघि नै जागिरबाट रिटायर भइसकेँ। म फर्केर नेपाल आउँछु भनेर देखाउने आधारै सकियो। अनि अब ?

"होइन, यत्रा साथीहरू छन्। कसैको कम्पनीबाट निजले यहाँ काम गर्दै छ भन्ने एउटा सर्टिफिकेट लिए त भइहाल्छ नि।" एउटाले राम्रै सुझाव दिएको थियो।

छोरी-ज्वाइँसित बेलाबेला हाम्रा कुरा भइरहन्थे। सरसल्लाह पनि हुन्थ्यो। हाम्रो भिसाबारे हामीलाई

भन्दा पनि बढी फिक्री उनीहरूलाई थियो। साँच्चै भन्ने हो भने हाम्रो भिसासँग उनीहरूको भावना गाँसिएको थियो। आमाबालाई कहाँकहाँ घुमाउँला, केके देखाउँला, केके ख्वाउँला भन्ने उनीहरूको कत्रो धोको! हामीले भिसा पाएनौँ भने उनीहरूको आशाउपर ठूलै वज्रपात हुन्छ।

छोरीले सधैँ फोन गर्थिन्– "भिसाको निवेदन दिने काम कहाँसम्म अघि बढ्यो? के-कस्ता कागजातहरू तयार भए? होइन होइन, झूटा कागजात ठ्याम्मै पेस नगर्नुहोला बुबा !" मैले मेरो नोकरी गर्दै गरेको सर्टिफिकेटको कुरो झिक्दा छोरीले सम्झाउँथिन्। "हामीले यताबाट पठाएको स्पोन्सरसिप कागजकै आधारमा तपाईंहरूलाई भिसा दिन्छ।" उनको स्वरमा आत्मविश्वास भरिएको हुन्थ्यो।

इन्टरनेटमा भरेको भिसा फारम, पासपोर्ट र नागरिकताको फोटोकपीसहित अमेरिकी डलर एक सय बराबरको नेपाली रुपैयाँ नबिल ब्याङ्कको भिसा शाखा महाराजगन्जमा बुझाउन जाँदा फारम बुझाउनेको

ताँती देखेर म छक्क परेको थिएँ। अन्तर्वार्ताका दिन पनि त्यस्तै भीड थियो। दुई सय जनाभन्दा बढी नै होलान्, जसमध्ये विद्यार्थीको सङ्ख्या उल्लेख्य थियो। बर्सेनि यतिका नेपाली युवाहरू अमेरिका पढ्न गइरहेका छन्; तीमध्ये यहाँ अथाह सम्पत्ति भएका पनि छन्। खोइ, को फर्केको छ र ? डी.भी. कार्यक्रममा कस्ताकस्ता विद्वान् अनि धनाढ्यले पनि फारम भरेका छन् र चिट्ठा परेपछि सबै थोक चटक्क छोडेर अमेरिका कुदेका छन्। दूतावासका कर्मचारीहरूलाई नेपाली मनोभाव राम्रै थाहा छ। हामीले पेस गर्ने सम्पत्ति अथवा ओहदाका प्रमाणपत्रको के भूमिका होला र ? भिसा लिने क्रममा ममा यस्तै भावहरू पलाएका थिए।

"यहाँ चोर औँलो राख्नुहोस्।" सानो मेसिनतिर औँल्याउँदै अध्यागमन अधिकारीले अह्राए। यसरी नै हाम्रा औँलाको छाप लिइएको थियो काठमाडौँमा भिसाको अन्तर्वार्ता लिनुअघि। त्यसपछि ती गोरी केटीले "अहिले गर्मीमा किन जाने ? कति महिनालाई

जाने? तीन महिनाका लागि मात्रै किन? धेरै अवधिका लागि किन नाइँ?" जस्ता सामान्य प्रश्नहरू सोधेर बडो शिष्टतासाथ मीठो बोलीमा हाँस्दै भनेकी थिइन्– "तपाईंहरूलाई अमेरिका घुमेर आउन भिसा दिएँ, त्यहाँ बस्नलाई होइन नि। आनन्दले घुमफिर गरेर आउनुहोस् है!"

"भुइँमा अङ्कित खुट्टाको चित्रमा टेकेर सीधा उभिनुहोस्। चस्मा खोल्नुहोस् र यता हेर्नुहोस्।" अधिकारीले सामुन्नेको माइक जस्तो क्यामेरातिर देखाउँदै भने। हामी दुवैको फोटो खिचिसकेपछि उनले "छोरी-ज्वाइँ के गर्छन्? कहाँ बस्छन्? कति पैसा ल्याउनुभएको छ?" जस्ता प्रश्न गरेपछि हाम्रा सामु अन्तिम प्रश्न राखे– "कति दिन बस्ने विचार छ?"

मैले स्वर सहज पार्दै भनेँ– "यस्तै चार-पाँच महिना।" अनि श्रीमतीतिर हेरेँ। उनले पनि टाउको हल्लाएर सहमति जनाइन्।

अधिकारीले मुसुक्क हाँस्दै "ओके" भने, अनि पासपोर्टमा

छाप लाएर हामीलाई दिँदै भने– "तपाईंहरूको अमेरिका-बसाइ शुभ होस् ।" अधिकारीलाई धन्यवाद दिँदै हामी सामान सङ्कलन कक्षतिर लाग्यौँ। हिँड्दाहिँड्दै मैले पासपोर्ट हेरेँ। हामीलाई छ महिना बस्ने अनुमति दिइएको रहेछ ।

विद्युतीय सिँढीबाट ओर्लंदा ढाड दुखेझैँ भयो। घडी हेरेँ, एघार बजेको रहेछ । काठमाडौँबाट हिँडेदेखि मैले घडीको समय फेरेको थिइनँ। हिसाब लाएँ, यो नेपालको रातिको समय हो। तेत्तीस घण्टा भइसकेछ हामीले काठमाडौँ छोडेको। झन्डै अठार घण्टा उडिएछ र पन्ध्र घण्टाजति बाटामा कुरिएछ। शरीर नदुखोस् पो किन ? अझ ब्याङ्कक एयरपोर्टमा काटेको पूरै रातको त्यो अनिदो बाह्र घण्टाभन्दा पनि बढीको समय। आह, ठूलै कहर काटेका हौँ त्यहाँ हामी जोईपोइले ! ब्याङ्कक भएर उड्नुपर्दा थाई एयरलाइन्सबाटै उड्नुपर्ने। अरू कुनै उडान नै नाइँ। आफ्नो देशको भएको एउटो नेपाल एयरलाइन्सको अन्तर्राष्ट्रिय उडानको कहिल्यै भरोसै नहुने। उता थाईबाट उड्दा रातभरि

बाह्र घण्टा ट्रान्जिटमा बस्नुपर्ने। कस्तो विडम्बना !

साथीहरूले भनेको एयरपोर्टभित्रै सुत्ने व्यवस्था भएको होटेल बल्लबल्ल खोजेर त निकालेका थियौँ, तर सीमित सिट भएर होला ठाउँ उपलब्ध हुन सकेको थिएन। त्यहाँ चार, छ, आठ घण्टाका हिसाबले सुत्न पाइँदो रहेछ। दर पनि समय अनुसार लाग्दो रहेछ। खर्च भने पाँचतारे होटेल जस्तै। काउन्टरमा बसेकी केटीले अङ्ग्रेजीमै बोलेकी हुन् तर के भनिन् के, पहिले बुझ्नै कठिन भएको थियो। धेरै समयको साङ्केतिक भाषा प्रयोगपछि उनले "चार घण्टापछि मात्र खाली हुन्छ" भनेकी हुन् भन्ने हामीले बुझ्न सकेका थियौँ। हामी दुवै रात कसरी काट्ने होला भन्ने कुरा गर्दै बस्ने ठाउँको खोजीमा एक वर्षअघिदेखि मात्रै सञ्चालन भएको त्यो टनेल आकारको अत्याधुनिक तथा भव्य एयरपोर्टभित्रका झिकिझकाउ पसलहरू हेर्दै हिँडेका थियौँ।

तलमाथि हिँड्दाहिँड्दा हामी लखतरान परिसकेका थियौँ। अब त बाटैमा भए पनि बिसाउनुपर्ला भन्ने सोच्दै थियौँ। त्यसै बेला एउटा कुनाको बरन्डामा

केही सोफाहरू देखेर हामी दुवैले एक-अर्कालाई हेर्दै लामो सास फेरेका थियौँ र हान्निँदै पुगेर एउटामा थचक्क बसेका थियौँ। थकाइले शरीर लोथ भएकाले थप हिँडडुल गर्ने शक्ति थिएन। त्यहीँ देब्रे-दाहिने ढल्किँदै रात बितेको थियो। बिहान छेवैको रेस्टरुममा हातमुख धोएर हामी युनाइटेड एयरलाइन्सको काउन्टर खोज्दै हिँडेका थियौँ। टोक्यो हुँदै अमेरिकाको उडान त्यसै एयरलाइन्सको हवाईजहाजबाट गर्नु थियो।

काउन्टरमा पुगेर बोर्डिङ पास लिने बेला पनि हामीले त्यस्तै भाषागत समस्या भोग्नुपरेको थियो। काठमाडौँबाट उड्दा विमान कम्पनीले हाम्रा सामानहरूमा सोझै सियाटलसम्म पुग्ने गरी बिल्ला लाइदिएको थियो। तर त्यहाँ काउन्टरमा बसेकी महिलाले हामीलाई "गुन्टाहरू कति वटा छन्; कस्ता रङ्गका छन्" भनेर सोध्न थालेकी थिइन्। एकातिर लौ, हाम्रा सामानहरूको बिचल्ली पो हुने हो कि भन्ने त्रास, अर्कातिर यस्तायस्ता छन् भनेर उनलाई बुझाउनुकै सास्ती। कस्तो दिक्क भएका थियौँ हामी! उनले वाकीटकीमा

कोकोसँग हो कुरा गरेर यसो हाँस्दै “ओके” भनेपछि बल्ल ढुक्क भएका थियौँ ।

“ह्यान्डब्यागमा के छ ?” हाम्रो टिकट फर्काउँदै ती महिलाले अर्को प्रश्न राखेकी थिइन् ।

राम्ररी कुरा नबुझेर हामीले झोलाबाट एक-एक गरी झिक्दै सबै सामान देखाएका थियौँ । एउटा मोस्चराइजर, एउटा क्रिमको सिसी अनि मेरो दाह्री काट्ने फोम-साबुनको बट्टातिर औँल्याउँदै तिनले भनेकी थिइन्– “यी लान पाउनुहुन्न ।”

“किन ?” हामी दुवैले एकैसाथ सोधेका थियौँ ।

“सुरक्षाकर्मीले दिँदैनन् ।” उनी आँखा चिम्म गरेर सुस्त स्वरमा बोलेकी थिइन् ।

“यी त हाम्रा दैनिक प्रयोगका सामान हुन्; यिनमा सुरक्षासम्बन्धी के छन् र ?” अल्छी मानेझैँ बोल्ने ती खिरिली थाई महिलाका कुरा चित्त नबुझेर मेरी श्रीमतीले अलि ठूलै स्वर पारेर सोधेकी थिइन् । हुन पनि हामीलाई काठमाडौँमा सुरक्षा जाँचका बेला ती

सामानबारे निषेध गरिएको थिएन ।

"लानुहुन्छ भने छुट्टै, यसमा हालेर लानुहोस्, तर मलाई थाहा छ उनीहरूले दिँदैनन् ।" ती महिलाले प्लास्टिकको पारदर्शी झोला दिँदै भनेकी थिइन् ।

हामी बोर्डिङ पास लिएर खिन्न मनले त्यहाँबाट हिँडेका थियौँ । तरल पदार्थ ह्यान्डब्यागमा बोक्न दिँदैन भन्ने सुनेका थियौँ र सामान पोको पार्ने बेला सतर्क पनि थियौँ । तर के-कसरी हो ती सामग्री बाहिरै छुटेछन् । हिँड्ने हतारो भइसकेको थियो । यी त क्रिम र साबुन हुन्, यात्रामा चाहिने वस्तुहरू, पूरै तरल पदार्थ पनि होइनन्, लान किन नदेला भन्ने सोचेर हामीले हातैमा बोकेका थियौँ ।

सुरक्षा कक्षमा जाँचका बेला ती सामग्री लान नदिएर हामीलाई रोकिएको थियो । त्यहाँ पनि हामीले आफ्नो लाटो तर्क राखेका थियौँ । तर थाई सुरक्षाकर्मी के मान्थे! उनीहरूको भनाइ अनुसार सय मिलिलिटरसम्मका मात्र आफूसँगै लान मिल्ने रहेछ । हाम्रा भने एक सय बीस मिलिलिटर र केही बढी परिमाणका पनि थिए ।

फलतः हामी बोल्नै सकेका थिएनौँ। एउटी मोटी सुरक्षाकर्मीले हाम्रा ती अभागी प्रसाधनहरू गुटुमुटु पारेकी थिई र आफ्ना सहकर्मीहरूतिर फर्कीफर्की हेर्दै-हाँस्दै छेउको ढ्वाङमा लगेर फालिदिएकी थिई। हामी नरमाइलो मान्दै वेटिङ रुमतिर लागेका थियौँ।

यत्तिकैमा पनि ब्याङ्कमा हाम्रो हैरानी कहाँ सकिएको थियो र ? तल्लो तलामा जहाज चढ्नुअघि अर्को सुरक्षा जाँच रहेछ। त्यहाँ हामीलाई धेरै बेर एकातिर बस्न लगाइएको थियो र अरू धेरै यात्रुलाई पठाइसकेपछि वाकीटकीमा लामै कुरा गरेर बल्लबल्ल जहाजमा जान दिइएको थियो। ब्याङ्कमा जति जाँच-पडताल यात्राभरि अन्यत्र कतै भएको थिएन र हैरानी तथा कष्ट पनि बढी भोग्नुपरेको थियो। रातभरिको अनिद्राले शरीर त त्यहीँ हवाईजहाज चढ्दै गलिसकेको थियो। त्यसपछि दुई घण्टा नारिता एयरपोर्टको कुराइबाहेक सियाटलसम्मको झन्डै पन्ध्र घण्टाको हवाईयात्रा। शरीर नदुखोस् पो किन ?

सामान सङ्कलन कक्षमा पुग्दा एक ठाउँमा हाम्रो

उडान नम्बर लेखेको देखियो र हामी रोकियौँ। हाम्रा गुन्टाहरू त्यहीँ आउने रहेछन्। मैले काँधको झोला तल राखेर बस्ने ठाउँ कतै छ कि भनेर यताउति हेरेँ। श्रीमतीले मेरो आशय बुझेर "खुपै थाकियो है" भनिन्।

"हो त" भन्दै म ट्रली लिन गएँ।

त्यहाँ अघि अध्यागमन कक्षमा देखिएको भारतीय केटो पनि रहेछ। मलाई देखेपछि उसले आफूले झिकेको गाडी मतिर बढायो। मैले "तपाईं लिनुहोस्, म झिकिहाल्छु नि" भन्दा पनि ऊ मानेन।

"लिनुस् न अङ्कल, म अर्को झिक्छु।" उसले अर्को तान्दै भन्यो। केटो मिलनसार रहेछ। हामी कुरा गर्दै सामान कुर्न बस्यौँ।

मेरो अडकल सही रहेछ। ऊ सफ्टवेयर इन्जिनियर रहेछ। दुई वर्ष भएछ उसले यहाँको माइक्रोसफ्ट कम्पनीमा काम गरेको। हैदराबादको रहेछ र यस पटक छुट्टीमा घर जाँदा त्यहींकी केटी बिहे गरेर

ल्याएको रहेछ । उसबाट माइक्रोसफ्ट कम्पनीबारे धेरै कुराको जानकारी पाएँ । मेरो जिज्ञासामा उत्साहित भएर उसले झोलाबाट कम्पनीको परिचय पुस्तिका झिकेर पनि देखायो ।

सियाटलनजिकै रेडमन्ड भन्ने सहरमा माइक्रोसफ्टको मुख्यालय रहेछ । त्यहाँ निकै ठूलो क्षेत्रफलमा रहेको रेडमन्ड माइक्रोसफ्ट क्याम्पसमा तीस हजारभन्दा पनि बढीले काम गर्दा रहेछन् । त्यो कम्पनी बिल गेट्स र पउल एलेनले संयुक्त रूपमा सन् १९७५ तिर अमेरिकाको न्यु मेक्सिकोमा स्थापना गरेका रहेछन् । अहिले संसारको सबैभन्दा ठूलो मानिने त्यो कम्प्युटर कम्पनी एक सय बीस देशमा फैलिएको रहेछ र त्यसमा कुल उनासी हजार कर्मचारी कार्यरत रहेछन् । माइक्रोसफ्ट विन्डोज अपरेटिङ सिस्टम र माइक्रोसफ्ट अफिस त्यसका प्रमुख उत्पादनहरू रहेछन् । ती सफ्टवेयर कार्यक्रमहरूबाटै संसारभरिका सबैजसो कम्प्युटर चलिरहेका छन् रे । कम्प्युटर सफ्टवेयरका अलावा त्यस कम्पनीले हार्डवेयर र भिडियो गेम उत्पादन,

पुस्तक प्रकाशन र अनुसन्धान तथा विकासको काम पनि गर्दो रहेछ । त्यस कम्पनीको वार्षिक आम्दानी अहिले एकाउन्न अर्ब अमेरिकी डलरजति र खुद नाफा चौध अर्बभन्दा बढी रहेछ । त्यसका अध्यक्ष बिल गेट्स संसारका सबैभन्दा धनी मानिसमा गनिन्छन् रे ।

ऊसँग कुरा गर्दागर्दै हाम्रा सामान आइपुगे । हामीले आफ्ना सुटकेस र झोलाहरू ट्रलीमा हाल्यौँ र ती युवा जोडीसँग बिदा माग्दै बाहिर निस्कन हिँड्यौँ ।

निकास लेखिएको गेट आइपुग्न लागेको देखेर श्रीमतीले बिस्तारै आफ्नो जिज्ञासा राखिन्– “सामान जाँच गर्दैन कि क्या हो ?” छोरीको घर भेट्न जाँदा साथमा लगेको कोसेली पुऱ्याउनु हाम्रा निम्ति भिसापछिको अर्को महत्त्वपूर्ण कुरो थियो । सकिएन भने ? यो चिन्ताले हामीलाई यता उड्नुभन्दा धेरै अघिदेखि पिरोलिरहेको थियो ।

अमेरिका अथवा विदेशमा जहाँसुकै बस्दा होस्, त्यहाँ उपलब्ध जति नै मीठो खान्की खाए पनि आफूले

आफ्नो घरमा सानैदेखि खाँदै आएका परिकारहरूको सम्झना र तलतल मान्छेलाई भइरहन्छ। यो मानवीय स्वभाव हो र जोसुकैले पनि अनुभव गर्छ। गुन्द्रुक, सिन्की, मस्यौरा, तामा, सेलरोटी, विभिन्न थरीका अचार आदि यस्ता परिकार हुन् जसको स्वाद प्रत्येक नेपालीको जिब्रोमै झुन्डिएको छ र खाने इच्छा बेलाबेला भइरहन्छ। छोराछोरी भेट्न अमेरिका जाने सबैजसोले यिनै कोसेली लिएर गएको सुन्थेँ। सोधपुछका क्रममा छोरीले पनि मिले ल्याउनुहोला भनेकी थिइन्।

पहिलेपहिले अमेरिका-युरोप पढ्न गएकाहरूले कुरा गर्दा उनीहरूका सामानमा गुन्द्रुक देखेर त्यहाँका एयरपोर्ट कस्टमका कर्मचारीहरूले गाँजा वा त्यस्तै कुनै लागू औषध हो भनेर सशङ्कित भई उनीहरूलाई रोकेको र प्रयोगशालामा परीक्षण गरेर खाद्य वस्तु भनी किटान गरेपछि मात्र छोडेको भन्ने गरेको पनि सुन्थेँ। तिनीहरूको भनाइमा कति सत्यता थियो, त्यो त म जान्दिनँ तर हिजोआज दिनहुँजसो थुप्रै नेपाली ती देशमा आवतजावत गरिरहेका छन्, कसैले पनि त्यस्तो

कथा भनेको सुन्दिनँ। हामीले पनि अचार, सेलरोटी, गुन्द्रुक, मस्यौरा र केही मरमसला लाने विचार गरेर अमेरिका गएका साथीभाइहरूसँग समस्या पर्ने-नपर्नेबारे बुझेका थियौँ।

कसैले "हामी दुई चोटि गइसक्यौँ, कहिल्यै चेक गरेन" भनेका थिए। कसैले चाहिँ "यस पाला छोरोको बिहे त्यहीँ गर्नुपरेकाले घिउ, अचार, सेलरोटी, अनरसा, तामा, गुन्द्रुक, मस्यौरा, जिम्मु आदि जति सकिन्छ सबै लगेका थियौँ, केही भएन; राम्ररी नपोखिने गरी प्याक गर्नुपर्छ, लगे हुन्छ" भन्ने सल्लाह पनि दिएका थिए। एक मित्रले त "त्यहाँ कस्टम कर्मचारीमा सरदारजीहरू पनि हुन्छन्; एसियालीहरू आउँदा केके ल्याउँछन् उनीहरूलाई राम्रै थाहा छ; लगे हुन्छ, केही हुँदैन" सम्म भनेर हौस्याएका थिए।

"आऽ, दिएछ भने पुऱ्याउँला, नदिए त्यहीँ अमेरिकामा फालिदिउँला नि" भन्दै हामी दुई लागेका थियौँ अमेरिका लैजाने सरसामान पकाउने र पोको पार्ने तयारीमा। सुख्खा प्रकृतिका सामग्रीका निम्ति त

समस्या थिएन, तर श्रीमतीले बनाएका आँप, अमिलो र तामाका अचारहरू कसरी प्याक गर्ने? चुहियो भने त सर्वनाश हुन्छ। कपडा र अन्य सबै सरसामान बरबादै हुन्छन्। सामानहरू हवाईजहाजमा कताकता कसरी पछार्ने हुन्? सिसी थिच्चियो अथवा फुट्यो भने ? सबै कुरो तह लाउनुअघि एकएक गरी विचार गरेका थियौँ।

मैले घरमा भएका प्लास्टिकका पारदर्शी बोतलहरूमा पानी भर्दै बिर्को लाएर चुहुने-नचुहुने विचार गर्न उल्टो पारेर दिनभरि राखेको थिएँ। नचुहेका बोतलहरूमा अचारहरू भरेर बिर्को कसेको थिएँ। केही गरी चुहिइहाले अर्थोक नबिग्रियोस् भनेर प्रत्येकलाई प्लास्टिक झोलामा हालेको थिएँ र पाहुना आएका भतिजा राजेन्द्रको सहयोगमा झोलाको मुख आगोले डढाएर बन्द गरेको थिएँ। यसरी बहुतै सोच र मिहिनेत खर्चेर तयार पारेको छोरीको कोसेली सातसमुद्रपारि यहाँ उनीनजिकै आइपुगेको थियो। काठमाडौँमा मैले कुरा गरेका साथीहरूमध्ये "हाम्रो सामान खोल्न लगाएर

अचारको सिसी देखाउँदै 'यो के हो' भनेर सोध्यो, अनि हामीले 'अचार हो' भनेपछि सजिलै छोडिदियो" भन्ने कोही पनि भेटेको थिइनँ। त्यसैले हाम्रो सामान खोल्न लाएर सोध्यो भने ? यस्तो डर मलाई पनि भइरहेको थियो।

निकासनेर एउटा कर्मचारीले यात्रुहरूलाई हातको इसाराले बाटो देखाउँदै थियो। हामीभन्दा अगाडि रहेकालाई बाहिरतिर जान दिएकाले हामी पनि त्यतै जान लागेका थियौँ, तर उसले हामीलाई देब्रेतिर जान इसारा गर्‍यो। मैले त्यतातिर यसो हेरेँ। त्यहाँ पाकिस्तानी जस्ता देखिने एक सज्जनको गुन्टा जाँच गरिँदै थियो। ती वृद्धका सामानहरू तल फलामका र्‍याकमा छरपस्ट थिए। श्रीमतीले मतिर पुलुक्क हेरिन्। उनको अनुहारमा पनि चिन्ता प्रस्ट झल्कियो। हामी भारी मनले कस्टम कक्षतिर बढ्यौँ।

त्यहाँ बसेकी मोटी महिला कर्मचारीले अह्राएबमोजिम मैले एक-एक गरी हाम्रा सुटकेस र झोलाहरू एक्स-रे मेसिननेर राख्दै गएँ। उता रहेको अग्लो गोरो

कर्मचारीले बडो अदबसाथ हामीलाई त्यही चटनीहरू भएको सुटकेस खोल्न लगायो। लौ फसाद, त्यत्रो दुःख गरेर ल्याएका अचारहरू अब यहाँ ढोकैमा पुगेर फाल्नुपर्ने हो कि क्या हो !

मतिर पुलुक्क हेर्दै अन्योलपूर्ण अवस्थामा श्रीमतीले ताल्चा खोलिन्।

सेतो पन्जा लाएको त्यस युवकले हँसिलो अनुहारसहित हल्का हातले सुटकेसको चेन खोल्यो र हिफाजतसाथ ती बोतलहरू झिकेर ओल्टाईपल्टाई हेरेपछि "के हो" भनेझैँ गरेर हामीतिर हेर्‍यो।

छोरीले फोनमा दिएको सल्लाह सम्झेर उनले हत्त र पत्त भनिन्– "घरमा बनाएका खानेकुरा हुन्।"

उसले आँपको अचार देखाएर सोध्यो– "तरकारी ?"

हामी दुवैले छिटछिटो सहमतिमा टाउको हल्लायौँ। उसले सुटकेसका अरू पोकाहरू पनि हातले छाम्यो। हामी अलमल्लको अवस्थामा एक-अर्कातर्फ हेर्दै थियौँ। उसले एक पटक सरर हामीतिर हेर्‍यो अनि झिकेका

सामानहरू सुटकेसभित्र मिलाएर राख्यो र चेन लगायो। हामी अन्योलमै थियौँ। उसले दुवै हातले सुटकेस समातेर यसो अगाडि धकेल्यो र मुसुक्क हाँस्दै “जाऊ” भनेझैँ इसारा गऱ्यो। हामीले सन्तोषको लामो सास फेऱ्यौँ र छिटछिटो सामान ट्रलीमा राखेर उसलाई धन्यवाद दिँदै हिँड्यौँ। अचारहरू चुहिएका रहेनछन्; देखेर मन हलौँ भयो।

निकास लेखिएको ढोकाबाट निस्केपछि बाहिर पुगियो। यहाँ त छोरी-ज्वाइँ भेटिन्छन् होला भन्ने लागेर यताउति हेर्दै थियौँ, छेवैको एक कर्मचारीले हामीलाई सामान त्यहीँ छोड्न लगायो। हामी अलमल्ल परेको देखेर उसले हाम्रा गुन्टाहरू उठाएर गुड्दै गरेका विद्युतीय पातामा राख्दै विनम्र स्वरमा भन्यो– “तलको काउन्टरमा गएर लिनुहोला; अहिले कृपया उताबाट निस्कनुहोस्।”

त्यहाँका कर्मचारीहरूको अदब र शिष्टतापूर्ण व्यवहार देखेर म आश्चर्यचकित भइरहेको थिएँ। व्यवहार मात्र होइन, त्यहाँ मैले देखेका सबै कर्मचारीहरूको

लवाइ, हाउभाउ र चालढाल सम्पूर्ण एकैनासको थियो। कुन ठूलो वा सानो ओहदाको हो छुट्ट्याउन सकिरहेको थिइनँ। अहिले भेटिएको कर्मचारीको पद हाम्रा एयरपोर्टहरूमा काम गर्ने लोडरसरह तल्लै तहको होला, तर हेर्दा ऊ अन्यभन्दा केहीमा पनि फरक देखिँदैनथ्यो। न उसमा हामीकहाँ त्यस स्तरका कामदारमा देखिनेझैं कुनै धक नै थियो। अमेरिकामा 'श्रमको सम्मान छ' भनेको सुन्थेँ, यस्तै होला। यी व्यवहारजन्य कुराहरूले पनि महत्त्व राख्छन् होला कुनै पनि देशको उन्नतिमा। यस्तैयस्तै सोच्दै म उनीसँगसँगै हिँडेँ त्यस लोडरले देखाएको दिशातिर।

त्यहाँ भित्रभित्रै हिँड्ने रेल चढ्नुपर्दो रहेछ। एकै छिनमा रेलले हामीलाई तुफानसाथ घुइँक्यायो। केही समयपछि हामी बाहिरको सामान सङ्कलन कक्षमा आइपुग्यौँ। त्यहाँ पनि हाम्रो उडान नम्बर लेखेको देख्यौँ र अडियौँ। एकै छिनपछि हाम्रा सामान आइपुगे। म छेउमा राखेको ट्र्ली लिन गएँ। लहरै राखिएका ती गाडीहरूमध्ये एउटा तानेँ तर आएन।

जोड लाएर तानेँ, फेरि पनि आएन। के भयो भनेर यताउति हेरेँ। ए, ती निःशुल्क रहेनछन्। झिक्नुपरे छेवैको मेसिनमा दुई डलर हाल्नुपर्ने रहेछ। हामीसँग काठमाडौँमा ब्याङ्कले साटिदिएका दससम्मका नोट थिए, चानचुन थिएनन्। एकै छिन किङ्कर्तव्यविमूढ भएँ। तर हाम्रा सबै सुटकेसहरूमा पाङ्ग्रा भएकाले गुडाउँदै हामी बाहिर निस्क्यौँ।

एयरपोर्टको घडीमा बिहानको एघार बजेको थियो। वासिङ्टन राज्यको सुन्दर सहर सियाटलको मौसम राम्रो थियो। आकाश स्वच्छ थियो र उज्यालो घाम लागेको थियो। गर्मीयाम भए पनि तापक्रम ठिक्कको थियो। हामीले विमानस्थलबाहिरको बरन्डामा पुगेर सामान बिसायौँ र छोरी-ज्वाइँलाई यताउति हेर्न थाल्यौँ। "यतै भेटिन्छौँ भनेका हुन्, कता होलान्" भन्दै थियौँ; रचनाले "बुबा-मम्मी" भन्दै पछाडिबाट आएर अँगालो हालिन्। छेवैमा उभिएर रवि ज्वाइँसाहेबले हँसिलो अनुहारमा नमस्ते गर्दै "अमेरिकामा स्वागत छ" भन्दै हुनुहुन्थ्यो।

# स्वप्निल संसारमा प्रवेश

सामान्य भलाकुसारीपछि छोरी-ज्वाइँले हामीलाई फेरि सामानसहितै सियाटल विमानस्थलभित्र छिराए। भित्रको लिफ्टबाट हामी सात तलामाथि पुग्यौँ। त्यहाँ तलैतलामा गाडी राख्ने व्यवस्था गरिएको रहेछ। छोरी-ज्वाइँले त्यहीँ पार्किङको ठाउँ खोज्दाखोज्दै समय लागेकाले हामीलाई लिन आउन केही ढिला भएको रहेछ। उनीहरूले हामीलाई छुनै नदिई हाम्रा सामानहरू गाडीमा राख्न थाले। म भने यताउति हेर्दै सोच्न थालेँ– पच्चीस वर्षजतिअघिका कुरा।

मेरा एक मित्रले अमेरिकाबाट उच्च शिक्षा सकेर फर्केपछि आफ्ना अनुभव सुनाएका थिए– "अमेरिकामा त छतमाथि गाडी पार्क गरिन्छ।" त्यस बेला हामी सबै साथीहरू छक्क परेका थियौँ। यता आएर काठमाडौँमा पार्किङको समस्या बढ्दै गएको देख्दा म

घरीघरी ती साथीले भनेको सम्झन्थेँ। अहिले प्रत्यक्ष देख्दै छु तलैपिच्छे व्यवस्थित रूपले थन्क्याइएका मोटरगाडीहरू।

सुइँसुइँ फन्का मार्दै हाम्रो गाडी सात तलाबाट तल आइपुग्यो। मैले ग्यालबाटै यसो माथि चियाएँ– आठ-नौतले, लम्बाइ-चौडाइ पनि धेरै भएको ठूलो कङ्क्रिट संरचना। हजारौँ सवारी राख्न सकिन्छ होला। त्यहाँ तलैपिच्छे ठाउँठाउँमा सङ्केतचिह्न देखेको थिएँ र त्यसबारे सोध्दा छोरीले जानकारी दिइन्– "आफूले यात्रा गर्ने एयरलाइन्सको चिह्न भएको ठाउँमा गाडी राखेर काँडले देखाएतिर लाग्ने हो भने सहजै त्यसको काउन्टरमा पुगिन्छ। यहाँ एकघण्टे, तीनघण्टे, दिनभरिको अथवा एक दिनभन्दा पनि बढी, सबै प्रकारका पार्किङका निम्ति अलगअलग स्थानको व्यवस्था छ। त्यसका निम्ति पनि सङ्केतचिह्न हेर्नुपर्छ।"

छोरीले भन्दै गइन्– "हामी लस एन्जेलस जाँदा हाम्रो गाडी चार दिनका लागि यहीँ राखेका थियौँ। अँ, रेट पनि त्यसै अनुसार फरकफरक छ। यहाँ

पस्दा टिकट नलिई र निस्कँदा रकम नतिरी तगारो खुल्दैन; सबै स्वचालित छन् ।"

"सियाटल कफीका निम्ति प्रसिद्ध छ । पहिले यहाँको तात्तातो कफीको आनन्द लिऊँ है !" ज्वाइँसाहेबले प्रस्ताव राख्नुभयो । सबैले सहमति जनाएपछि उहाँले गाडी डाउन-टाउन भनिने बजार क्षेत्रतिर मोड्नुभयो ।

हुन त ओर्लनुभन्दा केहीपहिले विमानमा हामीलाई कफी दिइएको थियो । तर त्यसको स्वाद हामी दुवैलाई ठ्याम्मै मन परेको थिएन । चिसो पनि थियो । तातो खान मन लागेर उनले "तातो ल्याइदिन भनौँ है" भनेर मलाई सोधेकी पनि थिइन् ।

त्यस बेला मैले नै उनलाई रोकेको थिएँ– "भैगयो, ओर्लने बेला यिनीहरूलाई के दुःख दिने ! बाटामा खाउँला नि ।"

असलमा मलाई त्यस विमानका हजुरआमासरहका सेविकाहरूलाई अह्राउन मन लागेको थिएन । हुन त उनीहरू फुर्तिला र काममा दक्ष देखिन्थे तथापि मेरो

पारम्परिक सोचले हो कि, उनीहरूले खानेकुरा ल्याएको र जुठा भाँडा उठाएको देखेर मलाई टीठ लागेको थियो। सोचेको थिएँ– नातिनातिना खेलाउने उमेरमा, हरे! ब्याङ्ककदेखि जापानसम्मको उडान पनि हामीले त्यही कम्पनीकै विमानमा गरेका थियौँ र त्यहाँ पनि छिप्पिएका आइमाईहरूले खानेकुरा ल्याएका थिए। यसअघिसम्म मैले चढेका कुनै पनि विमानमा त्यति धेरै उमेरका परिचारिकाहरू देखेको थिइनँ। अमेरिकी विमानले त्यस्ता बूढी सेविकाहरू किन राखेको होला !

"कस्तो जालो बनाएको रै'छ सडकैसडकको !" अकासे मार्गहरूको सञ्जाल देखेर श्रीमतीले भनिन्।

मैले त्यस प्रकारका भुइँ माथिमाथि कुद्ने बाटाहरू पहिलो पटक बाइस-तेइस वर्षअघि जापानमा देखेको थिएँ। त्यस बेला मैले राखेको जिज्ञासामा मेरा मार्गदर्शकले इसारामिश्रित अङ्ग्रेजीमा भनेका थिए– "यो नभएको भए टोक्योका व्यस्त सडकमा तपाईंलाई हामीले यति सहजै गाडीमा कसरी घुमाउन सक्थ्यौँ

होला र सर !”

काठमाडौँका बाटाहरूमा पनि गाडीको चाप बढी भएर हिजोआज कतै जानुपरे घण्टौँ लाग्ने हुन थालेको छ । अमेरिकाबाट फर्कंदा ब्याङ्क पनि घुम्ने विचारले यता आउनुअघि बाँसबारीनेर रहेको थाई राजदूतावासमा भिसाको निवेदन दिन जान हामी दुई जना ट्याक्सी चढेका थियौँ । कुपन्डोलबाट आधा घण्टाभन्दा कसै बढी नलाग्ने दस किलोमिटर मात्र टाढा रहेको दूतावास पुग्न गाडीको घुइँचोका कारण हामीलाई दुई घण्टा लागेको थियो । त्यस बेला मलाई अनाहकमा बढी ट्याक्सीभाडा तिर्नुपरेर दुःख लागेको त थियो नै, झन् ढिलाइका कारण लन्च समय परेर बेफ्वाँकमा थप दुई घण्टा कुर्नुपरेकामा हुनसम्मको विरक्ति अनुभव भएको थियो । कलङ्की र चाबहिलमा हुने जामको त कुरा गरी साध्यै छैन । त्यसैले हिजोआज धेरैले मोटर थन्काएर मोटरसाइकल चलाउन थालेका छन् । साँघुरा बाटाहरूमा देखिने सवारी समस्या हल गर्न अब काठमाडौँमा पनि अकासे बाटाहरू निर्माण गर्न नितान्त

आवश्यक भइसकेको छ ।

बजार क्षेत्र आउन थालेछ क्यार, ठूलठूला गगनचुम्बी भवनहरू देखिए । यहाँ जहाँ पायो त्यहीं गाडी रोक्न वा राख्न पाइँदो रहेनछ । हामीलाई एक ठाउँमा ओर्लन लाएर ज्वाइँसाहेब गाडी पार्क गर्न जानुभयो । छोरीले हामीलाई त्यस ठाउँको सामान्य परिचय दिँदै यताउति देखाउँदै लगिन् । अग्लाअग्ला घर, फराकिला सडक, चाक्ला पेटीहरू, घुइँकिँदै गरेका चिल्ला गाडीहरूका ताँती । एक ठाउँ उभिएर मैले चारैतिर हेरेँ– मनै लोभाउने सफा-सुन्दर परिवेश ।

एउटा घरतिर औँल्याउँदै छोरीले भनिन्– “यो कोलम्बिया सेन्टर हो । यहाँको सबैभन्दा अग्लो घर । यसमा छयहत्तर वटा तला छन् ।”

मैले त्यो आकाशसम्मै ठडिएको विशाल घर देखेर सम्झेँ– उहिल्यै एउटो नेपाली कलकत्तामा टोपी खस्ने अग्लाअग्ला भवनहरू देखेर जिल्लिएको थियो रे । त्यसै बेला ऊ एउटा फटाहाबाट ठगिएको पनि थियो

रे। मैले त्यसैसँग सम्बन्धित चुट्किला पनि सम्झैं, अनि सम्झैं– त्यो चुट्किलाको चर्चा गरेर किशोरवयका हामी कति रमाइलो मान्थ्यौं! आह, कति अबोध थियौं हामी त्यति बेला! अमेरिकाको बाटोछेउ उभिएर चारैतिर आँखा डुलाउँदा म पनि त अहिले त्यो कलकत्ता गएको बिचरो जस्तै जिल्लाराम परेको छु।

ज्वाइँसाहेब आएपछि हामी नजिकै रहेको स्टारबक्समा पस्यौं। लाट्टे, कप्पाचिनो, क्यारामेल, एस्प्रेसो, मोच्चा– थरीथरीका, फरकफरक दामका कफी छन्। कुन खानुहुन्छ? अर्डर गर्नुहोस् र पर्खनुहोस् आफ्नो पालो। त्यहाँ कफी खाने मान्छेको भीड देखेर हामी दुवै आश्चर्यचकित भइरहेका थियौं।

"सियाटलका मानिसहरू कफी धेरै मन पराउँछन्।" हामीलाई खासखुस गरेको देखेर ज्वाइँसाहेबले भन्नुभयो– "त्यसैले कफीको खपत यहाँ अन्यत्रको भन्दा बढी छ।" उहाँले दिएको जानकारी अनुसार सन् १९७१ मा सियाटलको एउटा सानो पसलबाट सुरु भएको

स्टारबक्स अमेरिकाको सबैभन्दा ठूलो कफी कम्पनी भइसकेको छ। चालीस देशमा फैलिएका छन् त्यसका शाखाहरू। अमेरिकामा जता खोजे पनि पाइन्छ स्टारबक्स कफी। छ हजारभन्दा पनि बढी ठाउँमा त्यसका पसल छन् रे। सियाटलमा रहेको त्यसको बीस लाख वर्गफिट क्षेत्रफलको मुख्यालय अमेरिकाभरिकै ठूला भवनहरूमध्ये एक मानिन्छ। यहाँका सियाटल्स बेस्ट कफी र टुल्लिज कफी पनि अमेरिकाका स्थापित कफी कम्पनीहरूमध्ये पर्दछन्।

हामीले तातो कफीसँगै सियाटलसम्बन्धी जानकारीको आनन्द पनि लिइरहेका थियौँ। त्यति मात्रै होइन, यो क्षेत्र कम्प्युटर र हवाईजहाजका निम्ति पनि प्रसिद्ध रहेछ। माइक्रोसफ्ट, अमाजान डट कम, रियल नेटवर्क्स जस्ता आई.टी. कम्पनीहरूका कारोबार यहींबाट सञ्चालन हुँदा रहेछन्। सिकागो सर्नुअघि सन् २००१ सम्म बोइङको मुख्यालय यहीं थियो। अहिले पनि बोइङ-७३७ जहाजको जडान र परीक्षण उडान यतै गरिन्छ रे। यो सहर ग्रन्ज रक सङ्गीतको जन्मथलोका

रूपमा पनि चिनिन्छ। यहाँको सियाटल सिम्फोनी अर्केस्ट्रा विश्वका धेरै चर्चित अर्केस्ट्राहरूमध्ये एक हो रे। सफ्टवेयर इन्जिनियर भएर पाँच-छ वर्षदेखि यहाँ काम गरिरहेकाले पनि होला, ज्वाइँसाहेबलाई यताबारे धेरै जानकारी भएको। शिक्षामा पनि यो क्षेत्र कहलिएको छ रे। हालैको एक सर्वेक्षण अनुसार सियाटलका बासिन्दा अन्य अमेरिकी सहरका भन्दा बढी शिक्षित छन्। छ लाख हाराहारीको जनसङ्ख्या भएको अमेरिकाको यो चौबीसौँ ठूलो सहरका झन्डै आधाजति मानिस स्नातक छन् रे।

एक ठाउँमा उहाँले हामीलाई समुद्रमा हिँड्दै गरेका जहाजहरू देखाउनुभयो। प्रशान्त महासागरको जलाशयको ठूलै भाग यस प्रदेशभित्र पसेको रहेछ र त्यसलाई पगेट साउन्ड भनिँदो रहेछ। "पोहोर साल क्यानाडाबाट होला, यहाँ एउटा बडेमानको जहाज आएको देखेकी थिएँ।" छोरीले अलि उत्तेजित स्वरमा भनिन्– "कत्रो ठूलो थियो भने म त हेरेको हेऱ्यै भएँ।"

"यहाँको बन्दरगाह निकै पुरानो मानिन्छ।" ज्वाइँसाहेबले

थप्नुभयो– "अलास्का र क्यानाडासँगको धेरैजसो व्यापार यहीँबाट हुन्छ ।"

हाम्रो गाडी ओलम्पियातर्फ जाने सडकमा साठी माइल प्रतिघण्टाको वेगमा कुद्न थाल्यो । अमेरिकामा अझै पनि ब्रिटिस पद्धतिका मापन एकाइहरू पाउन्ड, फुट, ग्यालेन, फारेनहाइट आदि प्रयोग गरिँदा रहेछन् । संसारका प्राय: देशले सरल प्रकारको मेट्रिक पद्धति अपनाइसकेका बेला अमेरिका जस्तो विकसित देशले पुरानै तवरले नापजोख गरेको किन होला ! गाडीको माइल मिटर देखेर अमेरिकी हवाईजहाजमा बूढी परिचारिका देखेझैँ जिल्लिएँ म ।

हामी गइरहेको फराकिलो बाटामा लहरै पाँच गाडी कुद्न सक्थे । दायाँबायाँ सबैतिर विभिन्न ढाँचाका कार, जिप, ट्रकहरू समानान्तर वेगमा गुडिरहेका थिए । फर्कने बाटो देब्रेतिर देखिएको थियो । त्यसमा पनि उत्तिकै लहर थिए र त्यत्तिकै ताँती थिए गाडीहरूका । कहिले यसो उकालो परेको ठाउँबाट हेर्दा टी.भी. मा देखाइने प्रतियोगितामा कुदेझैँ देखिन्थे

गाडीहरू। कतै धूवाँ थिएन, धूलो थिएन, न कतै हर्नको कर्कश आवाज नै सुनिन्थ्यो। परिवेश परपरसम्म सफा देखिन्थ्यो। आकाश पनि स्वच्छ थियो।

"यहाँको त म आकाश पनि सफा देख्दिनँ। सधैँ केको हो आवरण लागे जस्तो। धूवाँ उत्तिकै, धूलो उत्तिकै, बाटोभरि डङ्गुर-डङ्गुर फोहोर। म त आत्तिन्छु तिमीहरूको काठमाडौँ आएपछि।" अमेरिकाको स्वच्छ वातावरण देखेर मैले म्याग्दीबाट मुस्ताङ जाने बाटामा होटेल गरी बसेको एउटा साथीले भनेको सम्झेँ।

"तँ आइज न मकहाँ, क्या आनन्द लाग्छ बसेर। तैँले प्रकृतिको वास्तविक आनन्द लिन सक्छस्। त्यसै बस्छन् र कुइरेहरू त्यस्तो अनकन्टारमा ?" उसले मलाई एक पटकको भेटमा भनेको थियो।

ऊ साँच्चिकै धेरै बस्दैनथ्यो काठमाडौँ आएपछि। छिटछिटो काम सकेर फर्किहाल्थ्यो। कहिलेकाहीँ मोटरसाइकलमा अफिस गएर फर्कंदा मेरो कपडा

मात्रै होइन अनुहारै कालो भएको हुन्थ्यो। काठमाडौँमा जतातत्तै देखिने फोहोरको चर्चा हुँदा एउटा साथीले "जर्मन आएर उठाइहाल्छ नि" भनेर हाँसो गरेको पनि सम्झेँ। साँच्चै, महानगरपालिका जस्तो एउटा सम्पन्न र सशक्त निकायले जिम्मा लिँदा पनि विदेशी पर्यटकहरू हिँड्ने व्यस्त ठमेलको मूल सडकमा फोहोरको डङ्गुर दिनको दस-एघार बजेसम्मै उठाइएको हुँदैन, अन्यत्रको त के कुरा! किन हो, बुझ्दिनँ!

"यहाँका मोटरले धूवाँ फाल्दैनन्, धूलो पनि हुन्न र लुगा पनि मैलो भइहाल्दैन बुबा। जतातत्तै नियमित सरसफाइ भइरहन्छ। हाई वेहरूमा पनि टोली खटिएका हुन्छन्। यहाँका मान्छेहरू सफाइप्रति कति सजग छन् त्यो त तपाईं आफैँले देख्नुहुन्छ, बस्दै जाँदा।" मैले यी निर्जन सडकवरपर फोहोर नदेखेर सोधेपछि छोरीले भनिन्।

हाम्रा 'ड्राइभर' ले बेलाबेला देब्रेतिरको प्रायश: खाली देखिने लहरतिर लगेर गाडी सत्तरी माइल (एक सय बाह्र किलोमिटर) प्रतिघण्टाको रफ्तारमा पनि कुदाइरहेका

थिए। सोध्दा थाहा पाएँ– सडकमा सकभर कम सवारी चलोस् र चाप कम होस् भन्ने हेतुले अमेरिकामा दुई वा त्योभन्दा बढी मानिस सवार भएका कार र बसका निम्ति त्यो देब्रे कुनो तोकिएको रहेछ। यहाँ मान्छेपिच्छे गाडी हुने र सबैले आफैँ हाँकेर हिँड्ने हुनाले सडकमा एक जनाभन्दा बढी मानिस चढेका सवारी कमै गुड्दा रहेछन्। त्यसैले त्यो कुनो प्राय: खाली नै रहँदो रहेछ। हाई वेहरूमा तोकिएका गतिमा सवारी कुदाउनुपर्दो रहेछ। कम अथवा बढी वेगमा चलाएमा अर्कासँग ठोकिएर दुर्घटना हुने सम्भावना हुँदो रहेछ। त्यसलाई नियन्त्रण गर्न पुलिस ठाउँठाउँमा लेजर-गन लिएर बस्दो रहेछ। शङ्का लागेको गाडीतर्फ ताकेर पड्काउँदा उसले त्यस गनमा जडित घडीबाट वाहनको गति थाहा पाउँदो रहेछ र नियम मिच्नेलाई पिछा गरेर उत्ति खेरै समात्दो रहेछ।

म झ्यालबाहिर यताउति हेर्दै थिएँ। बाटाका दुवैतिर सल्लाका रूखहरूसहित घना जङ्गल थिए। कतैकतै

हरिया डाँडा पनि थिए । पर, सामुन्ने हिउँले ढाकिएको अग्लो पहाड देखेँ । बाहिरको प्राकृतिक दृश्य देख्दा कुनैकुनै बेला म नेपालमै धूलिखेल वा नगरकोटतिर पो जाँदै छु कि जस्तो लाग्यो । "तिमी बसेको ठाउँ त नेपाल जस्तै रहेछ छोरी !" मैले मनको भाव व्यक्त गरेँ ।

"हो बुबा, उस्तै हरियोपरियो छ अमेरिकाको यो वासिङ्टन राज्य । वर्षैभरि यस्तै । त्यसैले यसलाई द एभर ग्रीन स्टेट अर्थात् सदाबहार राज्य भनिन्छ । अझ यहाँका रूखका पातहरूले मौसम अनुसार रङ्ग फेर्दै जान्छन्– हरियो, पहेँलो, गुलाबी, रातो । बहुतै सुन्दर हुन्छन् यी मेपलका पातहरू । सल्लाका थरीथरीका सदाबहार रूखहरूको त आफ्नै सुन्दरता छ ।" छोरीले अनुहार उज्यालो पार्दै जानकारी दिइन् ।

हो त । मूलत: एसियामा हुने मेपल युरोपका केही भाग, अफ्रिकाको उत्तरी भेग तथा उत्तरपश्चिम प्रशान्त क्षेत्र– अलास्का, क्यानाडा, वासिङ्टनतिर पनि पाइन्छ । क्यानाडाको राष्ट्रिय रूखका रूपमा रहेको

मेपलको पातको चिह्न त्यस देशको झन्डामा पनि अङ्कित छ। साँच्चै सुन्दर हुन्छन् त्यसका पातहरू। झट्ट हेर्दा हत्केला जस्ता देखिने चुच्चाचुच्चा परेका पातहरू थरीथरी रङ्गका हुन्छन्। सयभन्दा बढी प्रकारका हुने यी वृक्ष धेरै देशमा पर्यटकीय आकर्षणका वस्तु पनि बनेका छन्। शरद् ऋतुको प्रारम्भसँगै यिनका पातले रङ्ग फेर्दा देखिने अनुपम छटा हेर्न जापान, क्यानाडा आदि देशमा पर्यटकहरूको घुइँचो लाग्छ। जापानमा यिनलाई बोनसाई प्रविधिद्वारा होचा अनि सुन्दर आकारमा हुर्काएर घरमा सजाएर राखिन्छ। अमेरिकामा पनि बाटाका छेउछाउ यिनै रूख रोपिएका छन्। मेपलको काठ साह्रो हुन्छ र फर्निचर लगायत विभिन्न काममा प्रयोग गरिन्छ। कम्पन क्षमता बढी हुने हुँदा गितार, ड्रम जस्ता वाद्यसामग्रीहरू यसकै काठबाट बनाइन्छन्। यसको रसबाट सिरप र केन्डी पनि बनाइन्छ।

"उः हेर्नुहोस् बुबा, गाडीमा गाडी!" छोरीले रमाइलो मान्दै भनिन् र कारहरू बोकेर कुद्दै गरेको ट्रक

देखाइन् । हामी दुवै जनाले हेर्‍यौँ । खुला ट्रकमा तहतह पारेर दस वटाजति गाडीहरू राखिएका थिए । ती सबै नयाँ हुनाले बिक्रीका लागि लगिएका होलान् भन्ने लाग्यो ।

एकै छिनमा एउटा बडेमानको ट्रक छेवैमा आयो । त्यसले काठका मुढा बोकेका तीन वटा डब्बा तान्दै थियो । गाडीको एक छेउमा अङ्ग्रेजीमा ‘यस गाडीले धेरै भारी बोकेको छ’ लेखिएको पाटी झुन्ड्याइएको थियो । त्यो ट्रक एउटी आइमाईले चलाइरहेकी थिई । उसले यसो यता हेर्दा हामी दुईका आँखा जुधे । उसले “हाई” भनेझैँ गरी हात हल्लाई । हाम्रो गाडी केही सुस्त भयो र पछि पर्‍यो । मैले एकाएक काठमाडौँकी एक महिलालाई सम्झेँ र हत्तपत्त गाडीका पाङ्ग्रा गनेँ । अठ्ठाइस वटा रहेछन् ।

एक दिन काठमाडौँमा म मेरा एक परिचितको पी.सी.ओ. मा फोटोकपी गर्न पालो कुरिरहेको थिएँ । ट्रङ्कल गरिसकेर ती महिला पैसा तिर्न काउन्टरमा आएकी थिइन् । पसलेले चानचुन फर्काउँदै भनेका

थिए– "अमेरिका जाने होइन मुमा ? अब त बाबूले त्यहाँ काम पाइसके अरे, होइन ?"

महिला हुनेखाने परिवारकै जस्ती देखिन्थिन् । उनले पैसा ब्यागमा राखेर लामो सास फेर्दै भनेकी थिइन्– "बाइसपाङ्ग्रे ट्रक चलाएर दस-दस दिनलाई बाहिर जानुपर्छ रे । कत्रो होला त्यो ट्रक, कस्तो होला त्यो जागिर !" अनि आफैँसँग कुरा गरेझैँ भनेकी थिइन्– "यहाँको त्यस्तो राम्रो बेपार छोडेर के खान हान्निएको हो अमेरिका कुन्नि !" कुरा सकेर उनी सटासट बाहिर निस्केकी थिइन् । उनका कुरा सुनेर म एकै छिन जिल्लिएको थिएँ ।

धेरैजसोका आमाबाबुले "मेरो छोरो त अमेरिका गयो डी.भी. परेर" भन्दै खुसी व्यक्त गरेको सुनेको थिएँ । अमेरिका जान पाइन्छ भनेर केहीले घरबार बेचेको पनि थाहा थियो । हालसालै डी.भी. परेपछि पनि अमेरिका जान भिसा नदिएको विरोधमा थुप्रैले डी.भी. पीडितको तुल टाँगेर महाराजगन्जमा अमेरिकी दूतावासअगाडि आमरण अनशन बसेको पनि देखेको

थिएँ। तर ती आमै किन खिन्न भएकी थिइन् कुन्नि !

पछि ती पसलेबाट थाहा पाएको थिएँ– उनको छोरो डी.भी. परेर एक वर्षजति अघि श्रीमती र एउटा बच्चासहित अमेरिका गएको रहेछ। बाबु एउटा कम्पनीमा राम्रै पदमा जागिरे थिए रे। दुई वर्षअघि दुर्घटनामा परेर दिवङ्गत भएका रहेछन्। एक्लो छोरो, त्यसलाई पनि नोकरीमा बाहिर गइरहनुपर्दो रहेछ। घरमा बुहारी र सानो नाति, हेर्ने कोही नाइँ। नोकरी छोड्न लाएर आमाले बाबुको कम्पनी र बीमाबाट पाएको पैसाले छोरोलाई त्यही पी.सी.ओ. छेउ हार्डवेयरको पसल खोलिदिएकी रहिछन्। राम्रै चलेको रहेछ व्यापार। नेपाल छोड्ने बेला उसले पसल त बेच्यो नै, आमासित झगडा गरेर घरसाँधको चार आना जग्गा पनि बेचेछ र सबै पैसा लिएर अमेरिकातिर उडेछ।

मान्छे किन हान्निनन्छन् अमेरिका? डी.भी. परेकाको कुरा मात्रै होइन, हाम्रा सम्पन्न परिवारका मान्छेहरूसमेत पर्यटक भिसामा गएर उतै हराएको, अझ तीमध्ये

कसैकसैले कागज मिलाएर शरणार्थीका आधारमा स्थायी बसोबासको व्यवस्थासम्म जुराएको पनि सुनेको छु। अमेरिकाको सुखसयल, एक डलर कमाउँदा नेपाली सत्तरी रुपैयाँ हुने सामान्य जोड-हिसाबको आकर्षण त होला! कि नेपालको परिस्थितिले सिर्जना गरेको परिणाम हो? कि अरू पनि छन् कारणहरू जुन मैले आकलन गर्न सकेको छैन? अहिले मैले ती काठमाडौँकी महिलाका छोराले चलाउनेभन्दा पनि अझ गह्रौं, अझ ठूलो ट्रक एउटी महिलाले हाँकेको प्रत्यक्ष देखेँ। यो काम सुख वा दुःख के-कस्तो प्रकारको हो?

ज्वाइँसाहेबको आवाजले मेरो सोचभङ्ग भयो– "बुबा-मम्मी लन्च यतै बाटामा गरेर जाऊँ है! यता एउटा राम्रो खाने ठाउँ छ।" हाम्रा केटाकेटीले हामीलाई बुबा-मम्मी भनेर बोलाउने हुनाले ज्वाइँसाहेबले पनि त्यही सम्बोधन प्रयोग गर्दै आउनुभएको थियो।

मैले गाडीमा जडित घडीतिर हेरेँ। त्यसले दिउँसोको साढे एक बजाएको थियो, अनि श्रीमतीतिर हेरेँ। उनका आँखाले घरै गएर खाऊँ भन्ने सङ्केत गरेझैँ

लाग्यो र ज्वाइँसाहेबलाई सोधेँ– “घर पुग्न अरु कति बेर लाग्छ ?”

“घर त अबको पैँतालीस मिनेटजतिमा पुगिहालिन्छ ।” उहाँले प्रस्ट पार्नुभयो– “तर मैले भनेको होटेलको खाना तपाईंहरूले पक्कै रुचाउनुहुन्छ भन्ने लागेर प्रस्ताव राखेको हुँ ।”

मैले पुन: उनीतिर हेरेँ । यस पटक उनको अनुहार केही खुकुलो देखेँ र ढुक्कसाथ “हुन्छ जाऔँ” भनेँ ।

कुरैकुरामा थाहा लाग्यो– यस इलाकामा सबैभन्दा पहिले सन् १७७५ मा स्पेनका नाविकहरू ओर्लेका रहेछन् । त्यस बेलादेखि सन् १८१९ सम्मै यहाँ स्पेनको आधिपत्य रह्यो । त्यसपछि सन् १८४६ सम्म यहाँ ब्रिटिसले शासन गरे, अनि सन् १८८९ मा यो इलाका वासिङ्टन नामले बयालीसौँ राज्यका रूपमा अमेरिकामा गाभियो । यसको उत्तरमा क्यानाडाको ब्रिटिस कोलम्बिया राज्य, दक्षिण र पूर्वमा अमेरिकाकै क्रमश: ओरेगन र इडाहो राज्यहरू तथा पश्चिममा प्रशान्त महासागर पर्छन् । पैँसठ्ठी लाख जनसङ्ख्या

भएको यस राज्यमा नब्बे प्रतिशतजति गोराहरू छन् । अफ्रिकी-अमेरिकीको सङ्ख्या पाँच प्रतिशत हाराहारी छ र अन्य अल्पसङ्ख्यकमा पर्ने एसियालीहरू (जसको सङ्ख्या यहाँ अमेरिकाभरिकै हिसाबमा पाँचौँ स्थानमा पर्छ) मा फिलिपिनो नै बढी छन् । यहाँ आदिवासी रेड इन्डियनहरूको सङ्ख्या पनि उल्लेख्य छ । तीमध्ये धेरैजसोले काठका खाँबामा विभिन्न चित्र खोप्ने, मखुन्डो बनाउने, कलात्मक नाउँ बनाउने जस्ता आफ्नै पुर्ख्यौली कलाका काम गर्दछन् । केहीले स्यालमोन नामक माछा मार्ने र ह्वेलको सिकार गर्ने जस्ता पुरानै पेसा अपनाएका छन् । सरकारले उनीहरूलाई क्यासिनो भनिने जुवाघर खोल्ने सुविधा दिएका हुनाले केही त्यो व्यवसायमा पनि संलग्न छन् । यहाँका धेरै सहरका नामहरू– सियाटल, स्पोकान, याकिमा, वालावाला, पुयाल्लुप इत्यादि– आदिवासीहरूकै भाषामा राखिएका छन् । मजदुरका रूपमा धेरैजसो बसाइँसराइ गरी आएका मेक्सिकोतिरका मान्छेहरू देखिन्छन् । स्याउ, ऐँसेलु, नासपाती, चेरी, अङ्गुर, केराउ आदिका खेतीमा

यो राज्य अमेरिकाभरिमै अग्रणी मानिन्छ। काठ, डिब्बाबन्द माछा, पानीजहाज तथा हवाईजहाज आदि यहाँका मुख्य औद्योगिक उत्पादनहरू हुन्। खानी र जलविद्युत् उत्पादनमा पनि वासिङ्टन अगाडि रहेछ।

"अहिले हामी टाकोमा भनिने वासिङ्टनको तेस्रो ठूलो सहरमा आइपुगेका छौँ। यो सहर पहिलेदेखि नै सुन, चाँदी, तामा, सिसा आदि धातुहरू प्रशोधन गर्ने भट्टीहरूका निम्ति प्रसिद्ध छ। यहाँ ठूलो ग्लास म्युजियम छ। ग्लास र त्यसका विभिन्न कलात्मक वस्तुहरू उत्पादन गर्ने त्यो म्युजियम हेर्न लायकको छ। त्यो सामुन्ने देखिएको चाहिँ डोम स्टेडियम हो।" गोलो छानो भएको ठूलो घर देखाउँदै ज्वाइँसाहेबले भन्नुभयो– "त्यहाँ विभिन्न खेलका ठूलठूला प्रतियोगिताहरू हुन्छन्। अमेरिकाका कहलिएका गायक कलाकारहरूका कार्यक्रम पनि त्यहाँ आयोजना भइरहन्छन्। अब एकै छिनमा हामी दाहिनेको निकास समातेर फेडरल वे सहरभित्र पस्छौँ र अघिदेखि प्रतीक्षा गरिरहेको लन्च खान्छौँ।"

यहाँ हाई वेबाट कुनै अर्को बाटो समात्नुपर्‍यो अथवा सहरभित्र छिर्नुपर्‍यो भने दाहिनेतिरको निकास-बाटो समात्नुपर्दो रहेछ। तिनका नम्बर लेखिएका सङ्केतपाटीहरू पनि हुँदा रहेछन्। आफूले समात्नुपर्ने निकासको नम्बर थाहा पाएर त्यतैको गल्छेडोतिर नलागे वा थाहा नपाएर छुटे लामै फन्को मार्दै त्यस्तै अर्को गल्छेडोबाट छिरेर आफ्नो गन्तव्य बाटो समात्नुको सास्ती खेप्नुपर्दो रहेछ। हाम्रो गाडीमा ज्वाइँसाहेबले ग्लोबल पोजिसनिङ सिस्टम (जी.पी.एस.) भनिने चुरोटको बट्टाजत्रो सानो यन्त्र राख्नुभएकाले निर्दिष्ट गन्तव्यतर्फ हाँक्न सजिलो भइरहेको थियो। मेसिनमा जडित कम्प्युटरमा जानुपर्ने स्थानको नाम भरिदिए त्यसले आफ्नो पर्दामा गाडी हिँडेको बाटाको नक्सा देखाउँदो रहेछ र प्रोग्रामिङद्वारा पहिलेदेखि नै भरिराखिएको आवाजले चालकलाई उल्लिखित ठाउँसम्मै दिशानिर्देश गर्दो रहेछ।

"यो मेसिन नहुँदा पहिले धेरै पटक अलमलिएर भनेको ठाउँमा पुग्न निकै घुम्नुपरेको थियो। कहिलेकाहीँ

त टाइममा पुग्न नसकेर कामै पनि बिग्रिन्थ्यो। यहाँका बाटामा एउटै मान्छे हुन्नन्, कसलाई सोध्ने?" ज्वाइँसाहेबले अनुभव सुनाउनुभयो– "बाटाका गल्छेडाहरू पनि टाढाटाढा हुन्छन्।" हुन पनि अघि कफी खाएर फर्कँदा बाटामा मैले कुनै मान्छे देखेको थिइनँ।

"यहाँ अचम्म छ बुबा, सहरका बाटाहरूमा जताततै फराकिला पेटी छन्।" छोरीले भनिन्– "तर तिनमा कोही हिँड्दैनन्।" म सोच्न थालेँ– हामीकहाँ सडकमा हिँड्नेको भीड छ तर पेटी छैनन्। जहाँ पेटी छन् त्यहाँ मान्छे हिँड्न मिल्दैन; त्यहाँ पसलका सामान थुपारिएका हुन्छन्।

होटेल आइपुगेछ क्यार, हाम्रा 'चालक' ले निकै फराकिलो र गाडी नै गाडी भएको ठाउँतिर सवारी मोडे। मैले देखेँ, मोडैमा विपरीत दिशाबाट एउटा कुइरेले हाँकेको गाडी मच्चिँदै हामीतिरै आइरहेको थियो। आत्तिएँ, अब त ठोकिने भयो। बिताउने भयो कुइरेले। "ए-ए" भन्ने आवाज मुखबाट निस्कनै खोजेको थियो, देखेँ– दुवै गाडीहरू सहज रूपमा

मोडिए र आ-आफ्ना बाटातिर लागे। शरीर खुकुलो भयो। यहाँ हामीकहाँ भन्दा ठ्याक्कै उल्टो, राइट ह्यान्ड ड्राइभ हुँदो रहेछ। गाडीमा चालकको सिट देब्रेतिर हुने र सडकको दाहिने च्यापेर सवारी चलाउनुपर्दो रहेछ। हामी देब्रेतिर चलाउन बानी परेकालाई प्रत्येक मोडमा विपरीत दिशाबाट आउँदै गरेका गाडी देख्दा "लौ ठोकिने भयो" भन्ने भान पर्दो रहेछ।

तोकिएको स्थानमा सवारी राखेर हामी ओर्लियौँ। मैले चारैतिर हेरेँ, काठले बारिएको क्षेत्रभित्र थुप्रै भवनहरू थिए। तिनमा थरीथरीका पसलहरू थिए। सामुन्ने निकै ठूलो इलाका गाडी राख्न छुट्ट्याइएको थियो। त्यस क्षेत्रमा छिर्ने मूल ढोकानेर ससानो सुन्दर बगैँचा बनाइएको रहेछ। ठाउँठाउँमा दस-बाह्र फिट अग्ला खाँबाहरूमा राखिएका गमलामा विभिन्न थरीका फूलहरू ढकमक्क फुलेका थिए। हामी हिँड्दै गरेको बाटो एकदमै सफा थियो। कतै सामान्य फोहोर, कसिङ्गर केही देखिएन। जता हेऱ्यो उतैको वातावरण स्वच्छ, सफा अनि मनोरम !

हामी निर्दिष्ट रेस्टुरेन्टभित्र पस्यौं। त्यसमा मङ्गोलियाको परिकार खान पाइँदो रहेछ। म सरासर भित्र जान आँटेको थिएँ, छोरीले रोकिन्। यहाँका होटेलहरूमा ढोकाभित्र छिरेर पर्खनुपर्दो रहेछ। परिचर आएर कति जना भनेर सोध्दो रहेछ, अनि भित्र खाली रहेको उपयुक्त ठाउँमा लगेर ग्राहकलाई बसाल्दो रहेछ। हामीलाई पनि एउटी पातली अनि होची परिचारिकाले चार जना बस्ने टेबलमा लगेर राखी। त्यहाँ काम गर्ने सबै कामदारहरू मङ्गोलियातिरकै भएझैं लाग्यो।

अमेरिकामा प्राय: सबै देशका स्वादको खाना खान पाइन्छ रे। हुन पनि सबै देशका मान्छेको बसोबास छ यहाँ। डी.भी. को सुविधा दिँदै बोलाउँदै छ संसारभरिका मान्छेलाई अमेरिकाले। धेरै देशका चिडियाखानाहरूमा त्यहाँका नागरिकले देखून्, आनन्द लिऊन्, जानकारी पाऊन् भनेर विभिन्न देशबाट झिकाएर थरीथरीका जीवजन्तु राखिएका हुन्छन्। अमेरिकाले त्यस्तरी नै मान्छे झिकाएको किन हो कुन्नि !

यहाँ नेपालीहरूले पनि ठाउँठाउँमा स्वदेशी रेस्टुरेन्ट खोलेका छन् रे। पोहोर काठमाडौँमा मेरा एक पुराना परिचितका छोरा धेरैपछि भेट भएका थिए। अमेरिकाबाटै स्नातकोत्तर गरेर आठ-दस वर्षदेखि त्यहीँ काम गर्दै गरेका ती इन्जिनियर बाबूसित कुराकानी हुँदा उनले अहिले नोकरी छोडेर त्यहाँ रेस्टुरेन्ट खोलेको कुरा जनाएका थिए। उनी त्यति खेर दसैँ मान्न घर आएका रहेछन्। कुराकानीका क्रममा उनले भनेका थिए– “मेरो होटेलको लागि नेपाली खाना पकाउन जान्ने राम्रो भान्से चाहिएको छ। अङ्कलले चिनेको कोही छ ? छ भने भन्नुहोला, म उसलाई अमेरिका लैजान्छु।”

उनका कुरा सुनेर म त्यस बेला छक्क परेको थिएँ र हाँस्दै भनेको थिएँ– “हुन्छ नि। त्यस्तो मान्छे अहिले त छैन। पाइए बाबूलाई खबर गरुँला।”

पीएच.डी. गरेका मेरा एक छिमेकीले पनि केही वर्षअघि अमेरिका गएर रेस्टुरेन्ट खोलेका छन् रे, भाइबुहारीलाई पनि लगेर काम दिएका छन् रे भन्ने

सुनेको थिएँ। यस्ता कुरा देख्दा-सुन्दा मेरो मनले आफूसँगै केही प्रश्न गर्थ्यो– के त्यत्रो पढेलेखेका विद्वान्ले पनि त्यस्तो पेसा अपनाउने हो? त्यो पनि अमेरिका गईगई? पैसै हो कारण भने त साधारण व्यक्तिले स्वदेशमै सामान्य होटेल थापेर राम्रै आम्दानी गरेका र ठाउँठाउँ शाखा-प्रशाखा खोल्दै गएका छन् है!

परिचारिकाले कोल्ड ड्रिङ्क्स के लिने, कुन स्वादको आइसक्रिम खाने आदि सोधेर हामीलाई खाना लिन जान अह्राई। हामीहरू त्यतै लाग्यौँ। एक पटकमा सय जनाजति अटाउने त्यस रेस्टुरेन्टका सबैजसो टेबलहरू ग्राहकले भरिएको देखेर अमेरिकामा रेस्टुरेन्टहरू खुपै चल्दा रहेछन् भन्ने लाग्यो। यहाँ काम पूरा कसेर लिइन्छ भन्ने पनि सुनेको थिएँ। कसैलाई कुनै बेला पनि कुनै कारण नै नजनाई कामबाट अवकाश दिन सकिन्छ, अमेरिकामा नोकरीको कुनै ग्यारेन्टी हुँदैन भन्ने पनि सुनेको थिएँ। रेस्टुरेन्टको व्यापारमा सहजै बढी नाफा हुने कारणले पो हो कि अमेरिका

आएका विद्वान् लगायत सबै यो पेसाप्रति आकर्षित भएका !

मैले खानेकुरा हाल्ने भाँडो उठाएँ ।

"केके लिनुपर्छ हँ छोरी ?" मभन्दा अगाडि लाममा उभिएकी मेरी श्रीमतीले अलमल्ल परेर सोध्नै लाग्यो ।

"यहाँ राखिएकामध्ये आफूलाई मन लागेका सामग्रीहरू लिने र त्यहाँको भान्सेलाई दिने । त्यसले पकाइदिन्छ । मैले झिकेको हेर्नुहोस् र तपाईंले पनि झिक्दै जानुहोस् न !" छोरीले भनिन् । आमाछोरी दुवैले आ-आफ्ना रुचिका खाद्यान्न छानीछानी भाँडामा हाल्न थाले ।

म पनि तम्सिएँ खानेकुरा छान्न । त्यहाँ खण्डखण्डमा नपकाएका, काँचा सामग्रीहरू थुप्रै राखिएका थिए । कुखुरा, बाख्रा, भेडा, बङ्गुर आदिका ताछेका पातला मासुहरू; विभिन्न प्रकारका माछा– स्यालमोन, स्रिम्प, प्राउन, स्क्वीड अनि ससेज थरीथरीका । सेता, राता, पहेँला रङ्का चाउमिनहरू । त्यस्तै काउली, सिमी, बन्दा र अन्य मैले पहिले नदेखेका हरिया तरकारीहरू;

गाजर, मूला, काँक्रा, गोलभैँडा, भेडे खुर्सानीहरू र सलादका पात-परिकारहरू; फलफूलका चानाहरू; थरीथरीका चटनी र ससहरू; लसुन, अदुवा, खुर्सानी, सिर्का, कागती र फलफूलका रसहरू; चिनी, मह, नुन, तेल । ओहो, केके हालूँ! केके लिऊँ म खानका लागि !

खानाको स्वादप्रति सानैदेखि म निरपेक्ष नै रहेँ। जे-जस्तो पाएँ त्यस्तैले भोक मेटेँ। त्यसैले यस्तै मीठो हुन्छ भनेर परख गर्न म सक्दिनँ। साथीहरूसँग रेस्टुरेन्ट जाँदा पनि मैले अरूले रोजे अनुसारै खाने गरेको छु। अहिले त्यत्तिका सामग्रीमध्ये छोरीले भनेबमोजिम छान्नुपर्दा मलाई हुनसम्मको द्विविधा भइरहेको छ। झन् यी त काँचा छन्, पकाउनुपर्छ। कसरी होला त्यो कुकले पकाउने ? यस्तो मिश्रण हालेर पकाएको खानेकुराको स्वाद कस्तो होला? यस्तै सोच्दै-अलमलिँदै मैले जेजे देखेँ हाल्दै गएँ भाँडामा। तेल त हाल्नैपर्छ होला ! नभए के मीठो होला र ? मैले अन्योलकै स्थितिमा पकाउने ठाउँनेरको र्‍याकमा भाँडो

राखेँ ।

भान्सा खुला ठाउँमा थियो । त्यहाँ ग्यास चुल्होमाथि बडेमानको फलामे तावा थियो, आठ फिटजति व्यास भएको । दुई जना भान्से दुईतिर बसेर ग्राहकहरूले ल्याएका खानेकुराहरू त्यही तावामा पकाउँदै दिँदै थिए । मेरो भाँडो चिम्सा आँखा भएको गोरे मोटेले उठायो । सेतो पहिरन लाएको त्यस भान्सेको टाउकामा पनि सेतै लामो टोपी थियो । उसले मेरो त्यो मिश्रणलाई तावाको एक छेउमा खन्यायो र लामो फलामे पन्यूँले चलाउँदै भुट्न थाल्यो । बेलाबेला उसले त्यसमा तेल पनि छर्कँदै थियो । चार-पाँच मिनेटजति मासु जस्तै गरी चरचरती भुटेपछि उसले त्यो मिश्रण प्लेटमा हालेर हाँस्दै मलाई दियो । पहिले टड्कारो रङ्गीन देखिने मेरो खानेकुरा पकाएपछि अनौठो रङ्गको भएछ । रूप पनि त्यस्तै, जसलाई अहिले लेखेर व्याख्या गर्न सक्दिनँ । तर हेर्दा लाग्यो– यो अवश्य पनि हाम्रा निम्ति नौलो र अविस्मरणीय स्वादको हुनेछ । म मुसुमुसु हाँस्दै, ज्वाइँसाहेबतिर हेर्दै

खान बसेँ। उनी पनि मुसुक्क हाँस्दै मछेउ आएर बसिन् ।

एक-दुई गाँस खाइसकेपछि हामीतिर हेर्दै छोरीले सोधिन्– "कस्तो लाग्यो त ?"

साँच्चै, स्वाद पनि सोचे जस्तै अनौठो थियो। तर निकै मीठो थियो र रमाउँदै भनेँ– "डिलिसियस, स्वादिष्ठ !"

खानपानपछि गाडीमा चढेको आधा घण्टाजतिमा हामी ओलम्पिया पुग्यौँ। "हामी बस्ने यो सहर वासिङ्टन राज्यको राजधानी हो।" ज्वाइँसाहेबले जानकारी दिनुभयो ।

पगेट साउन्डको दक्षिणमा अवस्थित यो सानो सहर सियाटल विमानस्थलबाट मात्र पचास माइलको दूरीमा रहेछ। यहाँका केही ठाउँ समुद्र पुरेर पनि बनाइएका रहेछन्। यो सहर भुइँचालो प्रभावित क्षेत्रभित्र पर्दो रहेछ। सन् १९४९ मा यहाँ ठूलो विनाशकारी भूकम्प गएको थियो रे। त्यस बेला यहाँका धेरै

ऐतिहासिक भवन ध्वस्त भएका रहेछन्। सन् १९६५ र २००1 मा पनि भूकम्पले यहाँ धेरै नोक्सान पुऱ्याएको रहेछ। यहाँको एभरग्रिन कलेज कला र सङ्गीतका साधकहरूका निम्ति आकर्षणको केन्द्र मानिँदो रहेछ।

मैले चारैतिर हेरेँ। सहर उस्तै सफा र हरियोपरियो थियो। "ल अब हाम्रो वासस्थान आइपुग्यो।" छोरीले सूचना दिइन्।

ज्वाइँसाहेबले गाडी घरैघर भएको ठूलो इलाकाभित्र छिराउनुभयो। त्यहाँको मूल ढोकाअघि थरीथरीका रङ्गीन झन्डाहरू फरफराइरहेका थिए र भुइँका क्यारीहरूमा रङ्गीबिरङ्गी आकर्षक फूलहरू फुलेका थिए। चारैतिर झुप्प परेका रूखहरू थिए– सल्ला, मेपल र केही मैले कहिल्यै नदेखेका कलेजी रङ्गका पात भएका। सफा र स्वच्छ देखिने त्यस परिसरको वातावरण बडो सुन्दर र आकर्षक थियो। ज्वाइँसाहेबले गाडी आफ्नो वासस्थानअघि लगेर रोक्नुभयो। हामीले आफ्ना सामानहरू निकालेर छोरी-ज्वाइँ बस्ने चिटिक्कको घरमा बिसायौँ।

# हृदयप्यारीको टोलमा सफाइ हेर्दै

घ्यारघ्यारको ठूलो आवाजले मलाई बिहानै ब्यूँझायो। एक छिनसम्म बुझ्न सकिनँ के भएको हो। छेवैमा हवाईजहाज उडिरहे जस्तो लाग्यो। तर त्यो आवाज निरन्तर नभई रोकिईरोकिई आइरहेको थियो। आश्चर्य लाग्यो– यस्ता कुरा त हाम्रो देशमा पो सामान्य छन्, सहजै पचाउँछौँ हामी; न गर्नेलाई लाज न देख्नेलाई अप्ठ्यारो; अमेरिका जस्तो अति विकसित र सभ्य भनिने देशमा पनि होहल्ला गरेर आम नागरिकको शान्तिमा बाधा-व्यवधान पुऱ्याउन पाइँदो रहेछ! उठेर झ्यालको पर्दा अलिकति फट्याएर बाहिर हेरेँ। केही देखिनँ।

बाथरुमबाट निस्कँदा छोरीसित भेट भयो। "गुडमर्निङ बुबा ! निद्रा राम्रै भयो ?" उनले सोधिन्। मैले उनीसित बिहानबिहानै बाहिर भइरहेको त्यो ध्वनि

प्रदूषणको चर्चा गरेँ।

"आज यस कम्युनिटीको सरसफाइको दिन हो बुबा !" उनले जानकारी दिइन्– "सातामा तोकिएको एक दिन बिहान आठ बजेदेखि सरसफाइको कार्य सुरु हुन्छ। घाँस काट्ने मेसिन चलाएको आवाज हो त्यो। नभए यहाँ जथाभाबी गरेर अरूको शान्ति खलबल्याउन कहाँ पाइन्छ ?"

मैले घडी हेरेँ। लौ, आठ बजिसकेछ ! ढिलैसम्म सुतिएछ। अमेरिका आएदेखि सुताइ ठीक भएको थिएन। सियाटल एयरपोर्टमा ओर्लेदेखि नै मलाई शरीर शिथिल भएझैँ लागेको थियो। त्यहाँदेखि रचनाको घरसम्म त कसै पुगिएको थियो, तर सोफामा बसेर चिया खाँदै छोरी-ज्वाइँसित कुरा गर्दा मेरा आँखा भारी भएर टालिन थालेका थिए। रानीको स्थिति पनि ठीक रहेनछ।

"के भएको हो ? मलाई त झुपुझुपु पाऱ्यो। जीउ पनि गलेझैँ भयो।" चियाको कप टेबलमा राख्दै उनले भनेकी थिइन्।

मैले पनि आफ्नो असहज अवस्था दर्शाएपछि छोरीले चिन्तित स्वरमा भनेकी थिइन्– "ए, त्यसो भए तपाईंहरूलाई जेट-ल्याग भयो।"

"त्यो भनेको के ?" त्यस बेला मैले कुरा नबुझेर सोधेको थिएँ।

"लामो हवाईयात्राले थकाउँछ नै, निद्रा पनि भने जस्तो नहुने हुनाले शरीरमा असर पर्छ। त्यसैलाई अङ्ग्रेजीमा जेट-ल्याग भनिन्छ।" ज्वाइँसाहेबले स्पष्ट पार्नुभएको थियो– "आराम गऱ्यो भने बिस्तारै स्वतः ठीक हुँदै जान्छ।"

"कहाँ, कसैकसैलाई धेरै दिनसम्मै असर गर्छ। म पनि तीन दिन सुतेको सुत्यै भएकी थिएँ पहिलो पटक आउँदा। तपाईंहरू बरु अहिले नुहाइधुवाइ गरेर एक छिन आराम गर्नुहोस्। भरे सुनौँला अरू कुरा।" छोरीले अह्राएपछि हामी सोफाबाट उठेका थियौँ।

"काठमाडौँ छोडेदेखि त एकै छिन झप्की लिन पनि पाइएको होइन। कति, दुई रात काटिएन र बाटामा

?" उठेर चियाको कप थन्काउँदै श्रीमतीले मतिर हेरेर सोधेकी थिइन्। मैले आफ्नो नाडीघडी हेर्दै सोचेको थिएँ– काठमाडौँबाट हिँडेको चालीस घण्टा भएछ, कहाँ सुतियो र त्यसबीच ?

पहिलो रात ब्याङ्कक एयरपोर्टको सोफामा ओल्टेकोल्टे गर्दागर्दै बितेको थियो। अर्को रात जापान कटेपछि प्रशान्त महासागरमाथि कतै विचरण गर्दै थियौँ होला। झ्यालतिरको सिट नपरे त केही देख्न पाइन्न भनेर पहिले मेरी सहयात्री चितिन्त थिइन्। जहाजमा चढेपछि भने जस्तै सिट परेकाले खुसी हुँदै घरीघरी झ्यालबाट बाहिर हेर्थिन्। तर केही नदेखिएकाले उनले विरक्तिएको अनुहार लाएकी थिइन् उडानभरि नै। हुन पनि ठ्याम्मै केही देखिँदैनथ्यो बाहिर– बाक्लो बादलको तहबाहेक। जापान छोडेपछि हाम्रो विमानले कुनै पनि भूभाग ननाघी महासागरकै माथिमाथि उडेर सियाटल टेकेको थियो। जहाजमा राखिएका टी.भी. का पर्दामा विमान उडेको बाटाको चित्रसहित उडानको उचाइ, रफ्तार, दूरी, समय, तापक्रम आदि जस्ता विवरणहरू

देखिन्थे बेलाबेला। केही समय त्यसैलाई हेरेर कताबाट जाँदै छौँ, अहिले कहाँ छौँ, अब कति बाटो बाँकी होला भन्ने जस्ता जिज्ञासा मार्दा; केही बेर अन्य च्यानलमा देखाइने चलचित्र हेर्दा र बाँकी समय एयरलाइन्सको मेजमानी खाँदाखाँदै हामीले यात्रा काटेछौँ। एकै छिन आँखा चिम्लिन पनि कहाँ जुऱ्यो र ! परिणामत: हामीलाई त्यस बेला कुनै असुविधा महसुस नभए पनि शरीरका तन्तुहरूले खेपेछन् ठूलै सास्ती। त्यसैले होला, हामीले यो स्वप्ननगरीमा आएकै दिनदेखि एक सातासम्मै झुपुझुपु हुँदै भोग्यौँ जेट-ल्यागको तीतो अनुभव।

अहिले पनि त सामान्य भइसकिएको छैन। अमेरिका भौगोलिक रूपले एकदमै पश्चिमी गोलार्धमा अवस्थित हुनाले यहाँको समय नेपालको भन्दा बाह्र घण्टाभन्दा पनि बढीले पछाडि रहेछ। काठमाडौँमा रात परिसक्दा यहाँ बल्ल बिहान भएको हुन्छ। यो रात-दिनको फरकसँग अभ्यस्त नभएर होला, अबेर रातसम्मै ओल्टेकोल्टे फर्किरहन्छ शरीर। अझ उदेकलाग्दो यहाँको

साँझ छ। टी.भी. मा रातिको नौ बजेको समाचार भनिँदै हुन्छ, बाहिर हेर्‍यो टड्कारो घाम लागेको हुन्छ। यहाँ राति दस बजेसम्मै उज्यालो हुने हुनाले पनि सुत्ने समय-तालिका मिलिसकेको छैन अझै। काठमाडौँमा त सकालै चराहरूको चिरिबिरीसँगै उठिसकेको हुन्थेँ। हाम्रो सुत्ने कोठाबाहिर कतै भँगेराको गुँड छ क्यार, बिहान उनीहरूको कलरव सुनेर बडो आनन्द लाग्थ्यो। आश्चर्य, यहाँ मैले चरा कराएको पनि सुनेको छैन।

"खोइ, चरै देखिन्नन् यहाँ! जताततै रूखहरू छन्, जङ्गलैजङ्गल छ तैपनि चरा नदेखिने। किन होला हँ?" हिजो तीन वटा रुप्पीहरू घरछेउ चर्दै गरेको देखेर आमाले छोरीलाई सोधेकी थिइन्।

"छन्, तर मैले पनि त्यति धेरै देख्दिनँ। किन हो कुन्नि!" छोरीले अनभिज्ञता जनाएकी थिइन्।

चिया-नास्ता खाएर हामी दुवै बाहिर निस्क्यौँ। हेरौँ न त के गर्दा रहेछन् यहाँ सरसफाइमा?

कालोपत्रे सडक हुँदै केही अघि बढेर दाहिने मोडिँदा देख्यौँ– दुई जनाले एउटा घरअगाडिको सानो चौरमा स्वचालित मेसिनले घाँस काट्दै रहेछन् । अर्को एउटाले हाते मेसिनले छेउतिरको घाँस ताछ्दै-मिलाउँदै थियो । नाकमा ह्वास्स दूबोको गन्ध पस्यो । मलाई अलिक असह्य हुन्छ यसको गन्ध । छेवैमा ह्वाँ-ह्वाँको चर्को आवाज सुनेँ र त्यतै हेरेँ– एक जनाले हावा तान्ने मेसिन बन्दुकझैँ काँधमा भिरेर त्यसको पाइप भुइँमा चारैतिर घुमाउँदै थियो । उसले जताजता पाइप लान्थ्यो त्यताका फोहोर-मैला, पात-पतिङ्गरहरू सबै त्यस मेसिनले खिचेर सफा पार्दै जान्थ्यो । हामी अगाडि बढ्दा दाहिनेतिर स्विमिङ पुल देखियो । त्यसको वरिपरि आराम कुर्सीहरू मिलाएर राखिएका थिए । अहिले त्यहाँ कोही थिएन । परिवेश सफा र पानी पनि स्वच्छ देखियो । अलि पर पुग्दा एउटा उद्यान देखियो । त्यहाँ पनि सानो गाडीले घाँस ताछ्दै थियो । उद्यानमा केटाकेटीले खेल्ने चिप्लेटी, पिङ, लुकामारी आदिका साधनहरू थिए । एक छेउमा बास्केटबलको

बोर्ड पनि थियो।

केही पर सरसफाइका औजारहरू राखिएको एउटा पिक-अप गाडी अडिएको थियो। छेवैको रेकर्डरमा सङ्गीत घन्किरहेको थियो। त्यसैको वरपर एकै किसिमका पहिरन लाएका युवायुवतीको टोलीले बोटबिरुवा गोडमेल गर्दै थियो। सबैले हातमा रबरका पन्जा, खुट्टामा बुट र टाउकामा टोपी लाएका थिए। टोलीका मजदुरहरूमा धेरैजसो मेक्सिकोवासी जस्ता देखिन्थे र केही गोरा पनि थिए।

"रमिता जस्तै हुँदो रै'छ !" श्रीमतीले आनन्दित हुँदै भनिन्।

केटा र केटीको एक जोडीले साबेलले ट्रलीबाट काठको धूलो झिक्दै बिरुवाका वरिपरि हाल्दै थियो। हेर्दै जाँदा त्यहाँ हामीले कहीँ पनि उदाङ्गो जमिन देखेनौँ। धेरै ठाउँमा कि दूबोको चौर कि त फूलबारी देखिए, अनि देखिए थरीथरी प्रजातिका सुन्दरसुन्दर वृक्षहरू। केही नरोपिएको खाली ठाउँमा काठको धूलो

छर्किइएको थियो।

“काठका टुक्राटाक्री छरेरै होला यहाँ कतै धूलो नदेखिने?” उनकोप्रश्नात्मक अभिव्यक्तिमा मैले थपेँ– “अँ, धूलो भएन नै, झारहरू पनि उम्रन पाएनन्। त्यसले मलको काम पनि गऱ्यो। अनि त त्यस्तरी सप्रिएका छन् बिरुवाहरू।”

“कति जानेका, है?” उनले मतिर हेरेर मुसुक्क हाँस्दै भनिन्।

आएका दिनदेखि नै उनी मुग्ध थिइन् यहाँको सफा-सुन्दर परिवेश देखेर। हुन पनि हामीकहाँको धूलो, धूवाँ र फोहोरको उपद्रव अनि लथालिङ्ग परिवेशका सामुन्ने यस्तो स्वच्छ तथा व्यवस्थित वातावरण देखेर को नेपाली आनन्दित नहोला र!

एक ठाउँमा एउटो केटाले छ-सात फिट अग्लो बोटलाई डोरीले बाँधेर दुईतिर गाडिएका खाँबामा कस्दै थियो– सीधा पार्न होला। मैले एकाएक एउटा पुरानो कुरा सम्झेँ र मनमनै हाँस्दै उसको काम एक

छिनसम्म हेरिरहेँ ।

तीस वर्षअघि युरोप गएर फर्केका मेरा एक मित्रले त्यहाँको व्यवस्थित परिवेशको उदाहरण दिने क्रममा भनेका थिए– "त्यहाँका त रूखहरू पनि अनुशासित हुन्छन् । जताका हेरे पनि सलक्क, सीधा, उँभो ठडिएका देखिन्छन् ।"

यस्तै स्याहारसुसार गरेर त होला नि– मैले सोचेँ । मनमा धेरै भावहरू तरङ्गित हुन थाले । कति वृक्षरोपण कार्यक्रमहरू सञ्चालन भए हाम्रो देशमा ! कति ठूलाबडाले उद्घाटन गरे बिरुवा रोपेर ! टी.भी. ले देखायो; रेडियोले पनि फुक्यो; प्रचार-प्रसार भयो । अभियानै चल्यो थुप्रैथुप्रै बजेटसहित । के फगत प्रचारका लागि ? कि उपलब्धि पनि भयो केही ? खोइ, नाङ्गा देखिन्छन् है हाम्रा सहर ! उजाड भएका छन् त हरिया पहाड ! चारकोसे झाडी नै कहाँ रह्यो र अब, नामसिवाय !

यस कम्युनिटीमा साठी-सत्तरी वटाजति छुट्टाछुट्टै घर होलान् । यहाँ पूरै इलाकालाई खण्डखण्डमा विभाजन

गरेर सबैलाई बाटाले छुने गरी योजनाबद्ध तवरले निर्माण कार्य गरिँदो रहेछ। घरहरू एक, दुई, तीन, चार वा बढी बेडरुम भएका पनि हुँदा रहेछन्। कोठाका सङ्ख्या अनुसार घरहरू एक तलादेखि तीन तलासम्मका हुँदा रहेछन्। चुच्चाचुच्चा छतसहित काठले बनेका ती वासस्थानहरू कति सुन्दर ! यता धेरैजसो आवासीय घरहरू काठकै बनाइँदा रहेछन्। भुइँचालोको खतराले होला। घरको तीनतिर काठको बारले बारिने र मूल ढोकातर्फ खुला राख्ने गर्दा रहेछन्। सबैका घरअगाडि सानो बगैँचा र चिटिक्क परेको घाँसे चौर देखिन्थ्यो। आफ्नो बगैँचामा धेरैले माटा वा ढुङ्गाका मूर्ति पनि राख्ने गर्दा रहेछन्। तिनमा हाँस, भ्यागुता, खरायो र बच्चाबच्चीका आकृति नै बढी देखेँ। कसैकसैका घरअगाडि पचासतारे अमेरिकी झन्डा टाँगिएको पनि देखेँ। राष्ट्रिय झन्डा सरकारी भवनहरूमा मात्र झुन्ड्याइन्छ, व्यक्तिगत घरमा राख्न त मन्त्री हुनुपर्छ भन्ने देखिजानी आएको मैले एउटा घरअगाडि उभिएर वाल्ल परेर हेर्दै सोचेँ–

बिहान बाहिर निस्कँदा र बेलुकी फर्कंदा फरफराइरहेको राष्ट्रिय प्रतीक देखेर यस घरका मान्छेलाई कति गर्वानुभूति हुँदो हो !

घरजग्गासम्बन्धी व्यापार यहाँ ठूलै रहेछ। व्यापारिक कम्पनीहरूले ठूलठूला इलाकाहरू विकास गरेर तिनमा सरकारले तोके बमोजिमका आवश्यक पूर्वाधारसहितका घर निर्माण गर्दा रहेछन् र बिक्री गर्ने वा भाडामा लाउने गर्दा रहेछन्। त्यस्ता आवास क्षेत्रलाई कम्युनिटी भनिँदो रहेछ। ती कम्युनिटीमध्ये कुनैमा छुट्टाछुट्टै घर, कुनैमा फ्ल्याटहरू र कुनैमा टाउन हाउस भनिने जोडिएका दुई घरहरू हुँदा रहेछन्। कसैकसैले हाम्रा तिर जस्तो छुट्टै जमिन किनेर निर्माण कम्पनीमार्फत आफूलाई चाहिए अनुसारको घर पनि बनाउँदा रहेछन्।

यहाँका आवासहरूबारे सोच्दै जाँदा मलाई गुड्ने घरको पनि सम्झना भयो। बीस-बाइस वर्षजति अघिको कुरो हो। मेरा एक सहकर्मीले अमेरिका पढ्न गएका आफ्ना भाइबारे जानकारी दिने क्रममा एक दिन भनेका थिए– “उसले त्यहाँ एउटा गुड्ने

घर किन्यो रे।"

त्यस बेला त्यो घर कस्तो होला भनेर मैले जिज्ञासा राखेको थिएँ। त्यसमा बस्ने, खाने, सुत्ने सबै कोठासहित बाथरुम पनि हुन्छ रे। तल पाङ्ग्रा हुने हुनाले त्यसलाई तानेर जहाँ चाह्यो त्यहीँ लान सकिन्छ रे भन्ने जानकारी उनले दिएका थिए। त्यस बेला उनका कुरा सुनेर मलाई निकै रमाइलो लागेको थियो।

यहाँ आएपछि एक दिन बजारतिर डुल्दा एक ठाउँमा थरीथरी आकार-प्रकारका तिनै गुड्ने घरहरू बेच्न राखिएको देखेको थिएँ। दस-बाह्र फिट चौडाइ र तीस-चालीस फिटसम्मै लम्बाइ भएका ती आवासहरू मेरा मित्रले भनेझैँ सबै सुविधाले भरिपूर्ण थिए। बुझ्दै जाँदा थाहा पाएको थिएँ– ठाउँठाउँमा त्यस्ताका पनि पानी, ढल र अन्य आवश्यक व्यवस्था गरी बनाइएका कम्युनिटीहरू हुँदा रहेछन्। तर त्यहाँ ती घर राखेर बस्न चाहनेहरूले भाडा तिर्नुपर्दो रहेछ। त्यस्तामा सामान्यतया निम्न आय हुनेहरू बस्दा रहेछन्। एक

दिन छोरीले सय वटाजति बास भएको एउटा मोबाइल होम कम्युनिटी देखाएकी थिइन्। पछि मैले धेरै ठाउँमा देखें त्यस्ता आवास क्षेत्रहरू। केही सौखिनहरूले त्यस्ता घर रिसोर्टमा लगेर राख्ने अनि तिनैमा आरामले बसेर बिदा मनाउने पनि गर्दा रहेछन्।

हिँड्दै जाँदा हामी मूल सडकको चौबाटोनेर पुग्यौं। त्यहाँ दाहिनेतिर त्यस कम्युनिटीको अफिस पनि थियो। त्यसैको सामुन्ने बाटोनेर पताकाहरू देखेर मैले भनें– "यहींबाट त हो हामी पहिलो पटक आउँदा छिरेको।"

उनले सरर चारैतिर हेरिन् र सोचेझैं गरी भनिन्– "ए, त्यसो भए यहाँ दुइटा निकास रै'छन्। हिजो हामी बाहिर जाँदा यताबाट निस्केझैं त लागेन!"

मैले मूल सडकको दायाँबायाँ परपरसम्म हेरें– सोझो सडकका दुवैतर्फ फराकिला पेटीहरू र तिनका छेउछेउ समदूरीमा रोपिएका क्रमबद्ध सुन्दर रूखहरू। टाढा हेर्दा सडकसहित रूखका ती लहरहरू साँघुरिँदै गएझैं लाग्थे। बाटामा लस्करै गाडीहरू कुदिरहेका थिए, दुवै

दिशामा। तर आश्चर्य, कतै एउटै मान्छे देखिएन ! बिलकुलै निर्जन।

आठ-दस वटै गाडी आवतजावत गरे। केही चालकले आँखा जुध्दा "हाई-हेलो" पनि गरे, तर कुनै मान्छे यताउति हिँडेको वा बाहिर निस्केको देखिएन, यी सफाइ टोलीका मान्छेसिवाय! केटाकेटीहरू त खेल्नुपर्ने नि बाहिर चौरमा वा त्यत्रो पार्क छ, त्यसमा! यतिका दिन भयो कसैलाई देखेको छैन बाहिर। कस्तो निर्जन बस्ती जस्तो !

"यहाँ मान्छेहरू सामान्यतया घरबाहिर निस्कन्नन् रे। कुनै मान्छे घरबाहिर देखियो भने उसले कुकुरलाई घुमाउँदै छ वा दिसा-पिसाप गराउँदै छ भन्ने बुझ्ने हुन्छ रे।" उनले छोरीबाट पाएको जानकारी मलाई बाँडिन्– "यहाँ केटाकेटीलाई पनि बाहिर एक्लै खेल्न दिइन्न। एक जना अभिभावक साथमा हुनुपर्छ रे।"

हुन पनि यहाँ घरभित्रैबाट ग्यारेजमा निस्कन सकिन्छ। गाडीमा बसेर रिमोट थिचे ग्यारेजको ढोका खुल्ने र बन्द हुने व्यवस्था छ। गाडी बाहिर निकाल्यो, रिमोट

थिचेर ढोका बन्द गऱ्यो अनि घुइँक्यायो सवारी। को देखिन्छ त बाहिर ? छेउछाउमा छैन कुनै पसल। हामीतिर जस्तो घरैपिच्छे पसल हुँदा रहेनछन् यहाँ। परपर, एकुन्टा इलाकामा व्यवस्थित रूपमा बसाइएका हुँदा रहेछन्। नुन सकिए खुर्र कुदेर ल्याऊँ भने आधा घण्टाले पनि के मान्ला ! अनि गाडीमै जानुपऱ्यो। हिँड्ने त कामै देखिएन यहाँ।

"अलि परसम्म जाऊँ न। त्यता केके रै'छ हेरौँ।" उनले हामी पहिले एयरपोर्टबाट आउँदाको भन्दा विपरीत दिशातर्फ जाने इच्छा देखाइन्।

हेरौँ न त भनेर हामी मूल सडकको देब्रेतिरको पेटीपेटी हिँड्न थाल्यौँ। हाम्रो कम्युनिटीको हाता सकिएलगत्तै जङ्गल आयो। यहाँ धेरैजसो आवासीय क्षेत्रहरू जङ्गल फाँडेर बनाइएका रहेछन्। घना जङ्गल काट्दै एकपछि अर्को त्यस्ता क्षेत्रहरू निर्माण भइरहेका देखेर 'यसो किन गरेका होलान् ?' भन्ने जिज्ञासा मनमा पलायो। एक-दुई ठाउँमा स्वचालित आराले काटेर ठूलठूला सल्लाका रूख ढालेको देख्दा मैले

बेलाबेला सोच्ने गरेका कुरा सम्झिएँ– हाम्रो चारकोसे झाडी फाँडेर त्यहाँ विकासका पूर्वाधारहरू पुऱ्याउन नसकिएर कष्टकर जीवन बिताइरहेका दुर्गम क्षेत्रका बासिन्दाहरूको बसोबास गराउन सके बढी उत्पादक हुन्थ्यो कि ! जङ्गलको मलिलो माटोमा बढी उब्जनी हुने हुनाले मान्छेको जीवनस्तर उचाल्न थप सहयोग मिल्थ्यो कि ! जङ्गलका फाइदाहरू त विकसित प्रविधिको प्रयोगद्वारा अन्यत्रै सुहाउँदो ठाउँमा वृक्षरोपण गरेर छोटो अवधिभित्रै पनि लिन सकिन्छ ।

आकाश खुला थियो । मन्दमन्द हावा चलिरहेको थियो । हामी जङ्गलको छेउछेउ हिँड्दै थियौँ । म बेलाबेला आफ्नै धुनमा घोत्लिँदै पनि थिएँ । हिँड्दाहिँड्दै एक ठाउँमा श्रीमतीले एकाएक मेरो हात च्याप्प समातिन् र उत्तेजित स्वरमा भनिन्– “उः, हेर्नुहोस् त मृग !”

अमेरिकाको मूल सडकछेउ तीन वटा मृग चरिरहेका थिए, स्वच्छन्द । यो हाम्रा निम्ति आश्चर्यजनक र अकल्पनीय दृश्य थियो । दुवै जना टक्क अडिएर

हेऱ्यौँ। हाम्रो उपस्थितिको आभास पाएर होला, ती जनावरले पनि हामीतिर हेरे। उनीहरू एक छिन घोरिए अनि फर्केर कुदे जङ्गलभित्र। हामीले हेराहेर गऱ्यौँ एक-अर्कालाई र आश्चर्यमिश्रित आनन्दमा रमाउँदै अगाडि बढ्यौँ।

सडकमा गाडीहरू बेतोडले कुदिरहेका थिए, निरन्तर। कहिलेकाहीँ ठूलो ट्रक छेवैबाट स्वाइँ गर्दै जाँदा तर्सिइयो पनि। एक-दुई मिनेटजति अघि गएपछि उनी केही खिन्न स्वरमा बोलिन्– "यहाँ मान्छेहरू बाटामा हिँड्दै नहिँड्ने भएर होला है, जसले पनि गाडीबाट हामीलाई हेर्ने !"

"तिम्रो यो सलवार-कुर्ता उनीहरूलाई मन परेर होला नि !" मैले हाँसो गरेँ।

अमेरिका आउनुअघि यता आएर फर्केका साथीहरूले उनलाई पाइन्ट र कुर्ती लिएर जान भनेका थिए। "नभए त भाउजू त्यहाँ बाटामा हिँड्दा आफैँलाई अप्ठ्यारो लाग्छ।" उनीहरूले अत्याएका थिए।

अमेरिकामा सबैजसो आइमाईले पाइन्ट लाउने हुनाले साथीहरूले आफ्नो अनुभवका आधारमा दिएको सल्लाह राम्रै थियो। तर उनले आफ्नो स्वभावजन्य कारणले होला, त्यस्ता कपडा ल्याएकी थिइनन् र यहाँ आएपछि पनि आफूले सधैँ लाउने खालकै लुगा लाएकी थिइन्। मेरो ठट्टा सुनेर उनले एक पटक पुलुक्क मलाई हेरिन् र अलि छिटो चालले अगाडि हिँडिन्। तर केही पाइलापछि नै उनी टक्क रोकिइन् र एकटक जङ्गलतिरै हेरिरहिन्। मैले पनि देखेँ– त्यहाँ दुइटा मृग मग्न चर्नमा थिए।

ओहो, यस जङ्गलमा यतिका मृग ! दिउँसै यसरी खुलामा आएर चर्छन्। छेवैमा त्यत्रो ठूलो बस्ती छ। यहाँ फेरि सबैसँग बन्दुक हुन्छ रे। कानुनी रूपमै राख्न पाउँछन् रे। कसैले पनि मार्ने विचार गर्दा रहेनछन् ! सोचेँ– हाम्रो नेपालमा भए त एउटा बहादुरले यिनको सिकार गरेर भोज लाइसक्थ्यो। सके छोरी-ज्वाइँका घर कोसेली पठाउँथ्यो। अझ, त्यसको छाला सुकाएर आफ्नो बैठकमा झुन्ड्याउँथ्यो,

शोभा बढाउन !

म सोच्दै थिएँ, एकाएक मोबाइलको घण्टी बज्यो। हामी बाहिर निस्कँदा बाटो बिर्सन्छौँ कि, हराउँछौँ कि भनेर छोरीले मलाई मोबाइल दिएकी थिइन्। त्यो विद्युतीय भाँडो हामीलाई भन्दा पनि अमेरिकाका सामान बिक्रेताहरूका निम्ति बढी उपयोगी भइरहेको थियो। मैले पहिलो पटक छोरी वा ज्वाइँसाहेबले केही परेर फोन गरे होलान् भनेर "हेलो" मात्र के भनेको थिएँ, उताबाट नाके स्वरले अङ्ग्रेजीमा फररर भट्ट्याउन थाल्यो। त्यसै त म घोरिएर सुन्दा पनि यहाँको अमेरिकन इङ्लिस बुझिहाल्न नसकेर पसलहरूमा सामान किन्न जाँदा लाटो जस्तो भइरहेको थिएँ, झन् सन्दर्भै थाहा नभएको विषयमा उसले सुनाएको प्रवचन मैले के बुझूँ! त्यसै अलमलमा परेको थिएँ, सुरुसुरुमा। तीन-चार पटक नै त्यस्तो भएपछि मैले "के हो यो" भनेर छोरीलाई सोधेको थिएँ। उनले "केही होइन, बिक्री प्रवर्धन गरेको हो; तपाईंले वास्ता नगर्नुहोला वा चाहिँदैन भन्दिनुहोला" भनेदेखि मैले पनि त्यस्तो फोन

आए टेर्न छोडेको थिएँ।

मोबाइल झिकेर नम्बर हेरेँ, छोरीको रहेछ। धेरै बेरसम्म पनि नफर्केकाले हामी कहाँ छौँ भनेर बुझ्न खोजेकी रहिछन्। हामीले लन्ठ्याङलुन्ठुङ गर्दागर्दै दुई घण्टा बितिसकेको रहेछ।

“अब आइहाल्छौँ।” मैले फोन बन्द गरेँ।

फर्कँदा हामीले कम्युनिटीको पल्ला छेउतिरको बाटो समात्यौँ। त्यतातिर तीन-चार वटा नयाँ घरहरू बन्दै थिए। यहाँ घर बनाउँदा जगका निम्ति जमिनका चारैतिर डेढ फिटजतिको खाल्डो खनिँदो रहेछ। त्यसैभित्र हावा, पानी, ग्यास, विद्युत्, आदिका पाइपहरू ओछ्याउने काम गर्दा रहेछन्। खाल्डाको चारैतिर दुई फिट अग्लो र नौ इन्च चौडाइको कङ्क्रिट ढलान गरेर त्यसमा नट-बोल्ट अड्काइँदा रहेछ। तिनै नट-बोल्टमा काठका खाँबा कसेर काठैका फल्याक र बोर्डहरू ठोक्दै दुई जना मिस्त्रीले पूरै घर ठड्याउँदा रहेछन्। किला ठोक्ने औजार पनि स्वचालित बन्दुक

जस्तो हुँदो रहेछ। जहाँ चाहिएको हो, त्यहाँ ताकेर त्यसको घोडो थिचे कसेर ठोकिइँदो रहेछ किला। अर्कातिर एउटा घरको छानो छाउने काम भइरहेको थियो। छाना पनि काठैको हुँदो रहेछ। काठका फल्याकमाथि बिटुमिन फेल्ट (फ्याक्ट्रीमा अलकत्रा दलेर तयार पारिएको कपडा) छापेर एकै दिनमा छत तयार पार्दा रहेछन्। पछि छोरीले भनेकी थिइन्– "पूरै घर एक-डेढ महिनामा तयार भइसक्छ।"

एउटा घरको भित्री भागमा दुई जना कुइरेले रङ्ग लाउने काम गरिरहेका थिए। उनीहरूका कपडाभरि रङ्गीन छिटाहरू थिए। भित्र विद्युत्को काम पनि भइरहेको थियो। यहाँ बिक्रीका निम्ति हुन् वा भाडाका निम्ति घर भनेका पर्दा, कार्पेटसहित पूर्णतः सिँगारिएका र भान्सामा चाहिने फ्रिज, ओभन, माइक्रो वेभ, भाँडा माझ्ने मेसिन, कपडा धुने मेसिन आदि-इत्यादि सबै जडान गरिएका हुँदा रहेछन्। यस भेगमा गर्मी बढी नहुने हुनाले घरहरूमा वातानुकूलित व्यवस्था चाहिँदो रहेनछ। बरु जाडोमा कोठाहरू

न्यानो पार्न घरका भित्ताहरूमा ग्यासले तताएको तातो हावा फाल्ने व्यवस्था गरिँदो रहेछ। यहाँ ग्यासका निम्ति सिलिन्डर लिएर लाम लाग्न पनि पर्दो रहेनछ। पानीमा जस्तै मिटर राखेर पाइपबाट निरन्तर आपूर्ति भइरहँदो रहेछ। आह ! हामीकहाँ घरीघरी पेट्रोल, ग्यास, मट्टीतेलमा लाम लाग्नुपरेर भोगेका कष्ट सम्झिँदै कहाली लाग्छ। यहाँ देख्छु– सबै थोकको आपूर्ति व्यवस्था सहज र सुविधायुक्त छ। यस्ता दैनन्दिनका आवश्यक वस्तुहरूको जोहो गर्न यहाँका मान्छेले हामीहरूले जस्तो आफ्नो सम्पूर्ण ऊर्जा रित्त्याउनुपर्दो रहेनछ।

मैले त्यहाँ पनि को इन्जिनियर हो, को ओभरसियर वा त्यस्तै को ज्यामी मात्रै हो भनेर छुट्ट्याउन सकिनँ। सबै उस्तै देखिए। सबैले बराबर उत्साह र तन्मयतासाथ काम गरिरहेका थिए। त्यहाँ बाटोछेउ थुप्रै कारहरू पनि पार्क गरिएका थिए। मैले अनुमान गरेँ– यी गाडीहरू यिनै कामदारहरूका हुनन्। यहाँ ज्यामी काम गर्नेले पनि गाडी चढ्छन्। काम

सकेपछि लुगा फेरेर आ-आफ्ना वाहनमा निवास फर्किन्छन् । यहाँ कामको वा कामदारको ठूलो अथवा सानो भन्ने विभेद रहेनछ । सबै बराबरी, सबैको उत्तिकै महत्त्व, उत्तिकै इज्जत । क्या बात !

हामी पेटीपेटी अघि बढ्यौँ । देख्यौँ, सरसफाइको टोली अहिले यताको खण्डमा रहेछ । लन्चको समय भएकाले सबैले आ-आफ्ना खानेकुरा झिकेर खाँदै थिए । मैले सोचेँ– यीमध्ये केहीले घरैबाट लिएर आएका हुनन् र केही एक्लै बस्ने वा नभ्याउनेले ड्राइभ थ्रुबाट किनेर ल्याएका हुनन् । यहाँ बाटोबाटै विभिन्न कम्पनीका त्यस्ता ड्राइभ थ्रु रेस्टुरेन्टहरू छन्, जहाँ यसो गाडी पसालेर माइक भएको ठाउँमा लानुपर्छ र त्यहाँबाट आफूलाई चाहिने परिकार अर्डर गर्नुपर्छ, अनि फन्को मार्दै अर्कोतिर पुगेर पैसा तिरे गाडीमै बसीबसी सामान लिन सकिन्छ । पर्खनु पनि पर्दैन । मैले पछि यहाँ त्यस्ता फार्मेसी र ब्याङ्कहरू पनि देखेँ ।

चोकमा पुगेर दाहिने मोडिँदा त्यताको खण्डमा

सरसफाइ सकिएर पानी छर्कने कार्य भइरहेको देख्यौँ। यहाँका भूमिगत पाइपमा सात-आठ फिटको दूरीमा प्लास्टिकका स्प्रिङ्कलहरू जडान गरिएका हुँदा रहेछन्। स्विच खोलेपछि तिनले घुमीघुमी चारैतिर पानी फाल्दा रहेछन्। त्यसैले जताततैका चौरहरू सधैँ हरियापरिया। बोट-बिरुवाहरू पनि सप्रेका रहेछन्।

हामी पानीका छिटाबाट जोगिँदै हिँड्दै थियौँ। बाटाहरू पनि भिजेका थिए। सम्झेँ– हाम्रो देशमा भर्खरै प्रजातन्त्र आएको थियो। राजधानीका जनताले पानीको महामारी भोगिरहेका बेला एक ठूलै नेताले मेलम्ची परियोजनाको सन्दर्भ जोड्दै त्यहाँको पानी ल्याएर हामीले सडक पनि धुन सक्छौँ भन्ने आशयको भाषण गरेका थिए। सत्र-अठार वर्षै भइसक्यो, मेलम्चीले अझै पनि समाचारमा प्रमुखता पाइरहेको छ र काठमाडौँका काकाकुल जनता 'एक दिन त मेलम्ची आउँछ नि' भन्ने आसमा प्रत्येक पल खडेरी भोगिरहेका छन्। आह, कस्तो विडम्बना!

सुइँसुइँ घुम्दै प्लास्टिकका काला डल्लाहरूले चारैतिर

गोलाकार फोहोरा फालेको देखेर आसन्न खतरा छल्न मैले छिटछिटो पाइला चालेँ। मलाई थाहा थियो– यो देखेपछि मेरी भार्यालाई काठमाडौँमा भोग्दै आएको समस्याको सम्झना हुन्छ र उनले मेरा अघि दुखेसो व्यक्त त गर्छिन् नै, सके अब काठमाडौँ जानै नपरे हुन्थ्यो पो भन्छिन् कि भन्ने डर मलाई भइरहेको थियो। हुन पनि तीन दिन बिराएर एक घण्टा बल्लबल्ल पानी आउँछ। त्यो पनि के आउँछ भनूँ, पम्प लाएर तान्नुपर्छ। अझ त्यसै बेला लोडसेडिङको मार खेप्नुपर्दाको बह कसलाई पोख्ने, हरे!

यसरी छिटछिटो हिँड्दा उनले झन् नराम्रो मान्लिन् भनेर म रोकिएँ। पानी खोल्ने भाइलाई मैले धन्यवाद भन्नुपर्छ। त्यहाँको सिँचाइ प्रक्रिया देखेर उनी निकै प्रफुल्लित भइछन् क्यार। छेवैमा आएर “आहा! कति राम्रो व्यवस्था, है” भनिन्।

हत्त र पत्त “हो त कति जानेका” भनेर म फिस्स हाँसेँ।

म उभिएको ठाउँको दाहिनेतिर एउटा सानो बगैँचा रहेछ। यहाँ बगैँचाहरू ससानै बनाउँदा रहेछन्। त्यहाँ जिनिया, सयपत्री, लाहुरे, प्युटिनिया, ड्र्यागन र मैले नदेखेका केही बैजनी र पहेँला फूलहरू फुलेका थिए। छ्यासमिस पारेर रोपिएकाले होला, बडो नै आकर्षक थियो त्यो फूलबारी। त्यसैको छेउमा बाकससहितको काठको पाटी देख्यौँ। त्यसमा 'हाम्रो सरसफाइ र सिँचाइको काममा केही कमी-कमजोरी देख्नुभएको छ अथवा केही सुझाव छन् भने कृपया लेखेर यहाँ खसालिदिनुहोला अथवा तलको ठेगानामा इमेल गरिदिनुहोला' भन्ने लेखिएको थियो। तल कम्पनीको नाम, ठेगाना र इमेल थियो।

"यहाँ सरसफाइको ठेक्का निजी कम्पनीले लिँदा रहेछन्।" सबै पढिसकेपछि उनले भनिन् र मतिर हेरेर "अब जाऔँ" भनेझैँ टाउको हल्लाएर हिँडिन्। म पनि लम्किएँ।

अलिकति हिँडेपछि म एउटा खाँबोमा पाँच फिटजति माथि झुन्ड्याइएको काठको पेटीमा कुकुरको तस्बिर

देखेर रोकिएँ। त्यसमा पाल्तु जनावर राख्नेले पालना गर्नुपर्ने नियमहरू लेखिएका थिए। छोरीले एक दिन भनेकी थिइन्– “यहाँका मान्छेहरू कुकुर-बिराला पाल्न एकदमै सौखिन छन्। यहाँ किसिमकिसिमका कुकुरहरू देख्न पाइन्छन्। कुनै बाघजत्रा, कुनै साना; छाउरै पो हुन् कि जस्ता। मान्छेभन्दा पनि बढी स्याहारसुसार पाउँछन् यहाँ जनावरहरूले।”

“अँ, हामी आउँदा एयरपोर्टमा एउटी आइमाईलाई रातो रिबनले चुल्ठो बाटिदिएको गुडिया जस्तै कुकुर बेतको कोक्रामा बोकेर उभिएकी देखेकी थिएँ।” छोरीका कुरा सुनेर आमाचाहिँले थपेकी थिइन्।

मैले बजारतिर एक-दुई ठाउँमा कुकुरको कपाल काट्ने र सिँगार-पटार गर्ने सेलुन, उनीहरूलाई नुहाइधुवाइ गर्ने स्पा र उनीहरूकै मात्र खानेकुरा पाइने पसलका साइनबोर्डहरू देखेको थिएँ। त्यस्तै पसलहरू बिरालाका निम्ति पनि थिए। एउटी अमेरिकी महिलाले आफू मरेपछि अथाह सम्पत्ति आफ्नो कुकुरको नाममा छोडेको पनि कतै पढेको थिएँ। अहिले त्यहाँ लेखेको

पढ्दा थाहा लाग्यो– यहाँ घरपालुवा जनावरहरू त्यसै खुला छोड्न पाइँदो रहेनछ। उनीहरूको दिसा-पिसाप उपयुक्त ठाउँमा थान्को लाउनुपर्दो रहेछ। त्यस पेटीमा प्लास्टिकका नीला र पहेँला झोलाहरू पनि राखिएका थिए।

सूचना पढिसकेपछि उनी मरीमरी हाँस्न थालिन्। मैले सोध्दा उनले हाँसेकै स्थितिमा भन्दै गइन्– "हिजो बिहान मैले एउटी आइमाईले कुकुर डोऱ्याउँदै लगेको देखेकी थिएँ। उसको हातमा यस्तै झोलामा केही थियो। मैले त कुकुरकै खानेकुरा लिएर घुमाउन हिँडेकी होली भन्ने सोचेकी थिएँ। ए, त्यसले त कुकुरको आची पो बोकेकी रै'छ !"

हाँस्दाहाँस्दै हामीले एक्कासि आइमाईको आवाज सुन्यौँ। देख्यौँ– एउटी गोरी महिलाले आफ्नो कुकुरलाई केही भन्दै थिइन्। उनको त्यो खेलौना जस्तै सानो कुकुरले मलाई सुँघ्दै थियो।

"यिनीहरूले तिमीलाई लगेर पाल्दैनन् मेरी हृदयप्यारी,

आऊ !" ती महिलाले मृदु स्वरमा भनिन् ।

त्यो कुकुर कुरो बुझेझैँ गरी फनक्क फर्क्यो। महिलाले उसलाई काखमा उचालिन् र सुमसुम्याउँदै म्वाइँ खाइन्, अनि हामीतिर हेरेर मुसुक्क हाँसिन् । मैले कुकुरतिर हेरेँ। ऊ आनन्दले आँखा चिम्लेर गुटमुटिएको थियो आफ्नी मालिक्नीको न्यानो काखमा ।

मेरो मन अनायास अमिलियो। सम्झेँ– हाम्रो देशका सडक बालबालिकाको दुःखदायी स्थिति । अनेक तर्कनाहरू ओइरिए मनमा । नरमाइलो लाग्दै गयो। म खिन्नतासाथ श्रीमतीसँगसँगै पाइला चाल्दै गएँ घरतिर– मौन, निस्तब्ध ।

# आज अमेरिकामा रमिता छ

एउटो बुर्कुसी मारेर उफ्रिँदै थियो। अर्की पातलो तारमाथि उभिएकी थिई र दुवै हात तेर्स्याएर दायाँबायाँ चुइँचुइँ मच्चिँदै पिङ खेल्दै थिई। छेवैमा अर्कोले खुट्टाले ढ्वाङढ्वाङ पार्दै बडेमानको ड्रम बजाउँदै थियो। सामुन्नेको मोटेले मुखबाट हुर्रहुर आगो फालिरहेको थियो। अलि पर एउटाले जोकर जस्तो अनुहार पोतेर पाँच-छ वटा टेनिस बल हावामा फाल्दै समात्दै थियो। केही टाढा तीन जनाले साङ्गीतिक कार्यक्रम प्रस्तुत गर्दै थिए। एउटो हात्तीवेशधारी केटाकेटीहरूलाई जिस्काउँदै हिँड्दै थियो।

प्रशान्त महासागरको पगेट साउन्डको किनारमा रहेको चौर र त्यसवरपर ठूलै रमिता थियो। सयौँ मान्छेको भीडले थपडी मार्दै चटकेहरूलाई हौस्याइरहेको थियो। ती चटकेमध्येका दुई जना अदबसाथ झुक्दै

दर्शकहरूसामु टोपी तेर्स्याएर पैसा माग्दै पनि थिए। केही युवाहरू, शरीरभरि खोपिएका आकर्षक टाटु देखाउन होला, पाइन्ट मात्र लाएर हिँडेका थिए। फुटपाथका छेउछेउ चस्मा, पेटी, जुत्ता-चप्पल, कपडा आदिका अस्थायी पसलहरू सजाइएका थिए। सामुन्ने एउटा शृङ्गार पसल देखियो। त्यसमा युवतीहरूको भीड थियो। कसैले कपाल सिँगार्ने, कसैले मेकअप गर्ने अनि कसैले नङ मिलाउने काम गरिरहेका थिए। हूलका हूल मान्छेहरू बाटोबाटो हिँडिरहेका थिए। केटाकेटीहरू पनि रङ्गीचङ्गी कपडा र टाउकामा चम्किला टोपी लाएर उफ्रीउफ्री हिँड्दै थिए। चारैतिर उल्लासमय वातावरण थियो। टन्टलापुर घाम लागेकाले गर्मी पनि राम्रै थियो। ज्वाइँसाहेबको प्रस्तावमा आमाछोरी पनि उहाँसँगै छेउको पसलमा आइसक्रिम खान गएका थिए। म पेटीको एक छेउ उभिएर कौतूहल, आनन्द अनि आश्चर्यका साथ हेरिरहेको थिएँ– अमेरिकाको स्वतन्त्रता दिवसका अवसरमा जनसाधारणले खुसीयाली मनाउँदै गरेको अनौठो रमिता।

मलाई विशेषत: अमेरिकी चटकेहरूको कृत्यले बढी चकित पारिरहेको थियो। बेलाबेला म टोलाइरहेको पनि थिएँ। लाग्यो, पटनाको गान्धी मैदानमा उभिएर म रमिता हेर्दै छु। पन्ध्र वर्षजतिअघि कामविशेषले त्यहाँ गएका बेला फुर्सदमा घुम्दै जाँदा मेला लागेको देखेर म पसेको थिएँ, त्यस बडेमानको चौरमा। त्यसरी नै मच्चिएकी थिई तारमा एउटी बन्जारिन केटी, लामो बाँस दुई हातले समातेर। त्यहीँ त हो टाउकामा मजेत्रो जस्तो रातो टालो बाँधेको एउटा च्याँसे केटाले त्यस्तरी नै मुखबाट आगो फालेर चटक देखाउँदै थियो। बलेको ऱ्हीरको आगो निभाउन मुखभित्र हाल्ने क्रममा के नमिलेर हो, ऊ पोलिएछ्रँ आत्तिएर कराएको थियो र एकै छिन मेलामा कोकोहोलो मच्चिएको थियो। कस्तो घुइँचो थियो त्यस मेलामा ! हल्लीखल्ली पनि उस्तै। हपहपाउँदो गर्मीले अत्तालिएर म केही बेरमै पसिना पुछ्दै निस्केको थिएँ त्यहाँबाट।

“भोलि हामी सियाटलतिर घुम्न जाने।” राति खाने बेला ज्वाइँसाहेबले भन्नुभएको थियो।

उहाँका कुरा सुनेपछि म एक छिन अलमलिएको थिएँ र सोचेको थिएँ– भोलि सप्ताहान्त त होइन। उहाँ कामबाट फर्कंदा बेलुकी प्रायश: अबेर भइसकेको हुन्छ। यी केही दिन उहाँको दिनचर्या नियाल्दा बेलुकीतिर घुम्न बाहिर निस्कने कुरो सम्भव हुने देखेको थिइनँ।

मेरो जिज्ञासु अनुहार देखेर होला, उहाँले स्पष्ट पार्नुभएको थियो– "भोलि मेरो अफिस छैन; अमेरिकाभरि नै राष्ट्रिय बिदा छ।"

के हो र भोलि? म अलमलिएको देखेर सायद, मैले सोध्न नपाउँदै उहाँले कुरा खोल्नुभएको थियो– "भोलि ४ जुलाई हो, अमेरिकाको स्वतन्त्रता दिवस।"

यो मेरा निम्ति उदेकलाग्दो जानकारी थियो। मैले सोच्न थालेको थिएँ– अमेरिका कहिले कसको दास थियो र? यी गोराहरू युरोपबाट यहाँ आएर बसे। धेरै त अङ्ग्रेज नै थिए। तिनैले राज गरे यहाँ; आदिवासीहरूलाई थिचोमिचो गरे। अरु, अर्को गोलार्धका

अफ्रिकी कालाहरूलाई सिक्रीले बाँधेर ल्याईल्याई दास बनाए, अनि फेरि केको स्वतन्त्रता ? कस्तो लडाइँ ? मैले छक्क पर्दै सोच्दै गएँ ।

थाहा थियो– पृथ्वीको पश्चिमी गोलार्धमा अवस्थित राष्ट्र, संयुक्त राज्य अमेरिका अहिले संसारको सबैभन्दा विकसित मुलुकमा गनिन्छ । रूस र क्यानाडापछि पृथ्वीको तेस्रो ठूलो भूभाग ओगटेको यस राष्ट्र (कसैकसैले चीनलाई तेस्रो स्थानमा राख्छन्) को जनसङ्ख्या तीस करोड एघार लाख चानचुन छ । बढी आबादी भएको मुलुकका हिसाबले केलाउँदा पनि यो चीन र भारतपछि तेस्रोमा पर्दछ । उनान्सय प्रतिशत जनता साक्षर भएको यस राष्ट्रमा पचास वटा राज्य, एउटा डिस्ट्रिक्ट र चौध वटा फेडरल टेरिटोरी छन् । यस देशको इतिहास धेरै पुरानो होइन । सन् १७७६ मा स्थापना भएको संयुक्त राज्य अमेरिका संसारको सबैभन्दा पुरानो संवैधानिक गणतन्त्रात्मक देश हो । हुन त यस भूभागमा बसोबास गर्दै आएका रेड इन्डियन आदिवासीहरू बाह्र सय वर्षजति अघि एसियातिरबाट आएका हुन्

भनिन्छ । यो बसाइँसराइ चार हजार वर्षअघिदेखि भएको हो भन्ने भनाइ पनि छ । तर यस भूखण्डको अवस्थितिको प्रथम जानकारी संसारलाई दिने श्रेय स्पेनदेखि आएका इटालियन खोजकर्ता क्रिस्टोफर कोलम्बसलाई जान्छ । उनले सन् १४९३ मा यस क्षेत्रमा पाइला टेकेपछि नै यहाँ विदेशीहरूको आगमन प्रारम्भ भएको मानिन्छ ।

जिज्ञासा बढ्दै गयो । थाहा पाएँ– सुरुमा युरोपका बासिन्दाहरू यहाँ आएर फ्लोरिडामा बसेका रहेछन् । केही पछि दक्षिण-पश्चिम इलाकामा स्पेन र मेक्सिकोका नागरिकहरूको बसोबास भएको रहेछ । फ्रेन्च व्यापारीहरू पनि सुरुमा आएर ग्रेट लेकमा बसेपछि गल्फ अफ मेक्सिकोसम्म फैलिएका रहेछन् । सन् १६०७ देखि ब्रिटिसहरू आउन थालेछन् । त्यसको सात वर्षपछि डचहरू आएका रहेछन् । अमेरिकामा अङ्ग्रेजहरूको आगमन बढ्दै गएर बसाइँसराइको पचास वर्ष नपुग्दै उनीहरूको सङ्ख्या दस हजारजति पुगेछ र न्यु इङल्यान्ड नामक बस्ती बसालेछन् । सन् १६३८ मा

स्वेडेनका नागरिकहरू पनि आएर बसेका रहेछन् तर तिनीहरू बसोबास गरेको इलाका कालान्तरमा डचहरूले कब्जा गरेका रहेछन्। सन् १६७४ मा ब्रिटिसहरूले एङ्लो-डच लडाइँमा जितेर डचहरूले स्थापना गरेको न्यु नेदरल्यान्ड नामक इलाका कब्जा गरेछन् र त्यसको पुनः न्वारन गरेछन्– न्यु योर्क।

सन् १७३२ मा जर्जियाको इलाका आफ्नो आधिपत्यमा पारेपछि अमेरिकामा ग्रेट ब्रिटेनको उपनिवेशको सङ्ख्या तेह्र पुगेछ। तिनै तेह्र वटा उपनिवेशको समूह नै पछि संयुक्त राज्य अमेरिका बनेछ। केही समयभित्रै त्यहाँ चुनाव भएछ र सरकार बनेछ। त्यस औपनिवेशिक राज्यको सरकारले अफ्रिकी दास व्यापारलाई वैधानिकता दिएछ र अफ्रिकाबाट थुप्रै मान्छे बन्दी बनाएर ल्याउन थालिएछ। सन् १७७० सम्म ती राज्यहरूमा अङ्ग्रेजहरूको आबादी ब्रिटेनको जनसङ्ख्याकै आधाआधी, तीस लाखजति पुगेको रहेछ। ब्रिटेनको उपनिवेश हुनाले त्यस बेलासम्म त्यहाँ ब्रिटेनकै कानुन चल्दो रहेछ र ब्रिटिसहरूकै हालीमुहाली रहेछ। कर पनि सात समुद्रपारिको माउ

सरकारलाई नै बुझाउनुपर्दो रहेछ। तर त्यहाँका नागरिकहरूले ब्रिटिस संसद्मा भने प्रतिनिधित्व गर्न पाउँदा रहेनछन्। त्यस्तै थिचोमिचोलाई लिएर सन् १७६० को दशकदेखि ७० को दशकसम्मै अमेरिकी सरकार र ब्रिटिस राजबीच विवाद चलेछ। यो विवाद कालान्तरमा अमेरिकी क्रान्तिकारी लडाइँमा परिणत भयो।

सन् १७७५ मा सुरु भएको त्यस लडाइँमा स्थानीय सरकारी फौजको नेतृत्व जनरल जर्ज वासिङ्टनले गरेका थिए। त्यसै बेला अमेरिकी सरकारले 'सबै मानिस बराबर बनेका हुन्' भन्ने घोषणासहित केही स्वतन्त्र अधिकार पनि लागू गरेको थियो। लडाइँकै क्रममा सन् १७७६ को ४ जुलाईका दिन अमेरिकाले आफूलाई ब्रिटिस साम्राज्यदेखि स्वतन्त्र भएको घोषणा गऱ्यो र सन् १७८९ मा जर्ज वासिङ्टन स्वतन्त्र संयुक्त राज्य अमेरिकाका प्रथम राष्ट्रपति चुनिए। छ वर्षसम्म चलेको त्यस लडाइँमा अमेरिकी फौजले विजय प्राप्त गरेको थियो। युद्ध हारेपछि सन् १७८३

मा ब्रिटेनले प्यारिस शान्ति सन्धि अन्तर्गत अमेरिकालाई स्वतन्त्रता प्रदान गरेको थियो।

४ जुलाई– अमेरिकाको स्वतन्त्रता दिवस, अमेरिकाको राष्ट्रिय पर्व। त्यसलाई अमेरिकीहरूले खुसी, उल्लास र गर्वका साथ धूमधामसित मनाउँदा रहेछन्। दिनभरि मान्छेहरू रमाइलोमै व्यस्त हुँदा रहेछन्। आजका दिन अमेरिकाभरि विभिन्न सार्वजनिक र निजी कार्यक्रमहरू आयोजना गरिँदा रहेछन्, अनि धेरैजसो सर्वसाधारणले पिकनिक जाने, सेकुवा खाने, नाचगान गर्ने, बेसबल खेल्ने जस्ता कार्यक्रमहरू गर्दा रहेछन्। ठाउँठाउँमा परेड पनि हुँदो रहेछ। विभिन्न राजनीतिक तथा सामाजिक व्यक्तित्वहरूले सभा-समारोहमा अमेरिकी परम्परा र ऐतिहासिक गाथाको चर्चा गरेर गौरवपूर्ण अभिव्यक्ति दिँदा रहेछन्। राति ठाउँठाउँमा आतसबाजी प्रदर्शन गरिँदो रहेछ। जानकारी लिँदै जाने क्रममा मलाई यो थाहा पाएर आश्चर्य लाग्यो– आजकै दिन अमेरिकीहरूले कुनै ब्रिटिस देखे जिस्काउने, घोचपेच गर्ने पनि गर्दा रहेछन्।

मैले सम्झेँ– झन्डै पच्चीस वर्षअघि हामी बागलुङको बलेवा विमानस्थलमा ओर्लेर कुस्मा जान कालीगण्डकीतिर झर्दै थियौँ। उताबाट आएका एक हूल स्कुले केटाकेटीले हामीसँगै हिँडेका ब्रिटिसतिर इङ्गित गरेर "अमेरिकन, अमेरिकन" भन्दै कराएका थिए।

"ह्वाट ननसेन्स !" हाम्रा ती वृद्ध अङ्ग्रेज मित्र रिसले झर्किएका थिए, अनि दुई-चार पाइला हिँडेपछि विरक्तिएको अनुहार लाएर मतिर हेर्दै अङ्ग्रेजीमै सोधेका थिए– "के म अमेरिकी जस्तो देखिन्छु र ?"

कुनै बेला संसारैभरि शासन गरेर कहिल्यै सूर्य नअस्ताउने देश भनी कहलिएको ब्रिटिस राजका ती नागरिकलाई हाम्रा केटाकेटीले अमेरिकी पगरी गुताइदिएकामा भएको खिन्नता मैले त बुझ्न सकेको थिएँ। तर सन् १९७० को दशकतिरदेखि पिसकोर स्वयंसेवकका रूपमा नेपालका पहाड-कन्दरामा पुगेका अमेरिकीबाहेक अन्य देशका मान्छे पनि कुइरे हुन्छन् भन्ने ती अबोध केटाकेटीलाई के थाहा र ! मैले हाम्रा मित्रलाई सबै कुरा बुझाउनुको अर्थ नदेखेर "यी

भुराभुरीले छुट्ट्याउन सकेनन्" भनेर स्थिति सामान्य पार्न खोजेको थिएँ।

रमिता हेर्दै पेटीपेटी पाँच मिनेट हिँडेर बाटो तरेपछि हामी पाइक मार्केट प्लेस नामक ठूलो छतले भवनमा पुग्यौँ। त्यो अमेरिकाको सबैभन्दा पुरानो कृषक बजार रहेछ। एक सय वर्षअघि, सियाटलमा एक जोर जुत्ताको मूल्य दुई डलर पर्नेताका, प्रतिपाउन्ड प्याजको भाउ वर्षदिनमै दस सेन्टबाट बढेर एक डलर पुगेछ। महँगीको मारले पिरोलिएका जनता बीचमा रहेर मुनाफा खाने व्यापारीहरूउपर क्रुद्ध भएछन् र ग्राहकले कृषकसँग सोझै सम्पर्क गर्न सकिने खालको सार्वजनिक बजारको व्यवस्था गर्न स्थानीय प्रशासनलाई दबाब दिन थालेछन्। त्यहींदेखि त्यो बजार स्थापना गर्ने अवधारणाको विकास भएको रहेछ। पहिलो दिन त्यहाँ केही किसानहरूले घोडागाडीमा आ-आफ्ना बारीका ताजा तरकारी र फलफूल बेच्न ल्याएका रहेछन्। हेर्दाहेर्दै तिनका सामानहरू एकै छिनमा बिक्री भएछन्। जनसाधारणको उत्साहप्रद सहभागिताको

फलस्वरूप एक वर्षभित्रै सन् १९०७ मा त्यस बजारको स्थापना भएको रहेछ। कालान्तरमा त्यस प्रकारका बजार अमेरिकाका अन्य सहरमा पनि स्थापना हुँदै गएका रहेछन्।

मैले ओलम्पियामा पनि त्यस्तै तर सानो बजार देखेको थिएँ। त्यहाँ बेच्न राखिएका रहरलाग्दा आरु देखेर किनेको पनि थिएँ। खाँदा ती फलहरू मैले सोचेझैँ रसिला र स्वादिला थिए। त्यस बजारमा घुम्दै, हेर्दै गर्दा मैले बिहानै खर्पनमा आफ्ना बारीका ताजा सागसब्जी लिएर असन तथा भोटाहिटीका बाटाछेउ बसेका हाम्रा ज्यापूहरूलाई सम्झेको थिएँ। साइकलमा तरकारी र फलफूलका टोकरी राखेर अचेल दैलादैला कराउँदै बेच्न हिँड्ने ससाना व्यापारीहरू पनि आँखामा झलझली नाचेका थिए। ती सबैका बीच मैले सम्झन पुगेको थिएँ– एकै दिनमा पाउको चार-पाँच रुपैयाँ बढ्ने हाम्रा तरकारीका दरहरू पनि।

पाइक मार्केटभरि जताततै मान्छे नै मान्छे थिए। कोही किनमेलमा व्यस्त थिए; कोही फोटो खिच्दै थिए;

कोही रमिता हेर्दै थिए। हामी पनि पसलमा सजाइएका सामानहरू र वरपरको रमाइलो हेर्दै हिँड्दै थियौँ। ताजाताजा फलफूल र तरकारी, विभिन्न जातका माछा, हस्तकलाका सामानहरू, कलात्मक तवरले सजाइएका सुन्दर र आकर्षक फूलका टोकरीहरू, पुराना किम्मती सामानहरू, किसिमकिसिमका मखुन्डाहरू, ऊनीका हातेबुना टोपी र मोजाहरू, केटाकेटीका लुगाफाटा, पुस्तकहरू र त्यस्तैत्यस्तै प्रकारका अनगिन्ती पसलहरू। कतैकतै मान्छेहरू समूहमा बाजा बजाउँदै गीत गाउँदै पनि थिए। ठाउँठाउँमा देखिने ससाना रेस्टुरेन्टमा ग्राहकहरूको घुइँचो थियो।

कृषक बजार हेर्दै जाँदा मैले हाम्रा गाउँघरमा लाग्ने हाटहरूबारे पनि सम्झिएँ। फार्मर्स मार्केट भनिने यहाँका कृषक बजारहरू पनि प्रारम्भमा हाम्रा हाट जस्तै गरी त विकास भएका रहेछन्। परापूर्व कालदेखि लाग्दै आएका हाम्रा गाउँका हाटहरूमा पनि स्थानीय किसानहरूले आफ्ना कृषि उपजहरू बेच्ने र आफूलाई चाहिने सामान किन्ने गर्दछन्। धनकुटा, दिक्तेल र

रुम्जाटारमा साताको निर्धारित दिनमा लाग्ने हाटहरू मैले देखेको छु। त्यस दिन मेलापात गर्न जाने भनेर मानिसमा हुने उत्साह तथा उमङ्ग हेर्नलायक हुन्छ। स्वयं उपभोक्ता बनेर हाटको रमाइलो परिवेशको आनन्दको उपभोग पनि गरेको छु। मधेशमा ठाउँठाउँमा लाग्ने हाटमा हुने चहलपहल र रमाइलोको त वर्णनै के गरूँ खोइ– कति राम्रो कतिकति ! भैरहवामा साताका दुई दिन लाग्ने हाटको आकर्षणलाई हिजोआजको विकसित परिवेशले पनि धमिल्याउन सकेको छैन; अझै पनि उस्तै छ। तर हाम्रा हाटहरू अलि व्यवस्थित छैनन्। केही वर्षअघि निर्मित कालीमाटीको तरकारी र फलफूल बजारलाई व्यवस्थित रूप दिन खोजिएको हो, तर सोचे जस्तो भइसकेको छैन।

पाइक मार्केटबाट निस्केपछि हामी सियाटलको प्रतीक मानिने स्पेस निडल हेर्न पुग्यौँ। सन् १९६२ मा बनेको टाउकामा सुइरो भएको त्यो संरचना छ सय पाँच फिट अग्लो रहेछ। त्यस धरहराको निर्माणपछि सियाटलमा थुप्रै अग्लाअग्ला भवन बने पनि धेरैजसो

स्थानीयवासीले अझै पनि त्यसैलाई अग्लो ठान्दा रहेछन् । त्यसमा पाँच सय दस फिटमाथि एउटा वृत्ताकार बार्दली बनेको रहेछ । विद्युतीय सिँढीमा चढेर दैनिक हजारौँ पर्यटकहरूले त्यहाँबाट सियाटल सहर र वरपरका पहाड तथा समुद्रको मनोरम दृश्यको आनन्द लिँदा रहेछन् । हामी पुग्दा टिकट काट्ने ठाउँमा निकै लामो लाम थियो । धेरै समय लाग्ने देखेर मन हुँदाहुँदै पनि हामी माथि चढेनौँ । त्यसै बार्दलीतल पाँच सय फिटको उचाइमा एउटा अकासे रेस्टुरेन्ट र उपहार सामग्रीको पसल पनि रहेछ ।

त्यस धरहरावरपरको क्षेत्रलाई सियाटल सेन्टरका रूपमा विकास गरिएको रहेछ । त्यहाँ पर्यटकका मनोरञ्जनका निम्ति थुप्रै विद्युतीय पिङहरू थिए । तीमध्ये एउटा आकाशसम्मै पुऱ्याएर घुमाउने खालको रोटे पिङ पनि थियो । त्यो पिङ माथिबाट तल खस्ने बेला त्यसमा सवार मान्छेहरू अत्तालिएर चीत्कार गरिरहेका थिए । छेवैमा मोनोरेलको स्टेसन देखियो । अकासे पुलमाथि कुद्ने त्यो विद्युतीय रेल पनि त्यहाँको

पर्यटकीय आकर्षणका वस्तुहरूमध्ये एक रहेछ। हामी त्यसमा चढ्यौँ। त्यो रेल सियाटल सेन्टरबाट एक माइलको दूरीमा रहेको वेस्टलेक सेन्टर नामक विशालबजारसम्म पुगेर फर्कंदो रहेछ।

सहरका ठूलठूला भवनका बीचैबीच बजारको माथिमाथिबाट गुड्दै गरेको रेलबाट चारैतिरको रमाइलो हेर्दाको आनन्द लिँदालिँदै लन्च खाने बेला भइसकेको थियो। हामी दुवैलाई स्वदेशी परिकार खाने मन थियो। तर त्यता रहेको नेपाली रेस्टुरेन्टसम्म पुग्न टाढै जानुपर्दो रहेछ।

छोरीले घडी हेर्दै भनिन्– "उल्टो बाटो परै पुग्नुपर्छ। नेपाली खाना बरु कुनै दिन खाउँला; आज बाटामै पर्ने एउटा भारतीय रेस्टुरेन्टमा खाऔँ, हुन्न ?" ढिलो भइसकेकाले हामीले छोरीको प्रस्तावमा सही थाप्यौँ र त्यहाँबाट फर्क्यौँ।

म अघिदेखि नै लघुशङ्काका निम्ति शौचालय खोज्दै थिएँ। सियाटल सेन्टरनेरै ऐनैऐना भएको सुन्दर भवन देखियो। त्यो म्युजिक सेन्टर रहेछ। त्यसमा नामुद

गायकगायिकाका कार्यक्रम हुँदा रहेछन् । त्यो भवन हेर्छु र त्यहाँको रेस्टरुम भनिने शौचालय पनि प्रयोग गर्छु भन्ने मनसायले छोरीसित सल्लाह गरेँ । मैले उनीहरूलाई जाँदै गर्न पनि भनेँ । गाडी राखेको ठाउँसम्म म पुग्न सक्छु-सक्दिनँ भन्ने कुरा छोरीले सोधिन् ।

"सकिहाल्छु नि ।" मैले हाते फोन देखाउँदै भनेँ– "नसके तिमीले दिएको मोबाइल छँदै छ ।" मेरा कुरा सुनेपछि उनीहरू सबै हाँस्दै फर्के । म पनि हान्निएँ त्यो सेन्टरतिर ।

भवनको भित्री भाग पनि आकर्षक रहेछ । भित्रैसम्म पुगेर हेरेँ– त्यहाँ ठूलो मञ्च रहेछ । जताततै रङ्गीबिरङ्गी बत्ती र सिनेमा छायाङ्कन गर्दा प्रयोग गरिने फलामे रिफ्लेक्टरहरू राखिएका थिए । त्यहाँ हुने कार्यक्रमहरूको भिडियो पनि खिचिँदो रहेछ भन्ने लाग्यो ।

शौचालयबाट बाहिर निस्केपछि मैले भवनको परिक्रमा गरेँ र चारैतिर हेरेँ, अनि रमाउँदै लामालामा पाइला

चाल्दै गाडी भएतिर लम्कें।

मलाई राम्रै सम्झना थियो– अघि पाइक मार्केट प्लेसबाट निस्केपछि हामीले एक ठाउँमा गाडी राखेका थियौं र पहिले दायाँ अनि बायाँ घुमेर पाँच मिनेटजति सोझो लाग्दै हामी निडलको चौरनेर आइपुगेका थियौं। त्यसैको नापोमा म हिँड्दै थिएँ, तर आश्चर्य, म त बाटाको अर्कोतिर पो पुगेछु! अघि आउने बेला देखेको पानीको फोहरा जसको छिटा परेर म झस्केको थिएँ, त्यो त पारिपट्टि छ। कहाँनेर खुस्केछ मेरो अडकल ? वर कसरी आइपुगेछु? पल्लो गेटबाट पो निस्कें कि क्या हो? मलाई त उता, पारिपट्टि जानु थियो। अब ढिलो हुने भयो, चौबाटोनेरै नपुगी हुँदैन। हिजै त हो धन्नले बाँचेको बाटो काट्न खोज्दा !

हिजो बजारतिर घुम्दै हिँड्दा एक ठाउँमा बाटाको पल्लोपट्टि योगा सेन्टर लेखेको देखेर हेरूँ न कस्तो रहेछ यहाँको योग सिकाउने ठाउँ भनेर सुरुसुरु त्यतै लागेको थिएँ। ओह, कस्तो आपत् परेको थियो एकसुरमा हिँड्दा ! झन्डै हुत्त्याएको थियो घुइँकिएर

आएको ट्रकले। कहाँ सकिँदो रहेछ र बीचबाट बाटो काट्न! पूर्ण खतरायुक्त हुँदो रहेछ। पन्ध्र मिनेट कुर्दा पनि गाडीको ताँती कम भएको नदेखेपछि "आऽ होस् है" भन्दै अगाडि बढेर मैले चौबाटोछेउ रोकिएर चारैतिर हेरेको थिएँ। ट्राफिक लाइटको खाँबामा कम्मरको उचाइमा स्विच जस्तो कालो केही देखेर नजिकै गएर नियालेको थिएँ। त्यो स्विच नै रहेछ। त्यसको छेउमा काँडको चिह्न बनाएर 'बाटो काट्न यहाँ थिच्नुस्' भन्ने लेखिएको रहेछ। मैले आफू जानुपर्ने दिशातिरको स्विच थिचेर पर्खेको थिएँ। एकै छिनमा 'विप-विप' को सङ्केतसँगै अङ्ग्रेजीमा 'बाटो काट्नुस्' भन्ने आवाज सुनिएको थियो। सामुन्नेको विद्युतीय पाटीमा मान्छे हिँडेको चित्र पनि देखाइँदै थियो। मैले छिटछिटो कदम चाल्दै बाटो काट्दै जाँदा कलेज पढ्नेताका सुनेको सरदारजीको ठट्यौली सम्झेको थिएँ।

गाडीका ताँतीले गर्दा अमेरिकामा बाटो काट्न नसकेर दुई घण्टादेखि आत्तिएको सरदारले पारिपट्टि

अर्को सरदारलाई देखेर उत्तेजनामा कराउँदै सोध्देछ– "बाटो कसरी काट्ने हँ?" पारिको सरदारले पुलुक्क हेरेछ र शान्त स्वरमा भनेछ– "कोसिस गर्दै जाऊ; म त यतै जन्मेको, अरु उता पुग्न सकेको छैन।"

अमेरिकामा मोटर गाडीको बाहुल्य दर्साउन कथिएको यो ठट्यौली त ठीकै हो, तर त्यस बेलाको अमेरिकामा बटुवाले बाटो काट्ने व्यवस्था कस्तो थियो कुन्नि! अहिले भने अन्धा र अपाङ्गहरूलाई समेत सहज पारिएको रहेछ।

बाटो काटिसकेपछि मैले फेरि फर्केर अलिकति पछिल्तिर आउनुपर्‍यो। गाडी राखेको ठाउँनेर पुग्दा छोरीलाई यताउति हेर्दै गरेको देखें। "कहाँ जानुभएको थियो बुबा? कति फोन गरें, उठाउनु पनि भएन!" छोरीले आश्चर्य भरिएको स्वरमा भनिन्।

म केही बोलिनँ, मोबाइल हेर्दै हाँसें मात्र। दुइटा मिसकल रहेछन्। मैले एकोहोरिएर मोबाइल पनि सुनेको रहेनछु। गाडीमा बसेपछि श्रीमतीले पनि मृदु

हाँस्दै प्रश्न तेर्स्याइन्– “कता हो रल्लिएको ?”

म फेरि हाँसेँ मात्रै ।

हाम्रो गाडी हाई वेतर्फ जाने बाटो समात्न कुद्यो । बाटोभरि मान्छेको भीड उस्तै थियो– सबै व्यस्त अनि आनन्दमा मस्त । चार-पाँच माइल गएपछि हामी एकाएक समुद्रभित्र गुडिरहेझैँ लाग्यो । हाम्रो आश्चर्य नथामिँदै ज्वाइँसाहेबले भन्नुभयो– “वासिङ्टन तालमाथि सन् १९६३ मा बनेको यो एभरग्रिन पोइन्ट फ्लोटिङ ब्रिज संसारको सबैभन्दा लामो पानीमा उत्रेको पुल हो । स्थानीय बासिन्दाबीच ५२०-ब्रिज नामले चिनिने झन्डै साढे दुई किलोमिटर लामो यो पुलले सियाटल र मेडिना दुई सहरलाई जोड्छ ।”

हाई वेबाट निकास-बाटो समातेर सहरभित्र पसेपछि ठाउँठाउँमा मान्छेहरूको ताँती देखियो । एक ठाउँमा बाटामै परेड हुँदै रहेछ र हाम्रो गाडीले लामै फन्को मार्नुपर्‍यो । बाटाबाटामा, जताततै देखिएको थियो उत्सवको रौनक । अमेरिकी झन्डामा देखिने राता, सेता, नीला रङ्का कपडाले ठाउँठाउँका पसल सजाइएका

थिए। आकाशमा पनि त्यस्तै रङ्गका बेलुनहरू उडिरहेका थिए। गाडीबाट रमाइलो परिवेश हेर्दाहेर्दै मैले अमेरिकाको झन्डाको बनोट सम्झेँ– लाम्चो परेको चारकुने झन्डाको दाहिने भागमा स्वतन्त्रताका निम्ति लडेका तेह्र राज्यहरूको प्रतिनिधित्व गर्न राता र सेता गरेर तेह्र वटा धर्का राखिएका छन् र देब्रेपट्टि नीलो पृष्ठभूमिमा राज्यकै सङ्ख्या दर्साउन छ लहरमा पचास वटा तारा अङ्कित छन्। स्वतन्त्रताका बेला तेह्र वटा राज्यमा सीमित रहेको अमेरिकी भूमिमा उन्नाइसौँ शताब्दीको अन्तिमतिर फ्रान्स र स्पेन अधीनस्थ राज्यहरू पनि थपिँदै गए। पटकपटक त्यहाँका आदिवासीसँग लडाइँ गरेर अमेरिकीहरूले पश्चिमतर्फ पनि आफ्नो इलाका फैलाउँदै लगे। सन् १८४८ मा मेक्सिकोसँग लडाइँ जितेर क्यालिफोर्निया लिए, अनि सन् १८६७ मा रूससित अलास्का किने। सन् १९५९ मा हवाई नामक प्रशान्त महासागरीय द्वीप आफूमा गाभेर अमेरिकाले राज्यको कुल सङ्ख्या पचास पुऱ्यायो र झन्डामा राखिएका ताराहरूको सङ्ख्या पनि तेह्रबाट क्रमशः

बढ्दै गएर पचास पुग्यो।

केही समयको यात्रापछि हाम्रा 'चालक' ले पसलैपसल भएको ठाउँमा लगेर गाडी रोके। हामी ओर्लेर त्यहाँ रहेको भारतीय होटेलमा पस्यौँ। त्यसका मालिक सरदारजी रहेछन्। उनले मृदु मुस्कानसाथ नमस्ते गर्दै हामीलाई बडो उत्साहपूर्वक स्वागत गरे। छोरी-ज्वाइँसँग पुरानो परिचय रहेछ; सामान्य भलाकुसारी पनि भयो। मैले यसो हेरेँ– एकदमै सामान्य होटेल। सानो पनि। पाँच-छ वटा टेबल। एक पटकमा त्यस्तै बीस-पच्चीस जनाजति अटाउने खालको। सामुन्नेको टेबलमा एक जोडी गोरा भात खाँदै थिए। बायाँतिरको टेबलमा एउटी काली बूढी र एउटी बच्ची, भर्खरै आएर बसेका जस्ता थिए। अमेरिकीहरूले पनि भारतीय परिकार रुचाउँदा रहेछन्! मरमसला भरिएका खाना, पिरो लाग्दो रहेनछ कि?

म सोच्दै, हेर्दै थिएँ। सरदारजीले हामीलाई दाहिने कुनाको टेबलतिर इसारा गरे। हामी गएर बस्यौँ। बेयरा आएर मेनु दियो। ऊ पनि भारतीय रहेछ।

अभिवादन गर्दै उसले हामीलाई अङ्ग्रेजीमा सोध्यो– "के खानुहुन्छ ?"

बोली सुन्दा ऊ भर्खरै अमेरिका आएको हो जस्तो लाग्यो। उसको लवाइ पनि उस्तैउस्तै थियो। मैले मेनु हेरेँ– छपाइ निकै आकर्षक थियो। खानाका नामहरू पनि रहरलाग्दा थिए– भारतका तारे होटेलकै जस्ता। बेयराले खानाको अर्डर लिएर गयो।

मैले फेरि चारैतिर हेरेँ। काउन्टरछेउ फलामे च्याक रहेछ। त्यसमा थरीथरीका सामानहरू थिए। पछाडितिर एउटा सानो भान्सा थियो। सरदारनीले त्यस्तै एउटा भारतीय सहयोगी लिएर हेर्दी होलिन् भान्सा। अर्डर अनुसारको खानेकुरा पकाउँदै, पस्कँदै, दिँदै गर्दी होलिन्। पूर्णतः पारिवारिक रूपमा चलाइएको होला यो होटेल; मैले अडकल काटेँ।

धेरै बेर लगायो बेयराले, खाना ल्याउन। उसले खाने कुरा एक-एक गरी टेबलमा राख्दै थियो, मेरी श्रीमतीले नाक खुम्च्याइन्। हरे, भैयाले स्टिलको

खण्डे थालमा खाना ल्याएको थियो ! मलाई पनि दिक्क लाग्यो। अमेरिका आएर पनि यस्तामा खाने ! हुन त सरदारजीले पूर्णत: भारतीय पुट दिन खोजेका हुनन् प्रस्तुतिबाट। तर त्यस होटेलका टेबल, त्यहाँ राखिएका नेप्किन, काँटा-चम्चा आदिको स्तर, अरु समग्रमै भन्नुपर्दा त्यहाँको वातावरण मलाई राम्रो लागिरहेको थिएन। खाना मीठो भए त भयो नि भोक लागेका बेला भनेर मैले खानेकुराहरूतिर हेरेँ– दाल मखानी, बैगन भर्ता, मटर पनिर, मिक्स्ड भेजिटेबल, चिकन टिक्का मसला, ल्याम्ब भिन्डालु। नाम त राम्रै लेखिएका हुन् मेनुमा, तर रूप? हरे, खोइ के भनूँ ! हामीले एक-अर्कालाई हेऱ्यौँ र समग्र खिन्नतासाथ खाने प्रयास गऱ्यौँ। स्वाद ? हामीले फगत खाएजस्तै गऱ्यौँ।

निस्कने बेला सरदारजीले काउन्टरबाहिर आएर मुसुक्क हाँस्दै खानाबारे सोधे। छोरीले राम्रै छ भनेजस्तै गरी टाउको हल्लाइन् र त्यहाँ बेच्न राखिएका चामल-दालबारे सोध्न थालिन्। मैले नजिकै गएर

र्याकका सामानहरू नियालेँ।

रहर, मास, मुसुरो, केराउ र बोडीका पोकाहरू; मरमसलाहरू; आँप, खुर्सानी, कागतीका अचार र घिउका सिसीहरू; पापडका प्याकेटहरू; बासमती चामल र आटाका ससाना बोराहरू अनि त्यस्तैत्यस्तै भारत, पाकिस्तान, बङ्गलादेशतिर उत्पादित खाद्य सामग्रीहरू। सबैमा मूल्य लेखेर राखिएको थियो। सोचेँ– साहूजीले रेस्टुरेन्ट-कम-किराना पसल खोलेका रहेछन्। कि यस्तै थप्दैथप्दै डिपार्टमेन्टल स्टोर बनाउने विचार हो ? कि रेस्टुरेन्ट त त्यस्तै हुने भयो, बल्लबल्ल भाडामा पाइएको यो कवलमा किराना पसल नै चलाएर हेरूँ भन्ने विचार हो उनको ?

"यो चामल खाएर हेरौँ। राम्रो रै'छ भने फेरिफेरि पनि लैजाउँला।" बासमती चामलको बोरा गाडीमा राखेपछि छोरीले भनिन्– "उताको पसल अलिक टाढा पर्छ।" उनले आफूलाई चाहिने घरका सबै रासन परको एउटा भारतीय पसलबाट किन्दै आएकी रहिछन्। त्यहाँ हामीले खाने स्वादका सबै खाले सामानहरू

पाइन्छन् रे ।

"गुन्द्रुकै त पाइन्न ।" छोरीले भनिन्– "तर तामा, मस्यौरा जस्ता खानेकुरा पाइन्छन् ।" मैले सोचेँ– त्यत्रो पीर गरीगरी हामीले साँच्चै अनाहकमा बोकेका रहेछौँ अचारसचारका सिसीहरू । सबै त पाइँदो रहेछ यहाँ ।

"यता खोलिएका नेपाली रेस्टुरेन्टका परिकारहरू साँच्चिकै स्वादका हुन्छन् कि ती पनि त्यस्तै मेनुमा मात्र सीमित हुन्छन्, हँ ?" गाडीमा बसिसकेपछि मैले छोरीलाई सोधेँ । साँच्चै भन्नुपर्दा अहिलेको अनुभवले मलाई केही निराश तुल्याएको थियो ।

"सबै त होइनन् तर धेरैजसो त्यस्तैत्यस्तै हुन्छन् बुबा !" उनले मतिर हेर्दै जवाफ फर्काइन् ।

बेलुकी टी.भी. हेर्दा सबैजसो च्यानलमा स्वतन्त्रता दिवसका कार्यक्रमहरू प्रसारण भइरहेका थिए । कतै परेड, कतै भाषण, कतै छलफल र कतै ऐतिहासिक तस्बिरसहितका कार्यक्रमहरू थिए । अँध्यारो भएपछि

आतसबाजी देखाउन थालियो। काँचको पर्दामा सम्पूर्ण आकाश झिलिमिली देखियो। टी.भी. ले घरी फ्लोरिडा, मायामीको समुद्री तटमा झल्कँदै झर्दै गरेका फूलझडीका फिलिङ्गाहरू देखाइरहेको थियो भने घरी इस्ट रिभरको आकाशमा पटाकाले सिर्जेको उज्यालोमा रङ्गिएको न्यु योर्क सहर। राजधानी वासिङ्टन डी.सी. को नेसनल मल र बोस्टनको चार्ल्स रिभरमा गरिएका प्रदर्शनीहरूबीच सुन्दर इन्द्रधनुषी दृश्यहरू पनि देखिए। कार्यक्रममा बेलाबेला त्यहाँका विशिष्ट व्यक्तिहरू र कलाकारहरू बोलिरहेका थिए। एउटा स्थानीय च्यानलले सियाटल, टाकोमा र ओलम्पियाका समुद्री किनारमा भइरहेका आतसबाजीहरू पालैपालो देखाइरहेको थियो। मलाई भर्खरै छोरीले हामीले नेपालबाट ल्याएको इलामे चिया पकाएर दिएकी थिइन्। म त्यही तातो चियाको स्वादसँगै ती रमाइला कार्यक्रमहरूको आनन्द लिँदै थिएँ। कुनैकुनै च्यानलबाट अमेरिकाका राष्ट्रिय गानहरू पनि प्रसारण भइरहेका थिए। तीमध्ये मैले दुइटा चर्चित गीतहरू ठम्याउन सकेँ– ‘गड ब्लेस अमेरिका

...' र 'अमेरिका द ब्युटिफुल ...'।

बुझ्दै जाने क्रममा थाहा पाएँ– पहिलो पटक सन् १७७८ मा बिहान र बेलुकी तेह्र-तेह्र वटा बन्दुक पड्काएर यो उत्सव मनाइएको थियो रे। भनिन्छ, त्यसै अवसरमा जनरल जर्ज वासिङ्टनले आफ्ना सिपाहीहरूलाई रासनमा दिने गरिएको रक्सीको हिस्सा दोब्बर गरिदिएर परेडको सलामी लिएका थिए रे। सन् १९६१ मा स्वतन्त्रता दिवसकै उपलक्ष्यमा हट डग खाने प्रतियोगिता सुरु गरिएको थियो। तथ्याङ्क अनुसार सन् २००६ को ४ जुलाईका दिन अमेरिकीहरूले पन्ध्र करोड अर्थात् दुई अमेरिकीमा एकका दरले रोटी र मासुको त्यो परिकार खाएका रहेछन्। अमेरिकामा स्वतन्त्रता दिवसका दिन आतसबाजी गर्ने प्रथा उन्नाइसौँ शताब्दीको अन्तिमतिर मात्र सुरु भएको रहेछ। त्यसअघि भने नागरिकहरूले आ-आफ्ना घरका झ्यालमा मैनबत्ती बाल्ने चलन रहेछ।

"बुबालाई अमेरिकाको झिलिमिलीले खुपै रल्लाएछ।" छोरीले पानीको गिलास टेबलमा राख्दै भनिन्– "खाजा

खान पनि बिर्सनुभयो।"

चिया दिएलगत्तै उनले टेबलमा खाजा राखिदिएकी थिइन्। मैले खान बिर्सेको रहेछु। आतसबाजीकै चमकले मलाई भुलाएछ त्यसो भए। हुन त काठमाडौँको रङ्गशालामा पनि मैले त्यस्तो झिलिमिली देखेको थिएँ। छोरी दिल्लीमा पढ्दै गरेका बेला हो, उनलाई त्यहाँ भेट्न जाँदा संयोगवश भारतीय स्वतन्त्रता दिवसकै दिन आयोजित आतसबाजीको कार्यक्रम प्रत्यक्ष देख्ने अवसर पनि पाएको थिएँ। तर अहिले मैले टी.भी. मा देखेका प्रदर्शनीहरू साँच्चै अद्भुत अनि अवर्णनीय थिए।

मैले "कति हेर्नु यो फूलझडी" भनेर च्यानल फेरेँ र छोरीले ल्याएका चाउचाउ खान थालेँ। फेरिएको च्यानलमा अमेरिकाका ऐतिहासिक तस्बिरहरू देखाइँदै रहेछन्। त्यसैमा केही मान्छेहरू हातमा अमेरिकी झन्डा बोक्दै र केही ड्रम बजाउँदै निस्केको जुलुसको दृश्य चित्रित पुरानो चित्र घरीघरी देखाइँदै थियो। सन् १७७६ मा अमेरिकी जनताद्वारा प्रदर्शित स्वतन्त्रताको

खुसीयाली र अमेरिकीहरूको राष्ट्रप्रेम दर्साउन कोरिएको 'याङ्की डुडल' नामक त्यो चित्र अमेरिकामा ज्यादै चर्चित रहेछ ।

त्यसै क्रममा अमेरिकाका चर्चित राष्ट्रपति अब्राहम लिन्कनको फोटो पनि देखाइयो । ती पातला अग्ला दाह्रीवाल व्यक्तिको तस्बिर देखेर मैले कलेज पढ्नेताका नेताहरूले प्रजातन्त्रउपर भाषण दिँदा तिनैद्वारा परिभाषित 'जनताका लागि, जनताले, जनताद्वारा' भन्ने परिभाषा भट्टयाउने गरेको सम्झैं। हुन पनि यसबाहेक कसैले अर्को कुनै परिभाषा उद्धृत गरेको मैले सुनेको छैन । हामी अमेरिकातर्फ हिँड्नुभन्दा केही दिनअघि एउटा बिहे पार्टीमा साथीहरूसँग कुरा हुँदा एक मित्रले हाम्रो देशमा चलिरहेको राजनीतिक अन्योलको चर्चा गर्दै चर्को स्वरमा उद्घोष गरेका थिए– "यस्तै हो भने हेर्दै जानुहोला, यहाँ गृहयुद्ध सुरु हुन्छ ।"

यिनै अब्राहम लिन्कन राष्ट्रपति छँदा त हो सन् १८६१ मा अमेरिकामा गृहयुद्ध भएको । त्यस बेलासम्म पनि त्यहाँ दासप्रथा थियो । दक्षिणी भेगका एघार वटा

दास राज्यहरूले मिलेर अमेरिकी सरकारविरुद्ध विद्रोह गरे, अनि छुट्टै कन्फिडेरेट स्टेट अफ अमेरिकाको स्थापना गरेर जेफरसन डेभिडलाई राष्ट्रपति नियुक्त गरेको घोषणा गरे। त्यसका साथै साउथ केरोलिनाको एउटा सैनिक अखडामा आक्रमण गरेर विद्रोहीहरूले अमेरिकालाई युद्धको चुनौती दिए। दुईतिरका सेनाबीच चार वर्षसम्म घमासान लडाइँ भयो, जसमा छ लाखभन्दा पनि बढी मानिसको ज्यान गएको थियो भनिन्छ। अन्त्यमा, सन् १८६५ मा अमेरिकी सरकारले युद्ध जित्यो। त्यसलगत्तै त्यहाँ दासका रूपमा प्रयोग गरिएका चालीस लाख अफ्रिकी मूलका मानिसहरूलाई दासत्वबाट मुक्त गरेर उनीहरूलाई अमेरिकी नागरिकको मान्यता दिइयो र मतदानको अधिकार पनि प्रदान गरियो। तर एक असन्तुष्टले दासमुक्तिका हिमायती छपन्न वर्षीय तिनै अमेरिकी राष्ट्रपतिको उनकै कार्यकालमा सन् १८६५ मा हत्या गर्‍यो।

“ल बुबा, छिटै खाएर तयार हुनुहोस्। हामी अब सिनेमा हेर्न जाने। यहाँ नजिकैको हलमा राम्रो सिनेमा

लागेको छ ।" छोरीले माथि कोठामा जान सिँढी चढ्दै भनिन्– "म मम्मीलाई पनि भन्छु ।"

ठीकै हो । हेरूँ न । छिटछिटो खाएर म तयार भएँ– अमेरिकामा सिनेमा हेर्न जान ।

# गुडमर्निङको रङ्मा धुम्मिएको आकाश

बिहान उठेर बाहिर हेरेँ– आकाश धुम्मिएकै छ। आएका दुई-तीन दिन त कति राम्रा थिए! दिनभरि घाम लागेको थियो। तर त्यसपछि कहिल्यै सफा देखिएन, यतिका दिन भइसक्यो। सोचे थेँ– आज त चियाखाजा खाएर बाहिर निस्कन्छु, घुम्छु, एक्लै बाटोबाटो। हेर्छु, अमेरिकी सहर र तिनका टोलहरू।

हिजो यसो बाहिर निस्केको थिएँ, उतापट्टिको गेटतिरबाट। मूल सडकमा मर्मत-सम्भार चल्दै रहेछ। सडकको छेउछेउ केका निम्ति हो कुन्नि, फलामका ठूलठूला पाइप ओछ्याइँदै थिए। बडाबडा क्रेन, ट्याक्टर जस्ता मेसिन र औजारहरूले डङडङ खन्दै थिए माटो, बसाल्दै थिए पाइप अनि पुर्दै र सम्याउँदै थिए जमिन। सामुन्ने विद्युतीय पाटी थियो। त्यसमा घरीघरी सूचनाहरू प्रदर्शित भइरहेका थिए– ‘यहाँ

निर्माणको काम चल्दै छ; जुलाई-अगस्टभरि चल्छ; सवारी बिस्तारै हाँक्नुहोला; ढिला हुन सक्छ; असुविधाका निम्ति क्षमा चाहन्छौँ ...' ।

बाटाको एकातिर रातो ज्याकेट र रातै फलामे टोपी लाएको अठ्ठाइस-तीस वर्षजतिको एउटो केटो फलामको रातै खाँबो समातेर उभिएको थियो। त्यसमा एकातर्फ 'रोक' र अर्कातर्फ 'जाऊ' लेखिएका पाटीहरू थिए। त्यस्तै खाले खाँबो समातेर बाटाको अर्कातिर एउटी आइमाई उभिएकी थिई। गाडीहरू आउँथे, रोकिन्थे, चालकहरूले सङ्केत हेर्थे अनि 'जाऊ' भन्ने देखिए अघि बढाउँथे आ-आफ्ना सवारी साधन। खन्ने र पुर्ने काम चलिरहेको थियो, निरन्तर।

म छेउबाट निस्कन खोजेको थिएँ, खाँबो समात्ने केटाले देखेर मुसुक्क हाँस्दै टाउको हल्लाई "गुडमर्निङ" भनेको थियो। मैले पनि अभिवादन फर्काएपछि उसले माथितिर हेरेर भनेको थियो– "आज पनि दिन कस्तो बादलिएको है सर ! पानी पर्छ कि क्या हो ?"

"खोइ, नपर्ला कि !" अनि म अघि बढेको थिएँ।

देखादेख हुँदा मृदु मुस्कानसहित अभिवादन गर्ने, भलाकुसारी गर्ने यहाँको चलन रहेछ। मैले विचार गरेको थिएँ– कसैसँग देखादेख हुँदा वा बाटो हिँड्दा आँखा जुधेमा पनि पहिले उनीहरूले नै "हाई-हेलो" भनेका हुन्थे। तर हामीले फर्काए-नफर्काएकासित उनीहरूलाई खासै सरोकार भएझैँ पनि मलाई लागेको थिएन। धेरै पटक मैले जवाफ फर्काउनुभन्दा अघि नै "हाई" भन्नेचाहिँ अगाडि लम्किसकेको हुन्थ्यो। तथापि उनीहरूको त्यो चलनले मलाई निकै खुसी र उत्साही तुल्याएको थियो। हाम्रा मान्छेले त्यसै कसैलाई त्यसरी अभिवादन गरेको विरलै देखिन्छ। बरु देखेर पनि नदेखेझैँ अर्कातिर हेरेर हिँड्ने गरेको बढी देखिएको छ। त्यसो हुनाको कारण हामीभित्रको दमित लघुताभास त होला नि। साँच्चै, क्षमा माग्ने र धन्यवाद ज्ञापन गर्ने तथा त्यसरी खुला रूपमा अरूलाई अभिवादन गर्ने हिम्मत हामीमा विकास भइदिए कति सुन्दर हुने थियो होला हाम्रो समाज !

अस्ति हामी बजार गर्न गएका थियौँ छोरीसित। परै

जानुपर्दो रहेछ किनमेल गर्न पनि। झन्डै बीस मिनेट लागेको थियो गाडीमा। हामीतिर जस्तो जतातत्तै नहुने रहेछन् पसलहरू। निर्दिष्ट स्थानहरूमा मात्रै बनेका हुँदा रहेछन्। एकै हाताभित्र डिपार्टमेन्टल स्टोर, सेलुन, रेस्टुरेन्ट, ब्याङ्क, औषधि र त्यस्तै पसलहरू भएको ठूलै क्षेत्र हुँदो रहेछ। हुन त एउटा डिपार्टमेन्टल स्टोरमा छिरेपछि घरलाई चाहिने सबै प्रकारका सामानहरू पाइँदा रहेछन्– तरकारी, माछामासु, किराना, दुग्ध पदार्थ, केक, रोटी, क्रिम-पाउडर, औषधि, लत्ताकपडा, भाँडाकुँडा, जुत्ता, गहना, खेलौना, पुस्तक, फलफूल, बोटबिरुवा, फर्निचर, विद्युतीय सामग्री, तयारी खानेकुरा यावत्। कस्टको, वाल मार्ट, सेफ वे, अल्बर्टसन, टार्गेट जस्ता कम्पनीका त्यस्ता स्टोरहरू अमेरिकाभरि फैलिएका रहेछन्। घर निर्माण र सजावटका सामानका निम्ति होम डिपो, विद्युतीय सामानका निम्ति बेस्ट बाए जस्ता कम्पनीका पसलहरू पनि जतातत्तै रहेछन्।

एकै ठाउँमा सबै सामान पाइने त्यस प्रकारका डिपार्टमेन्टल स्टोरहरू केही वर्षदेखि काठमाडौं लगायत

हाम्रा अन्य केही ठूला सहरमा पनि खुलेका छन् र उपभोक्तामाझ लोकप्रिय हुँदै गइरहेका छन्। अमेरिकाका त्यस्ता बजारका हाताहरूमा गाडी राख्न निकै ठूलो इलाकाको व्यवस्था गरिएको हुँदो रहेछ। हुन पनि सबै गाडीमै आउने हुन् किनमेल गर्न। मैले यहाँका मान्छेहरूले मोटरसाइकल प्रयोग गरेको त्यति देखिनँ। केही सौखिनहरूले बिदाका दिनमा फाट्टफुट्ट चलाउँदा पनि रहेछन् त्यो दुईपाङ्ग्रे, तर ज्यादै नगण्य।

छोरीले एक साताजतिलाई चाहिने सामान किनेकी थिइन्। हामी दुई बूढाबूढीले रमिता हेरेका थियौं, पसलैभरि घुमीघुमी। सबै सामानहरू सुन्दर र खोज्न सजिलो हुने तवरले र्‍याकमा सजाएर राखिएका थिए। देख्दै रहरलाग्दा ती सामानका मोल पनि ठूला अक्षरमा छेवैमा टाँगिएका थिए। अमेरिकाका पसलहरूमा चीजबीजका दामहरू बाटा कम्पनीका जुत्तामा राखिने मूल्यका ढाँचामा राखिएका हुँदा रहेछन्। भनौं– १०० नराखेर ९९.९९ राखेझैं।

हामीले खाइरहेका सबै प्रकारका तरकारी त्यहाँ

देखेका थियौँ। केही हामीले देख्दै नदेखेका पनि थिए। थरीथरीका रङ्ग र आकृति भएका मूला, गाजर, फर्सी, सिमी, बन्दा, भेडे खुर्सानी पनि थिए। हुन त संसारभरिकै सामानहरू पाइँदा रहेछन् अमेरिकामा, तर धेरैजसो तरकारी र फलफूलहरू मेक्सिकोबाट आउँदा रहेछन्। अन्य सामानमा चीनमा निर्मित नै बढी देखेका थियौँ जताततै, इलेक्ट्रोनिकसमेत।

एक पटक एक मित्रकहाँ खरिददारीको कुरा हुँदा मेरी श्रीमतीले भनेकी थिइन्– "के किन्नु खोइ, यहाँ त चिनियाँ सामानहरू मात्रै पाइँदा रै'छन्!"

जवाफमा ती मित्रले ठट्टा गर्दै भनेका थिए– "भाउजू, अमेरिकाले त अमेरिकी झन्डा मात्रै बनाउँछ। अर्थोकमा कि हवाईजहाज, कि त मिसाइल हो बनाउने।"

बजारमा स्थानीय उत्पादनहरू पनि थिए, तर सबै तुलनात्मक रूपमा महँगा।

काउन्टरमा पुग्दा किनेका सामान समातिदिन म पनि पुगेको थिएँ। त्यहाँ बसेकी महिलाले एउटा-

एउटा सामान टिप्दै सेन्सरमा देखाएर कम्प्युटरमा हिसाब गर्दै थिइन्, अनि ग्राहकहरूसित कुरा पनि गर्दै थिइन् । छोरी नजिक पुगेपछि तिनले सोधेकी थिइन्– "कस्ती छचौ ?"

उनले "ठीक छु, तपाईंलाई कस्तो छ नि" भनेपछि ती महिलाले सामानको हिसाब गर्दै फरररर धेरै कुरा भनेकी थिइन् ।

उनी फरासिली रहिछन् । उमेर त्यस्तै साठीको छेउछाउ होला । राम्रो शरीर अनि हिसी परेको अनुहार । उनका कुरा सुनेर म छक्क परेको थिएँ । एक-एक सामान झोलामा हाल्दै उनी भन्दै थिइन्– "हेर न, के गर्ने? हिजोआज निंद्रै लाग्दैन । उमेर भएर होला नि ! हिजो राति यसो अलि बेर निदाएछु । त्यसैले शरीर आज केही हलौं छ । मेरै उमेरकी एउटी साथी फ्रान्स गएकी थिइन् । त्यहीं बिरामी परिछन् । उमेर भएपछि यस्तै हो बुझ्यौ! तर त्यहाँका मान्छे राम्रा रै'छन् । सबैले हजुरआमा भन्दै खुपै सेवा-शुश्रूषा गरेछन् । कति राम्रो है ?"

त्यतिन्जेलमा छोरीले क्रेडिट कार्डबाट पैसा तिरिसकेकी थिइन्। सामानका पोकाहरू ट्रलीमा हालेर ती महिलासँग बिदा माग्दै हामी निस्केका थियौँ।

बेलुकी खाना खाने बेला मैले ज्वाइँसाहेबसँग यहाँ गरिने हाई-हेलोको चर्चा गरेको थिएँ र ती आइमाईले भनेका कुराहरू पनि सुनाएको थिएँ। उहाँले आफ्नो अनुभव सुनाउनुभएको थियो– "यहाँका मान्छे ज्यादै शिष्ट र सभ्य छन्। फरासिला पनि छन्। बोल्न सङ्कोच मान्दैनन्। भेटेमा हाँस्दै अभिवादन गर्ने यिनीहरूको संस्कार नै बसिसकेको छ। अरू, कसैसित अलिक हेलमेल भएको छ भने त यिनीहरूले आफ्ना सबै गोप्य कुरा पनि भन्छन्।" उहाँको पछिल्लो वाक्य सुनेर म केही छक्क परेको थिएँ।

उहाँ भन्दै हुनुहुन्थ्यो– "एक पटक म गइराख्ने एउटा पसलको मालिकले कुरा गर्दागर्दै 'हेर न, मलाई मेरी स्वास्नीले छोडेर गई। म उसलाई कति माया गर्थें! कति निर्दयी आइमाई!' भन्यो र मेरै सामुन्ने सुँक्कसुँक्क गर्न थाल्यो। अचम्मलाग्दो कुरो, होइन

भन्नुस् त ?” अनि उहाँले मतिर हेर्नुभएको थियो ।

मैले “हो, छक्कै पर्ने कुरो हो” भनेपछि उहाँले थप्नुभएको थियो– “यिनीहरूमध्ये कसैलाई पनि राष्ट्रपतिको कुन उम्मेदवारलाई तपाईंले भोट हाल्नुभयो भनेर सोध्यो भने उसले मरिगए भन्दैन । ‘यो गोप्य कुरो हो, म तपाईंलाई किन भनूँ’ भन्छ । मैले जानेसम्म भोट हाल्ने कुरासिवाय यिनका बीच कुनै कुरा पनि गोप्य हुँदैनन् ।”

“आज पानी पर्छ कि पर्दैन भनेर जोखना हेर्नुभएको बुबा ?” छोरीको स्वर सुनेर म झस्कें । म अझै पनि माथि आकाशतिर हेरेर टोलाइरहेको रहेछु ।

बिहान उठेपछि नित्यकर्म गरेर म योग गर्छु । माइक्रो वेभमा चिया बनाएर खान्छु । मलाई त्यसै बस्न दिक्क होला भनेर छोरी-ज्वाइँले एउटा ल्यापटप दिएका थिए । त्यसैमा इन्टरनेट खोलेर मेल हेर्छु, लेख्छु । नेपाल न्युज, इ कान्तिपुर खोलेर नेपालका खबर पढ्छु । टी.भी. मा अन्तर्राष्ट्रिय समाचार सुन्छु ।

त्यसपछि? काम छैन, के गर्ने? कोही उठेका हुँदैनन्। उठे पनि सबैका आ-आफ्ना काम छन्। उनी पनि काटकुट गर्न, पकाउन व्यस्त हुन्छिन्। म के गर्ने? यसो बाहिरतिर निस्केर छेउछाउको रमिता हेरूँ भने कतै कोही देखिन्नन्। हाम्रातिर त बेलाबेला मान्छेहरू निस्कन्छन् नि घरबाहिर हावा खान। बिहानैदेखि जमघट सुरु हुन्छ चोकचोकमा। यहाँ त केही छैन।

"यहाँ सबैको काम छ। काममा जान्छन् नि। अरू बेला आफ्नो घरको काम गर्दा हुन्; टी.भी. हेर्दै आराम गर्दा हुन्; अध्ययन गर्दा हुन्। हाम्रो जस्तो बिनसित्ति बाटोबाटो उभिएर गफ चुट्ने फुर्सद होला र यिनीहरूको ! बजारतिर हिँडेको देख्दा पनि कुदेकै हुन् कि भन्ने लाग्छ मलाई त; सबै व्यस्त जस्ता।" बेलाबेला के गर्दा हुन् यी अमेरिकी घरभित्र बसेर भन्ने कुरा हुँदा आमाचाहिँले आफ्नो विचार पोख्थिन्।

अनि छोरीले थप्थिन्– "यस्तै स्वभाव बनिसक्यो यिनीहरूको बुबा !"

खोइ के गर्दा हुन् यी घरभित्रै! धुमधुमती बस्न कति

सकेका हुन् यी अमेरिकीहरू ! आफूलाई त अत्यास लागिसक्यो बस्दाबस्दा । म घरभित्र छटपटिँदै सोच्थेँ– यिनीहरू घरबाहिर देखिने उही छुट्टीको दिनमा हो । आउँछन् छेउको स्विमिङ पुलमा पौडी खेल्न । त्यो पनि घाम लागे त हो नि । अस्ति शनिबार आइमाईहरूलाई उफ्रीउफ्री पानीमा हाम फालेको देखेको थिएँ, बिकिनी लाएर । निकै भीड थियो त्यहाँ । दिउँसोतिर टिनटिन-टिनटिन घण्टी बजाउँदै आइसक्रिम बेच्ने गाडी पनि आएको थियो । क्या झुम्मिएका थिए कम्युनिटीभरिका केटाकेटी अनि ती पौडीवाज पनि ! खुप बेच्यो आइसक्रिमवालाले ! यहाँ बाहिर खुलामा केही पनि बेच्न दिइँदो रहेनछ, आइसक्रिमबाहेक । स्वास्थ्य, सुरक्षा आदिका कुरा होलान् नि । म त्यस दिन घरबाहिर उभिएर त्यहाँको रमिता हेर्दै थिएँ । तर एकै छिनमा छोरीले भित्र डाकेकी थिइन् । यहाँ फेरि त्यसै उभिएर अर्कालाई हेर्न पनि हुन्न रे । राम्रो मानिँदैन रे । ल अब म कसो गरूँ? बेलुकी त घरमा सबै होइन्छ; कुराकानी हुन्छ अथवा कतै घुम्न वा

कुनै रेस्टुरेन्टमा खान गइन्छ।

हिजै दिउँसो त हो टेलिभिजनमा एउटा कार्यक्रम देखेपछि हामी यहाँको चर्चित रेस्टुरेन्टमा सेकुवा खान गएको। सेकुवा बनाउने थुप्रै प्रतियोगिताहरू जितेको रहेछ त्यस रेस्टुरेन्टले। ढोकैमा सुँगुरको ठूलो प्रतिमा राखिएको रहेछ। पुरस्कार जितेकी मालिक्नी स्वयंले ढोकानेर आएर हामीलाई स्वागत गर्दै एकै छिन पर्खन अनुरोध गरेकी थिइन्। त्यसलगत्तै रातो टी-सर्ट र जिन्स लाएकी राम्री गोरी परिचारिकाले अदबसाथ हामीलाई एउटा टेबलनेर बस्न लाएर मुसुक्क हाँस्दै मेनु दिएकी थिई। मैले यहाँका परिकारका बारेमा पहिले नै इन्टरनेटमा पढिसकेको थिएँ। खानेकुरा अर्डर गर्न छोरी-ज्वाइँले मेनु हेर्दै थिए। म भने रेस्टुरेन्टको चारैतिर नियाल्नपट्टि लागेको थिएँ।

रेस्टुरेन्ट खासै ठूलो थिएन। सानो भुइँतले घर। भुइँदेखि चार फिटमाथिसम्म काठका फल्याकले बारेर खण्डखण्ड पारिएको। हामी भएतिर चार वटा टेबल, उतापट्टिका दुई भागमा सात वटा होलान्। भित्रकाले

मात्र नपुगेर बाहिर पनि राखिएका थिए टेबलहरू र सबैजसो टनाटन थिए। लन्चका लागि आउनेको राम्रै जमघट हुँदो रहेछ। सामुन्नेको च्याकमा प्रतियोगिता जितेका थुप्रै ट्रफीहरू सजाइएका थिए। त्यसैको दाहिनेतिर भान्सा रहेछ क्यार, परिचारिकाहरूले त्यतैबाट खानेकुरा ल्याउँदै थिए। सेकुवा बनाइँदै गरेको ग्राहकहरूलाई प्रत्यक्ष देखाइँदो रहेछ। एउटी "हेर्नुहुन्छ" भन्दै हामीलाई पनि सोध्न आएकी थिई। हामीले पहिले नै टी.भी. कार्यक्रममा हेरिसकेका हुनाले भैगो भनेका थियौँ। परिचारिकाले चार वटा गिलासमा टन्न बरफ हालेको चिसो पानी ल्याएर टेबलमा राखेकी थिई। यहाँ सबैले बरफैबरफ भएको पानी खाँदा रहेछन् । हामी दुवै जनाले चिसो खान सक्दैनथ्यौँ; त्यसैले मैले त्यहाँ पनि साधारण पानी दिन भनेको थिएँ। परिचारिकाले धेरै बेरपछि पानी ल्याएर दिएकी त हो, तर हाम्रा लेखि त्यो पनि चिसै थियो।

युरोप, अमेरिका घुमिसकेका साथीहरूसँग अघिअघि कुरा हुँदा उनीहरूले "त्यहाँ त पानी कसैले खाँदैखाँदैनन्"

भनेको सुनेको थिएँ।

के खान्छन् त? म उदेक मान्थेँ। "कोक खान्छन्। जुस खान्छन्।" उनीहरू भन्थे– "बियर खान्छन्।"

तर मैले यहाँ जुनसुकै रेस्टुरेन्टमा जाँदा पनि पानी दिएको देखेँ। हो, उनीहरूले "कोल्ड ड्रिङ्क्स केही लिनुहुन्छ कि" भनेरचाहिँ अवश्य सोध्थे। विशालबजारतिर हुने रेस्टुरेन्टहरू अथवा तयारी खानाका पसलहरूमा भने पानी खानुपरे बोतलको मिनरल वाटर किन्नुपर्ने रहेछ। कुनैकुनै पसलमा खानेकुरासँगै कोक वा पेप्सी जस्ता कोल्ड ड्रिङ्क्सको मूल्य पनि जोडिएको हुन्थ्यो र कुनैकुनैमा त्यसरी दिइने झोल थपीथपी जति खाए पनि हुन्थ्यो। सार्वजनिक स्थलहरूतिर साना केटाकेटीसमेतलाई खान सजिलो हुने गरी पानीका धाराहरू जडान गरिएको देखेको थिएँ। एक–दुई ठाउँमा मैले आफैँ पनि त्यस्ता धारामा मुख जोतेर बटन थिच्दै पानी खाएको थिएँ। साथीभाइले बयान गरेजस्तै यहाँका मान्छेले जताततै बियर खाएको पनि मैले देखेको थिइनँ।

परिचारिका खानेकुराहरू हाम्रो टेबलमा राखेर मृदु मुस्कानसाथ "आनन्द लिनुहोस् है" भन्दै गएकी थिई। मैले काठमाडौँको सेकुवा सम्झँदै चक्कुले काटेको थिएँ र काँटा-चम्चाले कोपेर मुखमा हालेको थिएँ, चिकेन बार्बेक्यु। एक टुक्रा चपाएपछि मैले पुलुक्क श्रीमतीतिर हेरेको थिएँ। मैले उनलाई स्वाद पारखीका रूपमा मान्दै आएको छु। मेरो मनसाय बुझेर होला, उनले छोरी-ज्वाइँले नदेख्ने गरी मुख बिगारेकी थिइन्। हुन पनि हाम्रा ससाना रेस्टुरेन्टमा बन्ने सेकुवाको स्वादको तुलनामा पुरस्कारप्राप्त अमेरिकी रेस्टुरेन्टको नामुद सेकुवाका बारेमा खोइ के भनूँ! विरक्तिएर मैले अन्य टेबलमा पल्याकपुलुक हेरेको थिएँ। छेवैमा छ जना गोराहरू रमाईरमाई खाइरहेका थिए– कोइलाले डढाएर कालो पारिएको त्यही बार्बेक्यु।

अन्यत्रभन्दा धेरै महँगो थियो त्यहाँको खाना। बिल देखेर मैले मनमनै गुनेको थिएँ– यहाँको स्वाद हाम्रो जिब्राले टिप्न नसकेको हो कि यो प्रचार व्यापारको परिणाम हो? निष्कर्षमा पुग्न सकेको थिइनँ।

केही दिनअघि पनि हामी यहाँको इटालियन रेस्टुरेन्ट शृङ्खला ओलिभ गार्डेनमा नामी सलाद खान गएका थियौं। खानाको स्वाद त राम्रो थियो, तर दाम भने उस्तै महँगो। होइन भने खानेकुरा निकै सस्तो भएको अनुभव गरेको छु मैले अमेरिकामा। यहाँ टिप्स दिनु नितान्त आवश्यक रहेछ। त्यही टिप्सको आकर्षणले हो कि वा यो अमेरिकाको व्यापारिक विशेषता हो, यहाँका होटेल तथा रेस्टुरेन्टहरूमा र अन्यत्र पनि ग्राहकहरूलाई प्रदान गरिने सेवा अवर्णनीय रूपले प्रशंसनीय पाएँ।

"होइन-होइन।" एक पटक कुरैकुरामा मैले गरेको टिप्पणीमा ज्वाइँसाहेबले जानकारी दिनुभएको थियो– "यहाँ हरेक व्यापारमा ग्राहक सेवालाई उच्च प्राथमिकता दिइन्छ। यिनीहरू 'ग्राहक राजा हो' भन्ने सिद्धान्त मानेर व्यापार गर्छन्।" त्यसै क्रममा उहाँले फोहोर राख्ने भाँडो लिँदाको आफ्नो अनुभव सुनाउनुभएको थियो।

यहाँ फोहोर व्यवस्थापन निजी कम्पनीहरूले गर्दा

रहेछन् । अमेरिकामा लगभग सबै कारोबारको जिम्मा निजी क्षेत्रलाई नै दिइँदो रहेछ । त्यसैले पनि यहाँ सबै वस्तु र सेवाको उपलब्धता सहज, प्रभावकारी र तुलनात्मक रूपले सस्तो भएको हो भनिन्छ । घरको फोहोर छुट्टाछुट्टै भाँडामा राख्नुपर्दो रहेछ । पुनर्प्रयोग गर्न सकिने कागज, प्लास्टिक जस्ता वस्तु एउटा भाँडामा राख्नुपर्ने, बोतलहरू अर्कामा र सामान्य घरायसी फोहोर अर्कै भाँडामा राख्नुपर्दो रहेछ । साताको एक दिन आउँदो रहेछ गाडी, घरायसी फोहोर उठाउन । पुनर्प्रयोग हुने तथा अन्य प्रकारका फोहोरका निम्ति भने एक साता बिराएर आउँदो रहेछ । गाडी आउने दिन सबैले ती भाँडाहरू घरअगाडि लगेर बाटाछेउ राखिदिनुपर्दो रहेछ । गाडीमा भएको स्वचालित सनासोले ती प्लास्टिकका बाक्ला भाँडालाई च्याप्प समातेर उचाल्दो रहेछ र फोहोरजति पछाडिको डिकीमा खन्याएर खाली भाँडो पुनः यथास्थान राखिदिंदो रहेछ । पूर्णतः यान्त्रिक !

प्रारम्भमा ड्रमहरू बाँड्दै जाँदा, के भएर हो, कम्पनीका

कामदारले ज्वाइँसाहेबकहाँ घरायसी फोहोर राख्ने भाँडोचाहिँ राखिदिन बिर्सेछन् । उहाँले फोन गरेर सम्बन्धित कम्पनीलाई त्यसबारे जानकारी गराउनुभएछ । एक साताभित्र पनि नदिएपछि उहाँले पुनः फोन गर्नुभएछ । कम्पनीले क्षमा माग्दै भोलि जसै पनि ल्याइदिने बाचा गरेछ । उहाँ "होइन, मलाई गाह्रो पऱ्यो; म अहिल्यै लिन आउँछु" भनेर त्यसको कार्यालयमै पुग्नुभएछ । त्यहाँका कर्मचारीले लज्जित अनुहारसाथ बारम्बार क्षमा माग्दै उहाँको गाडीमा कन्टेनर राखिदिएछन् र हिँड्ने बेला उहाँलाई पर्न गएको असुविधाको क्षतिपूर्तिस्वरूप दुई महिनाको फोहोर सङ्कलन शुल्क छुट गरिदिएको रसिद पनि दिएछन् ।

उहाँका कुरा सुनेपछि मैले हामीकहाँ जतातत‌ैबाट हाम्रा अदना उपभोक्ताउपर पर्ने मार र हुने ज्यादती सम्झेको थिएँ । धारामा पानी नआए पनि शुल्क तिर्नैपर्ने, नतिरे अरू जरिमाना पनि तिर्न बाध्य हुनुपर्ने । अर्काले कताबाट गरेको ट्रङ्कलको रकम आफ्नो टेलिफोनको बिलमा चढ्ने । "ए बाबा, हामीले गरेकै होइनौँ !"

भनेर कहीं फरियाद गर्न नपाइने। गरे सुनुवाइ नै नहुने। हरे, कस्तो विडम्बना! सरकारी कम्पनीमा त यस्ता अनगिन्ती घटनाहरू भइरहेका छन् भने निजी व्यापारीको के कुरा गर्नु? बिचरा ती पनि त नेपाली हुन्– संसारभरिकै गरिबमध्ये पर्ने देशका जनता। तिनले पनि त साँचेका छन् सपना, रातारात धनी हुने !

मैले हालै टी.भी. केबुलको शुल्कमा आफैंले भोग्नुपरेको त्यस्तै सास्तीका कुरा पनि सम्झन पुगेको थिएँ। एक वर्षको एकमुस्ट तिरे छुट पाइने हुनाले विगत दुई वर्षदेखि मैले आर्थिक वर्ष सुरु भएलगत्तै सालभरिको शुल्क अग्रिम तिर्ने गरिरहेको थिएँ। पोहोर साउनमा पनि त्यसै गर्न जाँदा त्यहाँका कर्मचारीहरूले “यस पटक कम्पनीले छुटको कुनै कार्यक्रम राखेको छैन” भन्ने जनाएका थिए। छुट नपाउँदा मैले विगत वर्षकै आधारमा अडकलेर लगेको रकमले आठ महिनासम्मको शुल्क मात्रै खाम्न सक्ने देखिएको थियो। महिनैपिच्छे आउनुपर्ने कष्ट छल्न मैले त्यतिकै अवधिको रकम

तिरेर फर्केको थिएँ।

संयोगले भदौ महिनाको एक दिन अखबारमा त्यस कम्पनीको छुट कार्यक्रमको विज्ञापन देखेर मैले पैसा तिरेको अफिसमा फोन गरेको थिएँ।

"यो कार्यक्रम त अहिले शुल्क तिर्नेलाई मात्र हो, पहिल्यै तिरिसकेकालाई होइन।" त्यहाँको एक कर्मचारीले उदेकलाग्दो तर्क दिएको थियो।

"यो त चोरलाई चौतारो साधुलाई शूली भनेजस्तै भएन र ?" मैले आफ्नो दिक्दारी व्यक्त गरेको थिएँ।

"हामीलाई माथिबाट त्यस्तोमा छुट दिनू भन्ने अर्डर छैन। तपाईंले हाम्रो मुख्य कार्यालयमा कुरा गर्नुस्।" त्यस कर्मचारीले रुक्दै कुरा टुङ्ग्याएको थियो।

मैले विरक्तिएर उसले भनेको ठाउँमा सम्पर्क गरेको थिएँ र कम्पनीले अहिले दिएको छुटका आधारमा मेरो बाँकी रकमको हिसाब मिलान गरिदिन अनुरोध गरेको थिएँ। सम्बन्धित हाकिमले मलाई सबै ब्यहोरा खोलेर निवेदन दिन भनेका थिए। उनले भनेबमोजिम मैले

निवेदन दिएको थिएँ र एकदुई पटक सोधपुछ गर्न फोन पनि गरेको थिएँ। तर हाकिमसाहेबसँग प्रत्यक्ष कुरा गर्ने सौभाग्य भने पुनः पाएको थिइनँ। पछिल्लो पटकको फोनमा केही बेरको मौनतापछि उनका सहयोगीले "निर्णय भएपछि तपाईंलाई सूचित गरिनेछ रे" भन्ने जानकारीसम्म दिएका थिए। तर धेरै प्रतीक्षापछि पनि न फोन आएको थियो न कुनै जवाफ। बरु असारको एक दिन "तीन महिना भयो तपाईंले पैसा नतिरेको" भन्दै कम्पनीका दुई जना मान्छे मेरो लाइन काट्न सिँढी लिएर आएका थिए। हाऽहाऽहाऽ, कस्तो रमिता गरेका त्यस दिन! सम्झँदै हाँसो उठ्छ।

"यस्तै हो बुबा, यहाँको मौसम। वर्षको आठ-नौ महिनासम्मै धुम्मिइरहन्छ र पानी पर्ला जस्तो हुन्छ।" छोरीले मनजिकै आएर बाहिर हेर्दै भनिन्– "बेलाबेला पानी पनि पर्छ।"

म झ्यालनेरै रहेको सोफामा बसेँ। छोरीले मलाई यस भेगको मौसमबारे जानकारी दिँदै गइन्। यताको

यस्तो बादलिइरहने मौसमले गर्दा अन्य राज्यका अमेरिकीहरूले सियाटल क्षेत्रमा त वर्षको नौ महिनै पानी पर्छ भन्ने धारणा राख्छन् रे। हामी आउँदाका केही दिन मात्रै अचम्मसित घाम लागेको रे। दुई महिनापछि यहाँ जाडो सुरु हुन्छ; बाहिर निस्कनै सकिन्न। हुरीबतास चल्छ; पानी पर्छ; बरफ पनि पर्छ रे। मेदेखि अगस्टसम्मका तीन-चार महिना मात्रै हो रे घुमफिर गर्ने जस्तो राम्रो मौसम हुने। यता गर्मी पनि धेरै हुँदैन; सेन्टिग्रेडमा त्यस्तै तीससम्म भनौँ। यहाँको अहिलेसम्मको गर्मीको रेकर्ड भनेको सन् १९९४ मा सय डिग्री फारेनहाइटसम्म पुगेको थियो रे। अर्थात्, सेन्टिग्रेडमा यस्तै अठतीस, पुग-नपुग। जाडोको रेकर्ड त माइनस अठार डिग्री सेन्टिग्रेडसम्म पुगेको छ रे, सन् १९५० को जनवरीमा। चिसो मौसमी वातावरणले गर्दा होला, यहाँ मानसिक तनाव भोग्ने रोगी धेरै छन् रे।

"तपाईंले अहिले बाहिर जाने विचार गर्नुभएको?" छोरीले सोधिन्।

“बसमा चढेर यसो बजारतिर घुमेर आऊँ कि भनेको । तर खोइ, मौसम यस्तो छ !” मेरो अनुहार देखेर उनले मभित्रको छटपटी बुझिन् कि भन्ने लाग्यो र सहज स्वरमा भनें ।

“तपाईं एक्लै बसमा जान सक्नुहुन्छ ? कताबाट जाने थाहा छ र ?” उनले आश्चर्य मान्दै थप प्रश्न राखिन् ।

हुन पनि यहाँ हिंड्न गाह्रै रहेछ । बाटामा कोही देखिन्नन्; अलमल भए कसलाई सोध्ने ? ट्याक्सी पनि त देखिँदैनन्, हामीतिर जस्तो जताततै । त्यसैले सोझैसोझै हिँड्दासम्म ठीक अथवा अडकलेर एक-दुई मोड घुम्नसम्म ठीक भनेर म दुई-चार पटक हिँडेको छु सोझै परपरसम्म । अस्ति जाँदा देखेथैं एक ठाउँमा बस-बिसौनी र रोकिएर हेरेको थिएँ बस आएको । त्यसमा जडित विद्युतीय पाटीमा डाउन-टाउन लेखेको देखेको थिएँ । त्यसैको पर त हो मैले एउटा ढुङ्गैढुङ्गाको घर देखेको । यहाँ जताततै एकै किसिमका र उस्तैउस्तै

घरहरू हुँदा रहेछन्। बाटोघाटो पनि उस्तै र जता जाँदा परिवेश पनि उस्तै; कुनै नवीनता नाइँ।

यस्तै विविधताविहीन परिवेश देखेर होला, हामी तीन महिनालाई जाने भन्ने थाहा पाएर अमेरिका घुमीवरी फर्केका मेरा एक मित्रले भनेका थिए– “तीन महिना त धेरै हो अमेरिकामा। त्यहाँ हेर्ने के छ र? एक ठाउँ हेरे पुग्छ। जहाँ गए पनि उस्तै। अँ, त्यहाँको सिस्टम भने मान्नुपर्छ। सिस्टमले नै हो अमेरिका गएका मान्छेलाई मोहनी लाउने।”

यहाँ आएदेखि नै मलाई यहाँका सबै थोक आफैँ चलिरहेका छन्, सहज, सरल, निर्विघ्न भनेझैँ महसुस भइरहेको थियो। सिस्टमले नै रहेछ देशको सञ्चालन सुचारु हुने, विकास हुने।

मेरा ती मित्रले त्यस बेला कुरा गर्दै जाँदा हाम्रो देशको गतिविधिबाट विरक्तिएर व्यक्त गरेको प्रतिक्रिया पनि म सम्झन्छु– “हाम्रो देशमा सिस्टम कहाँ छ र ? सिस्टमले होइन, हाम्रो देश त पोलिटिक्सले चलेको

छ ।"

मैले देखेको निकै पुरानो जस्तो लाग्ने त्यो घर एकदमै अनौठो थियो। नजिकैबाट हेर्ने मनले म अगाडि बढेको थिएँ। तर दुई-चार पाइला नचाल्दै मोबाइल बजेको थियो। छोरीको फोन रहेछ। उनले मलाई छिटो फर्कन भन्दै थिइन्– बजारतिर जाने रे। ल त, यो हेर्न फेरि कुनै दिन आउँला भन्ने सोचेर म छिटछिटो चालमा घर फर्केको थिएँ।

"के भयो बुबा? घुम्न जान पाइएन भनेर आत्तुरी लाग्यो?" म धेरै बेर केही नबोली बसेछु क्यार, छोरीले पुनः अर्को प्रश्न राखिन्। म उनीतिर हेर्दै मुसुक्क हाँसें।

"काम नभएर छटपटी भयो तिम्रो बुबालाई। तिमीलाई थाहै छ नि, जहाँ गए पनि यस्तै हो उहाँको।" छोरीका कुरा सुनेर भान्सातिर आउँदै गरेकी आमाचाहिँले थपिन्।

छटपटी त भयो मलाई तर काम? सोचें– काम के

हुन्छ र यहाँ घुम्न आएका मान्छेको? एक जना मेरा साथी आएका थिए नाति जन्म्यो भनेर। फर्केर गएपछि भन्थे– "म त छ महिना बसेँ ढुक्क अमेरिकामा, नाति खेलाएर।"

अलि अस्ति मेरा एक मित्र इन्टरनेटमा भेटिएका थिए। च्याटमा उनले सोधेका थिए– "समय कसरी बिताउँदै छौ?" मैले लेख्दै गएको थिएँ आफ्ना कुरा। उनले पनि उताबाट लेखेका थिए– "आ, म त मस्तीले सिनेमा हेरेर बस्थेँ।"

केही दिनअघि हो, मेरा एक गाउँले भाइले म अमेरिका आएको थाहा पाएर फोन गरेका थिए, क्यालिफोर्नियाबाट। कुरा गर्दै जाँदा अमेरिका छोरी-ज्वाइँ भेट्न आएका हाम्रा एक परिचित प्राध्यापकले पेट्रोल पम्पमा काम गरे अरे भनेर उनले मलाई आश्चर्यमिश्रित स्वरमा सुनाएका थिए।

खोइ, कसले के गर्‍यो, किन गर्‍यो? यो मेरो सरोकारको विषय होइन। यी रेरेका कुरा म किन सोचूँ? यहाँ काम पाउन गाह्रो रहेनछ। तर हामीतिरको

जे-जति पढे पनि जागिर भने त्यस्तैत्यस्तै मात्र रहेछ पाइने। अमेरिकामा काम ठूलो-सानो भनेर विभेद नहुने हुँदा जे गरे पनि अप्ठ्यारो मान्नुपर्ने रहेनछ। हामीहरूले मात्रै रहेछ यस्तो-उस्तो भनेर सोच्ने, चर्चा गर्ने। आफूले भने जस्तो नोकरी पाउन कि यहींको पढाइ हुनुपर्दो रहेछ, नभए केही समकक्षी जस्तो परीक्षा दिनुपर्दो रहेछ। त्यसका लागि पनि त्यस्तै किसिमको कागजात हुनुपऱ्यो आफूसित। पर्यटक भिसामा त लुकीलुकी गरे मात्रै, अन्यथा कानुनी रहेनछ।

"दुई वर्ष पूरा भएन म यहाँ आएको? खोइ त मैले काम गर्न पाएको?" त्यससम्बन्धी कुरा हुँदा छोरीले आफ्नो अनुभव सुनाउँथिन्। दिल्ली विश्वविद्यालयबाट समाजसेवा विषयमा स्नातकोत्तर गरेपछि उनले काठमाडौँमा अन्तर्राष्ट्रिय गैरसरकारी संस्थामा सल्लाहकारका रूपमा काम गरिरहेकी थिइन्। विवाहपछि परार साल उनी यहाँ एच-वान-बी-फोर भिसामा आएकी थिइन्। ज्वाइँसाहेब अमेरिकामा काम

गरिरहनुभएकाले उहाँकी आश्रितका रूपमा उनले त्यो प्रवेशाज्ञा पाएकी थिइन्। त्यसरी आएकाले यहाँ जागिर गर्न पाउँदा रहेनछन्। हुन त छोरी घरै बस्ने भएकीले पनि हामीलाई त्यति नियास्रो लाग्न पाएको थिएन। उनले हामीलाई बेलाबेला घुमाउन, बजार गर्न लान्थिन् र हाम्रो धेरै समय उनका थरीथरीका अनुभव सुनेर पनि कट्थ्यो। उनीहरूले अब ग्रीनकार्डका निम्ति निवेदन दिने रे। त्यसै प्रक्रियाका क्रममा वर्क परमिट लिएर आफ्नो पढाइ अनुसारको काम गर्न आवश्यक औपचारिकता पूरा गर्ने उनको विचार रहेछ।

बुझ्दै जाँदा मलाई अमेरिकाको नोकरी दिने पद्धति पनि उसको वैदेशिक नीति जस्तै लाग्यो। कतिपय विषयका विज्ञहरूलाई उसले रातो गलैंचे स्वागत पनि गर्दो रहेछ। कम्प्युटर सफ्टवेयर र सूचना प्रविधि जस्ता क्षेत्रमा स्थानीय विज्ञहरूको अपर्याप्तताले होला, उसले विदेशीहरूलाई निकै आकर्षक पारिश्रमिक दिएर लोभ्याइरहेको छ रे। विगत पाँच वर्षमा पाँच

लाखभन्दा पनि बढी त्यस्ता विज्ञहरू (तीमध्ये भारत र चीनका बढी छन्) लाई अमेरिकाले जागिर दिएको छ भन्ने बुझिन्छ ।

यहाँ हामीतिर जस्तो घरमा काम गर्ने मान्छे राख्न पनि नसकिँदो रहेछ । धेरै महँगो पर्दो रहेछ, अनि ? बाबुआमा यहाँ आएर उही आफ्ना नातिनातिना स्याहार्ने, बेबी सिटिङको काम नै त हो गर्ने । कि मेरा मित्रले गरेझैं भिडियोमा सिनेमा हेरेर समय काट्नुपर्‍यो । यहाँ बस्ने छोराछोरी सबै आ-आफ्ना काममा जान्छन् दिनभरि, अनि बाबुआमाले के गर्ने त सधैँसधैँ ? सप्ताहान्त अर्थात् शनिबार-आइतबारका बिदामा घुम्न गयो; सिनेमा पनि हेर्‍यो, बस ।

सुरुसुरुमा गोपीकृष्ण हलले एकै चोटि दुइटा सिनेमा देखाउँछ भन्दा छक्क लागेको थियो । अहिले पाँच-छ वटासम्म सिनेमा देखाइने हलहरू पनि बनेका छन्, काठमाडौंमा । यहाँ अस्ति हामी गएको हलमा सोह्र वटा सिनेमा चलेका रहेछन् । अझ अन्यत्र कति होलान् थाहा भएन । अँ, अलि अस्ति आइमेक्स

प्रविधिको सिनेमाघरमा 'ह्यारी पोटर एन्ड द अर्डर अफ द फिनिक्स' हेरेका थियौँ। त्यस प्रविधिद्वारा तस्बिरलाई निकै ठूलो आकारमा देखाउन सकिने रहेछ। छक्कै परिएको थियो बडेमानको पर्दा देखेर। छ-सातत‌ले घरजत्रै अग्लो थियो होला। सिनेमा हेर्दा पनि एक छिन त अलमलिएका थियौँ, पूरै देखियो कि देखिएन भनेर। अझ कालो चस्मा लगाएर सिनेमाको अन्तिमतिर देखाइएको थ्री-डी भाग हेर्दा त सिरिङ्ग भएको थियो जीउ।

यहाँका सिनेमाघरका टिकटमा सिट नम्बर राखिँदो रहेनछ। टिकट लिएर छिऱ्यो, सिट रोज्यो अनि बस्यो। हामी हेर्न गएको ह्यारी पोटर चलचित्र चर्चित भएर होला, दर्शकहरूको भीड थियो। लाम लागेर टिकट लिएपछि हामी लामैलाममा सिनेमाघरको बरन्डामा पुगेका थियौँ। पहिलेकै सो चल्दै थियो क्यार, मूल ढोका खुलेको थिएन। दर्शकहरू सबै लाममै उभिएका थिए। केही आपसमा कुरा गर्दै थिए। केही तल बसेका पनि थिए, गलैँचामा। हामी

पनि लाममै रहेर तल बसेका थियौँ।

प्राय: सबैले पेप्सी र पप कर्न खाँदै थिए। छोरी-ज्वाइँ पनि हामीलाई त्यहीँ बस्न लाएर छेवैको पसलबाट मकैका ठूलठूला दुइटा पोका र पेप्सीका चार वटा ठूलै कप लिएर आएका थिए। मैले मकै चपाउँदै यताउति हेरेको थिएँ। सामुन्नेको भित्तानेर राखिएका दुइटा भिडियो मेसिनमा केटाकेटी खेल्दै थिए। केटाकेटीकै सिनेमा भएकाले होला, त्यहाँ भुराभुरी पनि धेरै थिए। तर हल्लीखल्ली भने ठ्याम्मै थिएन। भीडसँगको शान्ति थियो भन्नु उचित होला।

केही बेरमा मूल ढोका खुलेपछि हामी सबैभन्दा माथिल्लो सिटमा गएर बसेका थियौँ। त्यहाँ तलदेखि माथिसम्मका सबै सिटहरू बाल्कोनी जस्तै ढाँचामा बनाइएका थिए। तर अलि ठाडो गरी मिलाएर राखिएकाले होला, सबैतिर सजिलै देख्न सकिन्थ्यो। त्यहाँका सिट देखेर मैले सम्झेको थिएँ– हामीतिर सिनेमा हेर्दा सामुन्नेकाले छेकेर टाउको घरी यता घरी उता घुमाइराख्नुपर्ने भएर दिक्क होइन्छ। यहाँ भने

त्यस्तो स्थिति आइपर्ने सम्भावना थिएन।

सिनेमा सुरु हुनुपूर्व एउटाले माइकद्वारा दर्शकहरूलाई आइमेक्स प्रविधिको छोटो जानकारी दिएको थियो। आइमेक्स सिनेमाघरको पर्दा सामान्यतया साढे बहत्तर फिट चौडाइ र त्रिपन्न फिटजति अग्लाइको हुँदो रहेछ। सन् १९६० को दशकको अन्तिमतिर क्यानाडाको आइमेक्स कर्पोरेसनद्वारा निर्मित त्यो प्रविधि एक तथ्याङ्क अनुसार २००७ को मार्चसम्म संसारका जम्मा छत्तीस देशका दुई सय असी सिनेमाघरहरूले प्रयोग गरिरहेका रहेछन्। तीमध्ये साठी प्रतिशत त क्यानाडा र अमेरिकामा मात्रै रहेछन्। पछि थाहा पाएको थिएँ– त्यस्ता सिनेमाघरको सङ्ख्या भारतमा पाँच, मलेसियामा दुई र थाइल्यान्ड तथा पाकिस्तानमा एक-एक मात्र रहेछन्। बङ्गलादेश र श्रीलङ्कामा भने त्यो प्रविधि अझै पुगिसकेको रहेनछ। नेपालमा पनि अहिलेसम्म त छैन, तर अब आउला नि छिटै।

“मैले पनि यहाँको बस चढेको छैन। एक दिन सँगै जाउँला नि। आउनुहोस्, अहिले खाजा खाऔँ।”

छोरीले टेबलमा प्लेटहरू राख्दै कुरा थपिन्– “आज त टी.भी. ले दिनभरि मौसम यस्तै रहन्छ भनेको छ।”

अल्छे स्वरमा “हुन्छ” भन्दै म खाजा खान बसेँ।

यहाँका टेलिभिजन च्यानलहरूले पाँच-पाँच दिनसम्मको मौसम भविष्यवाणीको समाचार प्रसारण गर्दा रहेछन्। त्यस दिन सानो पर्दाको विद्युतीय बाकसले गरेको भविष्यवाणी नै सही भयो। आकाश दिनभरि नै उघ्रेन। म पनि एकुन्टा च्यानल फेर्दै, टी.भी. हेर्दै दिनभरि घरै बसेँ।

# बसैमा सररर

निकै दिनपछि मौसम उदार देखिएको थियो। घाम टड्कारो थियो। बिहान खाजा खाँदा मैले बसमा चढेर बजार घुम्ने सोच रहेको सुनाएको थिएँ। मेरो कुरा सुनेर उनी पनि तम्सिएकी थिइन्, सँगै जान। "म पनि चढ्छु नि यहाँको बस। हेरूँ न कस्तो हुँदो रै'छ।"

हामी दुवै जना जाने भनेपछि छोरीले सहमति जनाएकी थिइन्। तर अलिक जोड दिँदै भनेकी थिइन्– "मोबाइल लान नबिर्सनुहोला र जहाँजहाँ पुग्नुहुन्छ फोनबाट जानकारी दिँदै गर्नुहोला।"

हुन पनि यहाँ सुरक्षा व्यवस्था सशक्त मानिए पनि अपराधहरू भइरहँदा रहेछन्। स्थानीय टेलिभिजनले एउटा च्यानलमा अपराध नियन्त्रण गर्न पुलिसले अपनाएको सतर्कता, गोप्य क्यामेराका माध्यमद्वारा

अपराधीलाई समात्दाको कार्यवाही आदिसम्बन्धी कार्यक्रम प्रसारण गरिरहन्थ्यो। त्यसबाट यहाँ हुने अपराधहरूबारे अनुमान लाउन सकिन्थ्यो। नाबालिग केटीसँग अनैतिक सम्बन्ध कायम गर्ने प्रयास गरेको अपराधमा एउटा नेपाली विद्यार्थीलाई रङ्गेहात समातेको दृश्य पनि टी.भी. मा देखेको थिएँ।

बुझ्दै जाँदा थाहा पाएँ– अमेरिकामा ज्यान मार्ने र बन्दुक चलाएर गरिने अपराध अन्य विकसित मुलुकको दाँजोमा अत्यधिक रहेछ। एउटा तथ्याङ्क अनुसार जर्मनीमा वर्षदिनमा प्रति एक लाख मानिसमा एक जनाको ज्यान मारिंदो रहेछ भने अमेरिकामा करिब छ जनाको। आफ्ना नागरिकलाई बन्दुक राख्न दिने नियम केही खुकुलो भएकाले पनि अमेरिकामा त्यस्ता अपराध बढी भएका हुन् भन्ने विश्लेषकहरूको भनाइ रहेछ। यहाँ चोरी-डकैती, जबरजस्ती करणी, घरेलु हिंसा जस्ता अपराधहरू उल्लेख्य मात्रामा हुँदा रहेछन्। दुर्व्यसनको समस्या पनि ठूलै रहेछ। अपराधको मात्रा बढी भएर नै होला, यहाँका जेलमा कैदीको सङ्ख्या

पनि आनुपातिक रूपमा अन्यत्रभन्दा बढी रहेछ । एक तथ्याङ्क अनुसार सन् २००० मा प्रति एक लाख अमेरिकीमध्ये चार सय अठसठ्ठी जना जेल परेका रहेछन् । भनिन्छ, यो सङ्ख्या अन्य विकसित मुलुकको दाँजोमा पाँच गुणा बढी हो । सबैभन्दा आश्चर्य मलाई यहाँको मृत्युदण्डको तथ्याङ्क थाहा पाएर लाग्यो । अति विकसित मानिने र मानव अधिकारको मामिलामा आफूलाई ठेकेदार ठान्ने अमेरिकाले मान्छेको बाँच्न पाउने अधिकार हनन गर्ने कानुन बनाएको किन होला ! सन् २००६ मा बढी मृत्युदण्ड दिने मुलुकमा चीन, इरान, पाकिस्तान, इराक र सुडानपछि अमेरिका नै परेको थियो ।

मान्छेमा चाहना उत्पन्न हुन्छ । यो स्वाभाविक प्रक्रिया हो । अवस्था अनुसार चाहनाको स्वभाव फरक हुन सक्छ र त्यसले पूर्णता नपाउँदा मान्छेबाट अपराध पनि हुन सक्छ, त्यो मान्छे अमेरिका जस्तो विकसित मुलुककै किन नहोस् !

अपराध नियन्त्रणका निम्ति यहाँ ठाउँठाउँमा निगरानी

टोलीको व्यवस्था गरिएको हुँदो रहेछ। कुनै टोलमा अपरिचित व्यक्ति देखिए वा केही शङ्कास्पद लागे मान्छेहरूले फोन गरेर त्यस्ता टोली वा पुलिसलाई जानकारी दिँदा रहेछन्। अमेरिकीहरू अर्काको चियोचर्चो नगरे पनि आपराधिक गतिविधिका डरले शङ्कालु भने रहेछन्।

डुल्न निस्कँदा मैले जिज्ञासावश यताउति हेर्ने गरेको थिएँ। छोरीलाई मेरो स्वभाव थाहा हुनाले उनी म सकभर एक्लै कतै नगइदिए हुन्थ्यो भन्ने चाहन्थिन्। त्यो उनले प्रत्यक्ष नभने पनि म बुझ्थेँ। कतै केही परिहाल्यो र परिचय माग्यो भने चाहिन्छ भनेर बाहिर निस्कँदा हामीले पासपोर्ट प्राय: साथै राख्ने गरेका थियौँ। तर सधैँसधैँ लिएर हिँड्दा हरायो भने भन्ने डर पनि थियो। त्यसैले छोरीले हाम्रो परिचयपत्र बनाइदिन खोजेकी थिइन्। त्यसका निम्ति एक महिना त्यहाँ बसेको हुनुपर्ने रहेछ। बाँकी दुई महिनाको बसाइ मात्रलाई अमेरिकी कार्यालय धाउँदै दु:ख किन उठाउने भन्ने लागेर हामीले उनलाई रोकेका थियौँ।

पेटीपेटी हिँड्दै हामी बिहान दस बजे नजिकको बस-बिसौनीमा पुगेका थियौँ। त्यहाँ पेटीछेउमै सिसैसिसा भएको सानो राम्रो टहरो थियो। त्यसभित्र काठको बेन्च पनि थियो। हामी पुग्दा त्यहाँ कोही थिएन। परसम्म हेर्दा पनि कतै कुनै बटुवासमेत देखिएन। सर्वत्र सधैँ देखिनेजस्तै मुर्दाशान्ति थियो। बाटामा देखिने गाडीका ताँतीमा भने कुनै व्यवधान थिएन। भित्ते समय-तालिका हेर्दा बस आइपुग्न अरू पन्ध्र मिनेट लाग्ने थाहा पाएको थिएँ।

"यहाँ के कुर्ने?" उनले भनिन्– "बरु अलि परसम्म हेर्दै जाऔँ न।" प्रस्ताव मलाई पनि ठीक लाग्यो र हामी चौबाटोसम्म पुगेर बाटो तर्न यताउति हेर्न थाल्यौँ।

त्यहाँ सङ्केतबत्तीहरू रहेनछन्, न बाटो काट्न थिच्नुपर्ने स्विच भएका खाँबा नै देखिए। तर आश्चर्य, हामीले बाटो तर्न चाहेका हौँ भन्ने बुझेर होला, हामीतिरका वाहनहरू आफैँ रोकिए! सामुन्नेको गाडीमा महिला रहिछन् चालक। के गर्ने भनेर हामी ट्वाल्ल परेको

अवस्थामै थियौँ। तिनले हातको इसाराले “जाऊ, छिटो बाटो काट” भनेझैँ गरिन्। हामी यन्त्रवत् अगाडि बढ्यौँ।

म हिँड्दै सोच्दै थिएँ– यत्रो फराकिलो बाटो छ, उताबाट घुइँकिँदै आएका गाडीहरूले के गर्ने हुन्? हामी दुवै छिटछिटो लम्किँदै बाटोबीच पुगेर उभियौँ। आहा, कस्तो सुखद आश्चर्य! त्यताका सवारीहरू पनि त्यसरी नै रोकिए। अगाडिको चालकले हामीलाई “जाऊ-जाऊ” भन्ने इसारा गर्दै थियो।

यहाँ सङ्केतबत्ती नभएका चौबाटाहरूमा चालकले गाडी रोक्नुपर्दो रहेछ र बटुवालाई बाटो काट्न प्राथमिकता दिनुपर्दो रहेछ। बाटो तर्दै जाँदा मैले हामीकहाँ बटुवालाई पेल्दै सवारी चलाउने चालकहरूलाई सम्झिएँ। पारि पुगेर हामीले चालकहरूलाई अभिवादन गर्‍यौँ। प्रत्युत्तरमा उनीहरूले पनि हाँस्दै हात हल्लाए।

अलिक पर पुग्दा एउटा ठूलो कलात्मक घर देखियो। सेन्ट लुथरन चर्च रहेछ। क्रिस्चियन धर्ममा

रोमन क्याथोलिक र प्रोटेस्टेन्ट गरी दुई पन्थ छन् भन्ने थाहा थियो। पहिले त क्रिस्चियन धर्म भनेपछि रोमन क्याथोलिक भन्ने बुझिन्थ्यो। तर सोह्रौँ शताब्दीमा मार्टिन लुथर नामक जर्मन विद्वान् सन्तले त्यसताका धर्ममा चर्चको वर्चस्वको विरोध गरेर धेरै थरी संशोधनको प्रस्ताव राखेका थिए। पछि युरोपमा उनका विचारका थुप्रै अनुयायीहरू बने र कालान्तरमा उनको त्यो पन्थ प्रोटेस्टेन्ट नामले चिनिन थाल्यो। प्रोटेस्ट अर्थात् विरोध गरेकै हुनाले त्यो नाम जुराइएको होला।

सेन्ट लुथरन चर्चकै अगाडि क्याथोलिक चर्च थियो। हामी चर्च इलाकातिर पो पसेछौँ कि क्या हो, दुई मिनेटजसो हिँडेपछि बाप्टिस्ट चर्च, अरू अगाडि जाँदा अर्थोडक्स लेखिएको अर्को गिर्जाघर पनि देखियो। हिन्दूहरूमा विभिन्न दर्शनका अनुयायी र थरीथरीका पन्थहरू छन् भन्ने थाहा थियो, तर यहाँ बुझ्दै जाँदा क्रिस्चियन धर्ममा पनि दर्जनौँ धाराहरू रहेछन्।

म घडी हेर्दै हिँड्दै थिएँ। बस आउन अझै दस

मिनेट थियो। उनले "भो फर्कौं अब, उतै कुरौँ बरु" भनेपछि हामी फर्कियौँ। बिसौनीमा अऊै कोही आएको थिएन। यहाँ बसमा धेरै मान्छे हिँड्दैनन् कि क्या हो !

ठीक समयमा आयो– टाउकामा रुट नम्बर चौँसठ्ठी लेखिएको नीलो बस। काठमाडौँको ट्रली बसमा जस्तै हावाले चल्ने न्युमेटिक सिस्टम रहेछ यहाँको बसमा पनि। ड्राइभरले आफूछेउको स्विच थिच्दा ढोका खुल्ने रहेछ। हामी चढ्दाचढ्दै उसले "गुडमर्निङ" भन्यो र स्मित हाँस्दै "पास छ कि" भनेर सोध्यो।

मैले "पास होइन, नगद छ" भनेपछि उसले मेसिनतिर इसारा गऱ्यो। छोरीले हिँड्ने बेला हामीलाई बसमा चाहिन सक्छ भनेर केही चानचुन दिएकी थिइन्। सिक्काहरू हातमा लिएर मैले "कति हो" भनेर सोधेँ। उसले "एक जनाको पचहत्तर सेन्ट" भन्ने जानकारी दिएपछि मैले पैसा गनेर मेसिनको खुत्रुकेमा हालेँ।

बस एकदमै सफा रहेछ; सिटहरू पनि राम्रा र

आरामदायी। यात्रु भने नाइँ, खालीखाली। यात्रुको नाममा एउटी काली अफ्रिकी-अमेरिकी बूढी मात्रै। यताउति हेर्दा अघिल्लो सिटनेरैको र्‍याकमा केही पुस्तिका देखेर चालकको अनुमतिमा एउटा टिपेँ। बाहिर हेर्न सजिलो हुन्छ भनेर हामी पछिल्तिरको अलि अग्लो गरी बनाइएको सिटमा बस्यौँ। बस हिँडेपछि उनी यताउति हेर्न थालिन्। मैले भने पुस्तिका पढ्न थालेँ।

त्यसमा बस हिँड्ने रुटहरूसहित पुग्ने र छुट्ने समय तालिका पनि थियो। यहाँ नगर-बसहरू बिहान पाँच बजेदेखि दस बजेसम्म र अपराह्न तीन बजेदेखि राति नौ बजेसम्म आधा-आधा घण्टामा तथा बीचको अवधिमा एक-एक घण्टामा हिँडिराख्दा रहेछन्। पुस्तिकामा दररेट पनि लेखिएका थिए। सहरभित्र कहीँ पनि जाने एकतर्फी भाडा पचहत्तर सेन्ट रहेछ। तर डेढ डलर तिरे दिनभरि जताबाट जता गए पनि हुने रहेछ। पटकपटकभन्दा एकमुस्ट डेढ डलर तिर्नु ठीक नि भनेर मैले चालकनेर गएर कुरा गरेँ। उसले

त्यसका निम्ति मलाई पैसा थप्न भनेर मुसुक्क हाँस्दै दुइटा टिकट दियो। मैले अघिको खुत्रुकेमा पचास सेन्टको चानचुन खसालेँ र त्यसकै छेउको अर्को बाकसको मुखमा एक डलर राखेर सुस्तरी धकेलेँ। त्यो नोट रमाइलोसित सरररर तानिँदै मेसिनभित्र छिर्‍यो।

हाम्रो सवारी जतिजति अगाडि जान्थ्यो त्यहाँ जडित मेसिनले बोलेर आगामी बिसौनीको सूचना दिन्थ्यो। तीन-चार बिसौनीपछि दुई जना किशोर चढे। ती दुवै कानमा एयरफोन लाएर आइपोडको माध्यमबाट गाना सुन्दै थिए र हिँड्दा सङ्गीतको तालमा झुम्दै पनि थिए।

बाहिरका दृश्य हेर्दै जाँदा उनले एक ठाउँ चिहान देखेर मलाई कोट्ट्याउँदै भनिन्– "हेर्नुस् त, कस्तो सुन्दर, कति राम्ररी राखेका !" साँच्चिकै सुन्दर थियो क्रिस्चियनहरूको चिहान। जताततै क्रस गाडिएका थिए। प्राय: सबैमा फूलका गुच्छाहरू थिए। एउटा क्रसनेर चार-पाँच जना मान्छेहरू उभिएका थिए।

“आज कोही मरेको दिन होला र आफन्तहरू सम्झनामा श्रद्धाञ्जली दिन आएका हुनन्, कि मृतकको जन्मदिन हो!” उनले भनिन्। म भने आफ्नै सोचमा डुब्न थालेँ।

किन हो कुन्नि, मलाई पहिलेदेखि नै लाग्थ्यो– अमेरिकीहरूमा संवेदना हुँदैन। अठार वर्ष पुगेपछि नै छोराछोरी बाबुआमाको घर छोडेर छुट्टै बस्छन्, सबै आ-आफ्नै दुनियाँमा मस्त रहन्छन्, बूढाबूढीलाई हेर्ने कोही हुँदैनन्, बुढेसकालमा यहाँ एक्लै दुःखी जीवन काट्नुपर्छ, ज्यादै वैयक्तिक समाज छ अमेरिकामा त भन्ने जस्ता कुरा सुनेर पो हो कि! अमेरिकीहरूले विवाह गरेको चौबीस घण्टा पनि नहुँदै पारपाचुके गर्छन् भन्ने पनि सुनेको थिएँ। यतिन्जेल यहाँका कुनै अमेरिकी परिवार वा व्यक्तिसित निकट सम्पर्क भइनसकेकाले यस्तै हो भन्ने निष्कर्षमा पुग्न सकिहालेको त छैन, तर सरसरती हेर्दा संवेदनाको भाव यिनीहरूमा पनि उत्तिकै भरिएको छ भन्ने लाग्छ। हुन पनि संवेदना प्राणीभित्र रहेको नैसर्गिक गुण हो। अँ, कुनै

पनि समाजको संस्कार तथा मूल्य-मान्यताका आधारमा त्यसको आवरणमा केही भिन्नता हुन सक्छ, मात्रा कमबेसी हुन सक्छ तर छैन नै भनिहाल्न त कहाँ मिल्ला र !

बस पूर्णतः आवासीय क्षेत्रमा हामीतिरकै जस्ता ससाना बाटाहरूमा कुद्दै थियो। फाट्टफुट्ट मान्छेहरू चढ्ने-ओर्लने गर्दै थिए। ओर्लने बेला यात्रुहरूले चालकलाई धन्यवाद दिँदै हात हल्लाउँदा रहेछन्। उसले पनि सामुन्नेको ऐनामा हेरेर हात हल्लाउँदै "तपाईंको दिन राम्रो बितोस्" भन्दो रहेछ।

आवासीय क्षेत्र सकिएपछि हाम्रो सवारी ठूलै इलाका भएको स्कुल हुँदै हाई वेमा छिर्ने चौबाटामा पुगेर सङ्केतबत्ती कुर्न एक छिन रोकियो। सामुन्ने अकासे पुल रहेछ। त्यसैको बारनेर बीस-पच्चीस जना मान्छेहरू कागजका ठूलठूला पाटी समातेर उभिएको देख्यौँ। त्यसमा केही विरोधका नाराहरू लेखिएका थिए। तर ती कोही पनि कराएका वा बोलेका भने थिएनन्। सबै चुपचाप थिए।

"ए, यहाँ यसरी विरोध गर्दा रहेछन्, कस्तो हाइसुक्ख ! हाम्रातिर भए ... !" कुरा आधैमा टुङ्ग्याएर श्रीमतीले मतिर पुलुक्क हेरिन्।

हुन पनि हामीकहाँ सुन्नेले नसुनेर हो कि गर्नेले आफ्नो पुरुषार्थ प्रदर्शन गर्न हो, विरोध भन्नेबित्तिकै चक्काजाम गरिन्छ, बाटोबाटो टायर बालिन्छ, गाडी तोडफोड गरिन्छ वा जलाइन्छ, देशै बन्द गराइन्छ। त्यस्ता त्रासपूर्ण र पीडादायक कार्यक्रमहरूको मार खेप्दै आएका हामी नेपालीलाई यस्तो साधारण, छेउ न टुप्पोको भने जस्तो विरोध देख्दा उदेक लाग्नु स्वाभाविकै थियो।

हामी हिँडेको चालीस मिनेट भइसकेछ। यतिन्जेल सात-आठ जना यात्रु मात्रै चढेका थिए। बस भने बिसौनीमा पुगेर आफ्नो समय अनुसार नै रोकिँदै, हिँड्दै गरिरहेको थियो, निर्विघ्न।

"मान्छे हुँदा रहेनछन्, तैपनि ठीक समयमा हिँडेको हिँड्यै छ। घाटा हुँदैन र मालिकलाई?" उनले मतिर हेर्दै जिज्ञासा राखिन्।

मलाई लाग्यो– अहिलेको आरामदायी यात्राले उनलाई गुन्द्रक खाँदेझैँ यात्रुहरू नहुलेसम्म डेग नचल्ने हामीतिरका थोत्रा बसहरूको सम्झना आयो होला। अरू आइमाई यात्रुहरूलाई हुने कष्टको सम्झनाले उनलाई दुःखी तुल्यायो होला। मैले पनि हाम्रा ती खोक्दै धूवाँको मुस्लो फाल्ने म्याद नाघेका सार्वजनिक सवारी चढ्दाको सास्ती सम्झन पुगेँ। ओहो, महिलाहरूलाई हुने तकलिफ र उनीहरूले पोख्ने गरेका दिक्दारी! सम्झँदा मात्रै पनि हुनसम्मको विरक्ति अनुभव हुन्छ।

"साँच्चै, कसरी चलेका होलान् यहाँका नगर-बसहरू ?" उनले थप प्रश्न राखिन्।

मैले अल्छे स्वरमा अन्योल पोखेँ– "खोइ! मैले पनि केही बुझ्न सकेको छैन।"

हाम्रो वाहन पसलैपसल भएको ठाउँनेर मोडियो। "कुनै बजार आयो कि क्या हो?" उनले मतिर हेर्दै भनेपछि मैले हत्त र पत्त हातको पुस्तिका पल्टाएर हेरेँ। त्यो वेस्ट फिल्ड नामको मल भनिने विशालबजार क्षेत्र रहेछ। एक फन्का मारेर बस त्यहाँ एक छिन

रोकिने रहेछ। बस रोकिएपछि हामी दुवै त्यो बजार हेर्न ओर्लियौँ।

केही महिनाअघि हामी छोरा आदितलाई भेट्न मुम्बई गएका थियौँ। त्यहाँ उनले एक दिन हामीलाई भर्खरै बनेको इन-अर्बिट नामक मल देखाउन लगेका थिए। त्यस विशाल र भव्य भवनभित्र रहेको विद्युतीय सिँढी चढेर हामी एकपछि अर्को तलाका पसलहरू अनि तिनमा आकर्षक रूपले सजाइएका थरीथरीका सामानहरू हेर्दै हिँडेका थियौँ। त्यस भवनभित्रै सिनेमाघर, तारे होटेल, रेस्टुरेन्ट, नाइट क्लब आदि थिए। एक तलाको ठूलै क्षेत्रमा केटाकेटीहरूका निम्ति खेल तथा मनोरञ्जनको व्यवस्था गरिएको थियो। मान्छेको भीड पनि उत्तिकै थियो। त्यहाँ हिँड्दै गर्दा मलाई केटाकेटीमा मेला हेर्दाजत्तिकै आनन्दको अनुभव भएको थियो। मुम्बईको प्रचण्ड गर्मीले अत्तालिएका बेला त्यस वातानुकूलित भवनमा बसिरहूँजस्तै पनि लागेको थियो। हामीले त्यहींको फुड कोर्ट भनिने रेस्टुरेन्टहरूको समूह भएको ठाउँमा बसेर पसलैपिच्छेका परिकारहरू छान्दै

रात्रि भोजन गरेका थियौँ। मुम्बईको त्यो मल हेर्दाको आनन्द सम्झँदै हामी पस्यौं अमेरिकाको विशालबजारभित्र।

पस्दापस्दै जेसिपेनीको भव्य पसल देखियो। त्यसमा व्यवस्थित तवरले सजाएर राखिएका सरसामान हेर्दै हिँड्दा मैले पहिल्यैदेखि सुन्दै आएका र संसारभरि कहलिएका कम्पनीका ठूलठूला पसलहरू पनि देखेँ। एकातिरको खण्डमा सब वे, चाइनिज पान्डा जस्ता रेस्टुरेन्ट शृङ्खलाका पसलहरू र आइसक्रिम, कफी, कोल्ड ड्रिङ्क्स आदिका स्टलहरू थिए। हिँड्ने बाटाका बीचबीचमा राखिएका केही ससाना टहरे पसलमा पुग्दा तिनका परिचारिकाहरूले “लौ, लिनुहोस् ! चाख्नुहोस् !” भन्दै खानेकुराका नमुनाहरू बाँड्दै थिए। हामीले एकुन्टा लिएर चाख्यौँ। आइसक्रिम र जाम जस्ता ती खानेकुराहरू स्वादिष्ठ थिए। एक ठाउँमा ब्लड प्रेसर नाप्ने मेसिन रहेछ। त्यसैको छेउमा एउटा स्वास्थ्य कम्पनीको ‘यहाँ प्रेसर जँचाउन सक्नुहुन्छ’ भन्ने प्रवर्धनात्मक पाटी पनि थियो। हामी दुवैले मेसिनमा लेखिएका निर्देशनबमोजिम बटन थिचेर आ-आफ्नो

प्रेसर नाप्यौँ ।

एक ठाउँमा सानो बाकस जस्तो पसल देख्यौँ । त्यसमा पसले थिएन तर भित्ताभरि निर्देशनहरू लेखिएका थिए । लेखनी पढ्दा त्यहाँ राखिएको कम्प्युटर चलाएर आफ्नो तस्बिर आफैँ बनाउन सकिने कुरो थाहा पाइयो । हामीले आ-आफ्नो तस्बिर बनाउने विचार गर्‍यौँ । तर मेसिन प्रयोग गर्दा हाल्नुपर्ने साना नोट हामीसित नभएर र सयको नोट कहाँ कसरी साट्ने भन्ने मेसो नपाएर त्यसै फर्कियौँ । हामीले केही समय केटाकेटी खेल्ने ठाउँमा राखिएको बेन्चमा बसेर त्यहाँको रमिता हेर्‍यौँ । मान्छेको चहलपहल निकै थियो, तथापि त्यो भुइँतला मात्रैमा बनेको बजार मलाई त्यति ठूलो लागेन । छोरीले भने अनुसार सियाटल र त्यसका वरपर ठूलठूला कहलिएका विशालबजारहरू छन् रे । सन् १९५० ताका बनेको सियाटलको नर्थगेट मल अमेरिकाकै पुरानामध्येको ठूलो विशालबजार हो रे । त्यहीँको सुपर मल र टाकोमाको टाकोमा मल पनि ठूलै छन् रे । उनले हामीलाई एक दिन ती

बजारहरू देखाउन लाने कुरा पनि गरेकी थिइन्।

मैले थाहा पाए अनुसार, सपिङ मल वा मल मात्र पनि भनिने एउटै छानामुनि रहेको विशालबजार क्षेत्र निर्माण गर्ने अवधारणाको विकास सन् १९५० तिर भएको हो र त्यसका प्रणेता अस्ट्रेलियामा जन्मेका आर्किटेक्ट भिक्टर ग्रुएन हुन्।

क्यानाडा, अलबर्टाको एडमोन्टन सहरमा अवस्थित वेस्ट एडमोन्टन मल संसारको सबैभन्दा ठूलो आधुनिक मल मानिन्छ। यसको निर्माण सन् १९८६ मा भएको हो। तर एउटै छानामुनि नभई एकै ठाउँमा अवस्थित संसारकै ठूलो बजार क्षेत्र भने अमेरिकाको फिलाडेल्फियामा सँगसँगै रहेका प्लाजा एट किङ अफ प्रुसिया र कोर्ट एट किङ अफ प्रुसिया नामका दुई मलहरूको समूहलाई मानिन्छ। चीनको बेइजिङमा रहेको गोल्डेन रिसोर्सेस संसारको दोस्रो ठूलो मलका रूपमा चिनिन्छ । सन् २००४ मा बनेको त्यो बजार भवनको क्षेत्रफल छ लाख वर्गमिटर छ। सन् २००६ मा निर्मित तीन लाख छयासी हजार वर्गमिटर क्षेत्रफल भएको

फिलिपिन्सको एस.एम. संसारको तेस्रो ठूलो मलमा पर्छ । (अब त दुबईको मल अफ अरेबिया संसारकै ठूलो मलमा गनिइसक्यो । नौ लाख उनन्तीस हजार वर्गमिटर क्षेत्रफल रहेको त्यो मल हामी अमेरिका पुग्दा धमाधम बन्दै थियो ।) अमेरिकाको सबैभन्दा ठूलो र संसारभरिमै सबैभन्दा बढी ग्राहकले किनमेल गर्ने विशालबजार भने मिनेसोटाको मल अफ अमेरिकालाई मानिन्छ ।

वस्तु विनिमयका निम्ति बजार क्षेत्र निर्माणको सुरुवात दसौँ शताब्दीभन्दा पनि अघिदेखि भएको हो रे । इरानको तेहरान सहरको छत भएको दस किलोमिटर लामो ग्र्यान्ड बजारको इतिहास पनि निकै पुरानो हो । पन्ध्रौँ शताब्दीतिर निर्मित इस्तानबुलको ग्र्यान्ड बजारलाई अझै पनि छत भएकामध्ये संसारकै सबैभन्दा ठूलो बजार मानिन्छ । इङ्ल्यान्डमा सन् १७७४ मा बनेको अक्सफोर्ड कभर्ड मार्केट उत्तिकै आकर्षणका साथ अद्यापि सञ्चालनमा छ ।

वेस्ट फिल्ड बजारबाट निस्कँदा एउटा बस भर्खरै

गयो भन्ने थाहा पायौँ। अब अर्को आधा घण्टापछि मात्र आउने हुनाले समय काट्न कतै केही छ कि भनेर मैले यताउति आँखा डुलाएँ। एक ठाउँ डलर ट्री लेखेको देखेँ। त्यो एकडलरे पसलको साइन बोर्ड देखेलगत्तै मैले नेपाल सम्झिएँ। केही वर्षपहिले काठमाडौँको ज्ञानेश्वरमा सबै सामान ९९ रुपैयाँमा पाइने एउटा पसल खुलेको थियो। म पनि गएको थिएँ, केही राम्रो देखे किन्नुपर्ला भनेर। पसलमा निकै घुइँचो थियो। सबैले थुप्रैथुप्रै सामान किन्दै थिए। बहुत चल्यो त्यो पसल। केही समयपछि त्यसैको देखासिकी जतातते खुले त्यस्तै पसलहरू।

त्यसै बेला मैले एम.बी.ए. गरेका मेरा एक जना टाढाका भतिजालाई पनि सम्झिएँ। उनले आफ्नै केही गर्छु, जागिर खान्नँ भनेर अर्का एक इन्जिनियर साथीसित मिलेर एउटा कन्सल्टेन्सी फार्म खोलेका थिए। एक पटक उनी घर आएका बेला "कस्तो चल्दै छ तिम्रो कन्सल्टेन्सी" भनेर सोध्दा उनले भनेका थिए– "के चल्ने काका, त्यति राम्रो छैन।"

उनले सुनाए अनुसार, सल्लाह माग्न आउने धेरैले नातागोताका सन्दर्भ जोडेर शुल्क नै नतिरी सित्तैँमा काम लिन खोज्थे रे। प्राय: सबैले कुनै किसिमको समस्या नभई बेस्सरी चल्ने उद्योगधन्दाका बारेमा जानकारी माग्थे रे। "झन्झट नभएको, जोखिम नभएको, यताबाट कागज हाल्यो उताबाट मेसिनले फुत्तफुत्त नोट निकाल्ने जस्तो सजिलो व्यवसाय पनि कुनै हुन्छ र काका?" उनले उदेक र दिक्क मान्दै भनेका थिए– "कसैको एउटा उद्योग चलेको थाहा पाए भने त्यस्तै कारखाना खोल्न के गर्नुपर्छ भनेर सल्लाह माग्न आउने धेरै देखिन्छन्। कस्तो सोच हो हाम्रा उद्यमीहरूको कुन्नि ?"

त्यही ९९ रुपैयाँको पसलको कुरा हुँदा एक दिन एक मित्रले "अमेरिकामा एक डलरवाला पसल हुन्छन्" भनेको सुनेको थिएँ।

"हेरौँ न केके पाइँदो रहेछ एक अमेरिकी डलरमा। समय पनि बित्छ।"

श्रीमतीको प्रस्तावमा मैले पनि सही थापेँ– "ठीक

हो। ल जाऊँ, त्यति थोरै रकममा यहाँ केके पाइँदो रहेछ, हेरौँ।" हामी दुवै हाँस्दै त्यतै लाग्यौँ।

त्यस पसलमा पनि अन्यत्र जस्तै थुप्रै ग्राहकहरू थिए। त्यहाँ अन्य डिपार्टमेन्टल स्टोरमा जस्तै लत्ताकपडा, कस्मेटिक, भाँडाकुँडा, डिब्बाबन्द खानेकुरा, फलफूल, तरकारी आदि जस्ता सामानहरू राखिएका भए पनि केटाकेटीका प्रयोजनका सरसामानकै अधिकता थियो। खरिदकर्ताहरूमा पनि स्थानीय गोराभन्दा काला र हामी जस्ता एसियावासीहरू नै बढी थिए। कलेज पढ्ने दुइटी केटीहरू एकअर्कासित छलफल गर्दै थुप्रै सामान किन्दै थिए। तीमध्ये एउटी भियतनामी र अर्की फिलिपिनो होली भन्ने लख काटेँ। त्यहाँ पनि हामीले चीनतिरकै सामानहरू धेरै देख्यौँ। त्यहाँका चीजबीज देख्नमा त राम्रै देखिन्थे तर गुणस्तरमा कमसल छन् कि जस्तो लाग्यो। घुमीघुमी हेरे पनि उनले केही किन्ने जाँगर भने देखाइनन्।

एक डलरको पसलबाट फर्केर हामी बजार क्षेत्रतिर जाने बस समात्न पेटीपेटी हिँड्दै थियौँ। बिसौनीनेरको

मोडमा थोमस लेखेको काठको पाटी देखेर म रोकिएँ। दुई फिटजति चौडाइ र तीन फिटजति लम्बाइ भएका त्यस्तै पाटीहरू पेटीछेउ माटोदेखि तीन फिटजति उचाइमा गाडिएको मैले अन्यत्र पनि देखेको थिएँ। के रहेछ भन्ने जिज्ञासाले मलाई त्यसनजिक पुऱ्यायो। स्थानीय उम्मेदवारले भोट माग्न चुनाव प्रचार गरेका रहेछन्। अन्य उम्मेदवारका चार वटा त्यस्तै पाटीहरू पनि अलि परपर गाडिएका थिए।

"यसरी पनि प्रचार हुन सक्दो रहेछ त!" उनको प्रतिक्रिया सुनेर मैले हामीकहाँ हुने चुनाव प्रचारको रङ्गीबिरङ्गी भित्तेलेखन र सहरै विरूप पार्ने प्रकारका प्रचार-प्रसार सम्झिएँ।

हामी पुनः बसमा चढ्यौँ। अहिलेको सवारीमा चालक महिला रहिछन्। आवासीय क्षेत्र हुँदै हिँडिरहेको बस एउटा कलेजनेर पुगेर रोकियो। मैले झ्यालबाट चियाउँदा चारैतिर हरियोपरियो रमाइलो परिवेश देखेँ। मूल ढोकाबाटै उकालो हुँदै गएको बाटाको पल्लो छेउमा ठूलो भवन थियो। त्यहाँको वातावरणले मलाई

चालीस वर्षअघि आफूले पढेको त्रिभुवन विश्वविद्यालयमा पुऱ्यायो ।

यस्तै रमणीय त थियो त्यति बेलाको हाम्रो एक मात्र विश्वविद्यालय । कति आनन्द लाग्थ्यो मलाई त्यस बेला त्यो उकालो बाटो चढ्दै आफ्नो विभागतिर जाँदा ! अमेरिकातर्फ उड्नुभन्दा केही दिनअघिको कुरो हो– एक प्राध्यापक मित्रसँगै मलाई त्यहाँ एउटा समारोहमा जाने सुयोग मिलेको थियो । धेरै वर्षपछि पुनः नियालेको थिएँ देशको जेठो सर्वोच्च शिक्षालयलाई । आह, कस्तो अव्यवस्थित थियो त्यहाँको वातावरण ! बाटोबाटै खाल्डाखुल्डी, नारा पोतिएका भित्ता, उत्तानो परेका साइनबोर्ड, रङ्ग उडेका डिपार्टमेन्ट भवन, घाँस उम्रिएका छतहरू । यी सब देखेर अमिलिएको थियो मेरो मन ।

फर्कंदा बाटामा ती मित्रले भावुक हुँदै भनेका थिए– “किन होला हँ, जतातत‌ै यस्तै दयनीय अवस्था देखिन्छ ? लाग्छ, हामीकहाँ कसैलाई केहीको उत्साह छैन; केहीप्रति अनुराग छैन । साधन नभएर हो कि हामीमा क्षमता नभएर यस्तो भएको हो ?”

म चुपै बसेको थिएँ त्यस बेला अलमलिएर। एक जना विद्वान्को त्यस्तो गम्भीर प्रतिक्रिया सुनिसकेपछि के पो बोल्ने?

ढोका बन्द भएको आवाजले म झस्किएँ। ती महिला चालक भर्खरै बाहिर चुरोट पो तान्दै थिइन्। कति छिटो सकिछन्! कि म लामै टोलाएछु? उनले बस स्टार्ट गर्दागर्दै म फेरि सोचमग्न भएँ। मेरो सोचाइविपरीत यहाँ धेरैले चुरोट खाँदा रहेछन्। हाम्रा गाउँघरतिर आइमाईहरूले निर्धक्क चुरोट-बिँडी फुकेको देख्दा मलाई लाग्थ्यो महिला अम्मलीको सङ्ख्या हाम्रो देशमै बढी होला, तर यहाँका आइमाई यस लतमा पनि धेरै अगाडि रहेछन्।

हाम्रो बस उकाली-ओराली बाटो हुँदै अगाडि बढ्दै थियो। एक ठाउँमा उनले बाटोतिर इङ्गित गर्दै भनिन्– "उः, हेर्नुस् भिखारी!"

एउटा मोडनेर बाटोछेउको चौरमा सत्र-अठार वर्षजतिकी केटी कागजको सानो पाटी लिएर बसेकी रहिछ। त्यसमा लेखिएको थियो– 'म भोकी छु, मेरो घर छैन,

मलाई मदत गर्नुहोस् ।' राम्रा लुगा लाएकी त्यो किशोरी देख्नमा पनि राम्री थिई । उसले कानमा एयर फोन लाएर सङ्गीत पनि सुन्दै थिई । बजारतिर घुम्दा एक ठाउँमा टोपी थापेर एउटाले गीत गाउँदै गरेको र अर्को ठाउँमा कोकाकोलाको खाली कप सामुन्ने राखेर एउटाले बिगुल फुक्दै गरेको देखेको थिएँ । बाटो हिँड्नेहरूमध्ये कसैकसैले त्यस्तालाई एक-दुई डलर दिएको पनि देखेको थिएँ । यहाँ आउनुअघि अमेरिकामा पनि भिखारीहरू हुन्छन् भन्ने सुनेको थिएँ । त्यति खेर हाम्रा बहुरूपका मगन्तेहरूको कल्पना गर्दै सोच्थेँ– कस्ता होलान् ती अमेरिकाका माग्नेहरू ? तर यहाँ आएर यी राम्रा पहिरनधारी, खाइलाग्दा भिखारी देखेर म अन्योलमा परेँ ।

एक दिन ज्वाइँसाहेबसँग भिखारीहरूबारे सोध्दा थाहा पाएको थिएँ– यहाँ मागेको देख्यो भने पुलिसले समातेर लान्छ रे । दुर्व्यसनी, काम गर्न नखोज्ने खालका मान्छेहरू नै लुकीछिपी माग्न बसेका हुन्छन् रे । कामै नपाएर मागेर खानुपर्ने स्थिति अमेरिकामा

छैन भन्दा हुन्छ। काम नभएका र बास नभएकालाई पनि ठाउँठाउँमा बस्न-खानका निम्ति समाज कल्याण भवनको व्यवस्था छ। त्यहाँ बेलुकी गएर बस्न-खान पाइन्छ, तर बिहान कोठा छोड्नुपर्छ र नोकरी खोज्न जानुपर्छ रे। उहाँकै एक साथी पढाइ सकेपछि नोकरी नपाउन्जेल झन्डै एक साताजति त्यस्तै भवनमा बसेका थिए रे।

मैले सोच्दासोच्दै हामी चढेको बस बजारको अन्तिम बिसौनीमा आएर रोकियो। सबै यात्रुसहित हामी पनि ओर्लिएर बजारतिर लाग्यौँ। सामुन्नेको बाटो काटेपछि हामी मूल सडकमा पुग्यौँ। दुवैतिर लहरै पसलहरू देखिए। तीमध्ये धेरैजसो रेस्टुरेन्ट थिए।

हामी पेटीपेटी हिँड्दै थियौँ। एउटा युवकले छेवैमा आएर “माफ गर्नुहोला” भन्दै अभिवादन गऱ्यो। उसको हातमा कागजको मुठो थियो। मैले ऊतिर हेरेपछि उसले खानेकुरामा मेरो रुचि सोध्न थाल्यो। कुरा गर्दै जाँदा ऊ एउटा कम्पनीद्वारा उत्पादित ऐँसेलुको पेय पदार्थको बजार अध्ययन गर्दै रहेछ।

अनाहकमा हाम्रो समय खाने भयो भनेर मैले टार्न खोजेँ तर उसले छोड्दै छोडेन। ऊ मसँगै हिँड्दै थियो र एकपाते फारम भरिदिन अनुरोध गरिरहेको थियो। उसले भनेझैँ गरे बरु छिटै छोड्ला भन्ने लागेर छिटछिटो फारम भरेर दिएँ। ऊ प्रफुल्लित हुँदै मुसुक्क हाँसेर आभार व्यक्त गर्ने गरी टाउको यसो झुकाउँदै गयो। मैले जीउ हलुको भएझैँ लागेर श्रीमतीतिर हेरेँ। उनी छेवैको पसलबाहिर उभिएर त्यहाँ राखिएका गहनाहरू हेर्दै थिइन्।

म नजिकै पुगेपछि उनले हाँस्दै भनिन्– "छिटै छोडेछ त! त्यो जस्तरी पछि लागेको थियो, त्यो हेर्दा आधा घण्टा त पक्कै खान्छ होला भन्ने ठानेकी थिएँ।"

मैले त्यस केटाको अनुनय-विनयपूर्ण अनुहार सम्झेर हाँस्दै भनेँ– "बिचराको जीविकाको कुरो पऱ्यो।"

अलि परको रेस्टुरेन्टछेउ एउटो भायोलिन बजाउँदै उभिएको देखियो। उसले बाजाको बाकस खोलेर छेवैमा राखेको थियो। त्यसमा धेरै डलर देखिन्थे।

कला प्रदर्शन गरेर माग्नेलाई यहाँ मान्छेहरूले पैसा दिँदा रहेछन् भन्ने लाग्यो ।

त्यहाँबाट मोडिँदा पर एउटा जहाज देख्यौँ र त्यतै लाग्यौँ । त्यो ओलम्पिया बन्दरगाह क्षेत्र रहेछ । ठूलो क्रेनले जहाजबाट सामान झिक्दै थियो । समुद्रको तीरैतीर काठको पुल जस्तो पारेर बनाइएको बाटामा हामी चारैतिर हेर्दै हिँड्दै थियौँ । त्यहाँको पानी केही फोहोर थियो । समुद्र किनारमा रङ्गीबिरङ्गी यान्त्रिक डुङ्गाहरू लहरै बाँधेर राखिएका थिए । ठाउँठाउँमा सिगल नामका समुद्री चराहरू चरिरहेका देखिए । केही चराहरू कराउँदै, उड्दै हामीछेउको काठको बारमाथि आएर बसे ।

हिँड्दै हामी पल्लो चौबाटोनेर पुग्ने बेला उनले एकाएक मेरो हात कस्सेर समातिन् र मलाई छेउतिर हेर्न लाइन् । हरे, कस्तो रमिता ! जलाशय र पेटीबीचको मैदानमा उभिएर आलिङ्गनबद्ध एक युवा जोडी चुम्बनमा लीन थियो । एकदमै उन्मुक्त !

हामीले एक-अर्कालाई कौतूहलमिश्रित आँखाले हेराहेर

गऱ्यौँ। एकै छिन अलमलिएका पनि थियौँ, के हो यो भन्ने नबुझेर। अलमलमै हामीले चारैतिर हेऱ्यौँ। ए, त्यहाँ जलाशयको तीरैमा एक तन्नेरी जोडीले चुम्बन गरिरहेको मूर्ति राखिएको रहेछ र त्यस ठाउँलाई 'किस कर्नर' भनिँदो रहेछ। बाटो हिँड्ने जोडीहरूले त्यहाँ उभिएर चुम्बनको आनन्द लिँदा रहेछन्। पुनः एक-अर्कालाई हेरेर हामी हाँस्दै अगाडि बढ्यौँ।

त्यहाँका फराकिला, चिल्ला अनि सुकिला पेटीमा हामी स्वच्छन्द हिँड्दै हेर्दै थियौँ– आकर्षक रूपले सजाएर राखिएका पसलका सामग्रीहरू, ग्राहकले टनाटन रेस्टुरेन्टहरू, हतारहतार हिँड्दै गरेका मान्छेहरू, सडकमा कुद्दै गरेका नयाँ ढाँचाका थरीथरीका चिल्ला गाडीहरू। मैले घडी हेर्दा हामी फर्कने बस आउने बेला भइसकेको थियो। थप अल्लारिने लालसा रोकेर हामी लाग्यौँ बस-बिसौनीतिर।

बजार क्षेत्रको त्यो अन्तिम बिसौनीमा बसहरू आउँदै-जाँदै थिए। "यहाँ त जे देखे पनि हेरेको हेऱ्यै होइने !" बिसौनीको बेन्चमा बस्दै आश्चर्य मुद्रामा मेरी

श्रीमती बोलिन्। उनी भर्खरै त्यहाँको रेस्टरुमबाट फर्केकी थिइन्।

सूचनापाटीका जानकारीहरू पढ्दापढ्दै मैले उनलाई सोधेँ– "के देख्यौ र त्यस्तो हँ?"

"उता हेर्नुस् न!" उनले उत्तेजनापूर्ण स्वरमा भनिन्।

एउटी वृद्धा ह्वील चियरमा बसेर बस चढ्न खोज्दै थिइन्। यहाँका बाटाहरूमा ह्वील चियर गुडाउन मिल्ने गरी विशेष व्यवस्था गरिएको देखेको थिएँ। अपाङ्गहरूको सुविधाका निम्ति उनीहरूका गाडी पार्क गर्ने स्थानहरूको भुइँमा ह्वील चियर जस्तै चिह्न अङ्कित गरिएको पनि देखेको थिएँ । वृद्धाले गुड्ने कुर्सी अगाडि बढाउँदै थिइन्। ड्राइभरले स्विच थिचेर होला, बस बिस्तारै तलतल झुक्दै थियो। गाडी पूरै तल झुकेपछि त्यसको मुन्तिरबाट फलामको पातो निस्केर पुल जस्तो गरी भुइँमा झर्‍यो। वृद्धा आफ्नो ह्वील चियरमै बसेर बसभित्र छिरिन्। ड्राइभरले उनको चियर मिलाएर राखिदियो र उनलाई सिटमा बस्न मदत गर्‍यो।

हामीले हेर्दाहेर्दै त्यहाँ एउटा बूढो साइकल लिएर आयो। यहाँ साइकल गुडाउन बाटाहरूमा दाहिने छेउको कुनो छुट्ट्याइएको हुँदो रहेछ। बेलाबेला कसैकसैले तिनमा साइकल कुदाएको पनि देखिन्थ्यो। यहाँका मानिसहरूले व्यायामका रूपमा र केहीले सौखले साइकल चलाउँदा रहेछन् अनि थाकेपछि वा चलाउन पुगेपछि नजिकको बिसौनीबाट बस समातेर गन्तव्यमा पुग्दा रहेछन्। बसको अग्र भागमा साइकल राख्ने व्यवस्था गरिएको हुँदो रहेछ।

बसको ड्राइभर बाहिर आयो र निर्दिष्ट ठाउँमा त्यस बूढाको साइकल झुन्ड्याएर आग्लोले कस्यो। प्रस्थान समय भएपछि उसले पुनः स्विच थिच्यो। फलामको पातो उचालियो र यथास्थानमा पुग्यो। ढोका पनि बन्द भयो, अनि बस हिँड्यो।

म रल्ल परेर ती सबै कृत्य हेरिरहेको रहेछु। एउटी महिलाले “क्षमा गर्नुहोला” भनेपछि झस्किएँ। रमिता हेर्दाहेर्दै अगाडि बढेर मैले हिँड्ने बाटो छेकेको रहेछु। “माफ पाऊँ” भन्दै पछि सरेँ। ती महिला

यसो हाँसेर बच्चा बोकेको हाते गाडी धकेल्दै अघि गइन् ।

"चौँसठ्ठी नम्बरको बसमै होइन हामी फर्कने? उः, आयो त !" श्रीमतीले देब्रेतिर देखाउँदै भनिन् ।

हामी फर्कने बस आइपुगेको रहेछ । हामी छिटछिटो उतै लाग्यौँ । यात्रु थोरै थिए, त्यस्तै पाँच-छ जना । तर सबै लाममा उभिएका थिए । हामी चढेपछि ड्राइभरले अभिवादन गर्‍यो । मलाई लाग्यो– अब उसले हामीलाई पास छ कि छैन भनेर सोध्छ । मैले हत्त र पत्त गोजीबाट झिकेर पहिले लिएको टिकट देखाएँ । उसले हाँसेर भित्र जान इसारा गर्‍यो । हामी पछिल्तिरकै अग्लो सिटमा गएर बस्यौँ । तोकिएको समयमा ड्राइभरले स्विच थिचेर गेट बन्द गर्‍यो र सवारी हिँडायो । उनी व्यस्त भइन् यताउति हेर्न । म सोच्न थालेँ– झन्डै चालीस वर्षजतिअघिको काठमाडौँको कुरो ।

त्यसताका हिमालय नाम गरेको हो क्यार, रातो बस चल्थ्यो, रत्नपार्कदेखि पाटनढोकासम्म । त्यसका गुरुज्यूले

पनि त्यसरी नै सिटमा बसीबसी आफूछेउको एउटा हातो घुमाउँदा ढोका बन्द हुने र खुल्ने गर्थ्यो। त्यसै बसमा त हो नि मलाई कसैले तन्नमभगत पारेको !

पाटनतिरको एउटा साथीलाई भेट्न जान म शहीदगेटमा बस कुरिरहेको थिएँ। निकै भीड थियो। त्यस बेला काठमाडौँमा चल्ने सार्वजनिक सवारीहरूको स्थिति रुन्दयनीय थियो। घण्टौँपछि बल्लबल्ल एउटा आउँथ्यो; चढ्ने मान्छे धेरै हुन्थे। भीड त हुने नै भयो। बस आएर रोकिनेबित्तिकै ठेलमठेल सुरु भएको थियो, सबैलाई चढ्नुको आत्तुरी। म भर्खरको युवक, पछि हट्ने कुरो पनि भएन। बढेको थिएँ अगाडि ढोकातिर, भित्र छिर्न। तर पढाइ खर्चको दुई सयजति रुपैयाँ सँगै भएको हुँदा म सतर्क पनि थिएँ र एउटा हात पैसा भएको पछाडिको खल्तीमा राखेको थिएँ। धकेलिँदै, हुत्तिँदै एकै छिनमा म बसभित्र पुगेको थिएँ र ठूलै प्रयासपछि यसो उभिन सक्ने भएर मैले आफ्नो खल्ती छामेको थिएँ। आह ! बडो निर्ममतासाथ कसैले मेरो पैसा उडाइसकेको रहेछ, पूरै पाकेट काटेर। म

कराएको थिएँ– “मेरो पाकेट मारियो।” तर सुनेर पो के गर्ने कसले? कोही हल्लन सक्ने स्थितिमै थिएनन्। विवश म कराउँदै थिएँ। तर त्यो बस भने कब्जा खुस्केका आफ्ना झ्यालका सिसाहरूको झ्याली बजाउँदै हिँड्दै थियो।

“ओर्लने ठाउँ आइपुग्यो होइन?” श्रीमतीको प्रश्नले म झस्कें। हाम्रो बिसौनी आइसकेको रहेछ। हत्त र पत्त मैले झ्यालमाथिको रातो तार थिचें। घण्टी बज्यो र बस रोकियो। चालकलाई धन्यवाद दिँदै हामी ओर्ल्यौं।

# तारा टेक्दै नाच्दो छ हलिउडको सडक

हामी एकाबिहानै निस्कियौँ। सबेरै सवा चार बजे निस्कने भनेर समयमा उठ्दाउठ्दै पनि केके भएर हो, आठ-दस मिनेट ढिलो भइहाल्यो। रातिदेखि परेको पानी अझै थामिने छाँटकाँट थिएन; सिमसिम पर्दै नै थियो। चिसोचिसो हावा पनि चल्दै थियो।

जाडो भएर मैले ज्वाइँसाहेबलाई गाडीको एसी चलाइदिन भनेँ। हामी विमानस्थल जाँदै थियौँ, बोलीचालीमा एल.ए. भनिने लस एन्जेलस जान। हतारोका कारण अबेरसम्मै भोकै रहिएला भनेर ज्वाइँसाहेबले गाडी म्याक डोनाल्डको ड्राइभ थ्रु पसलमा छिराएर सबैका लागि बर्गर र कफी लिनुभयो। बर्गर भनिने दुई गोला रोटीबीच तारेको मासु राखिएको त्यो परिकार पछि खाने सल्लाह भएर छोरीले नेप्किनमा

बेरेर राखिन्। समयमा विमानस्थल पु-याउन ज्वाइँसाहेबले गाडी घुइँक्याउनुभयो। म तातो कफीको स्वाद लिँदै बाहिर हेर्न थालेँ।

दिन उघ्रिसकेको थिएन, तर बाटाभरि दुवैतर्फ लहरै खाँबाहरूमा बलेका बत्तीहरूको चमकले चारैतिर झलमल्ल थियो। कमिलाका ताँतीझैँ वेगसँग कुदिरहेका गाडीका हेडलाइटको टहकले छुट्टै आनन्द दिइरहेको थियो। परपर हेर्दा पनि जताततै झिलिमिली देखियो।

"यहाँका चिमहरू जल्ने, बिग्रने गर्दा रै'नछन् कि क्या हो!" बाटोतिर हेर्दै मेरी श्रीमती छक्क परिन्। हुन पनि बत्ती नबलेको खाँबो एउटै देखिएको थिएन।

"त्यसो होइन मम्मी।" छोरीले भनिन्– "यहाँ मर्मत गरिरहन्छन् नि।"

मैले हाम्रो टोलमा राति हिँड्दाको पीडा सम्झिएँ– कतै कुनै खाँबोमा बत्ती हुन्नन्; भएका पनि बलेका हुँदैनन्। मैले आफ्नो विरक्ति रोक्न मनमनै आफैँलाई सम्झाएँ– रात परेपछि राजधानीका धेरै मूल सडकहरू

त डरलाग्दो अँध्यारोमा डुबेका हुन्छन् भने हाम्रो त्यो सानो कुनोको के कुरागराइ भयो र !

हामी ठीक समयमै गन्तव्यमा पुग्यौँ। ज्वाइँसाहेबले यस पटक पनि त्यही सात तलामाथि लगेर गाडी राख्नुभयो, तीन दिनका लागि। हामी त्यहीँबाट आफैँ बग्ने विद्युतीय सिँढी चढेर चेक-इन काउन्टरतिर लाग्यौँ। सबै कुरा कम्प्युटरीकृत हुनाले होला, त्यहाँ हामीलाई धेरै समय लागेन। तर सुरक्षा कक्षमा भने लामै कुर्नुपऱ्यो। एकातिर कोट, पेटी, जुत्ता आदि खोलेर एक्स-रे परीक्षणका निम्ति प्लास्टिकको भाँडामा हाल; अर्कातिर गएर आफ्नो शरीर जँचाउ; पुनः गएर आफ्ना सामान लेउ; अनि फुकालेका पहिरन पहिर र भाँडो थन्क्याउ। यी सबै गर्दा समय लाग्ने नै भयो। हामीले सबेरै किनेका बर्गर छोरीले हातमा लिएकी थिइन्। ती एक्स-रेमा राख्ने कि के गर्ने? त्यसमा पनि एक छिन अलमल भयो। अन्त्यमा त्यहाँको जाँचकीले मागेर केके गऱ्यो कुन्नि, निस्कने गेटनेर पुग्दा मात्र फर्कायो ती रोटाहरू। कडै रहेछ यहाँको

सुरक्षा प्रक्रिया ।

विमानस्थलभित्र उडान नम्बर लेखेको कक्षमा पुग्दा सबै यात्रुहरू लाममा उभिएको देख्यौँ; उड्ने बेला भइसकेको रहेछ । जहाजको ढोकैमा अग्लो कुइरे केही निहुरिएर उभिएको थियो । नजिकै पुग्दा त्यस अधबैँसे परिचारकले मलाई "गुडमर्निङ" भनेर अभिवादन गऱ्यो । उसको घाँटी निहुरिएको देख्दा मैले हामीकहाँ उड्ने सानो होचो टुइनेटर विमान सम्झिएँ । तिनमा पस्दा यसरी नै त निहुरिएर हिँड्नुपर्छ । अमेरिकामा आन्तरिक उडानका जहाजहरू सानै हुने रहेछन् क्यार । सिटमा बसेपछि चारैतिर आँखा डुलाएँ– सिट पचास वटाजति होलान्, तर सबै भरिएका । यहाँको उडानमा चिया, कफी वा जुस र बिस्कुट जस्ता खानेकुराहरू मात्र दिइँदो रहेछ । अर्थोक चाहिए किन्नुपर्दो रहेछ । जहाज उडेपछि हामीले हाम्रा बर्गर झिकेर जहाजभित्र दिइएको मनतातो कफीसँगै खायौँ ।

श्रीमती झ्यालनेर थिइन् । बेलाबेला मलाई बाहिर हेर्न लाइरहेकी थिइन् । यताको मौसम सफा थियो;

घाम लागेको थियो। जहाजबाट हेर्दा तल धेरैजसो भाग बन्जर देखिए। पहाडहरू पनि वनस्पतिविहीन रूखा, ढुङ्गैढुङ्गा मात्र भएका देखिएका थिए। मुस्ताङतिर हिँड्दा मैले त्यस्तै मरुभूमीकरण हुँदै गएका जस्ता थुप्रै नाङ्गा डाँडाहरू देखेको थिएँ। त्यस बेला कुनै वनस्पति नै नभएका पहाड पनि हुँदा रहेछन् भनेर आश्चर्य मानेको थिएँ।

एक ठाउँमा हिउँले ढाकिएको पहाड देखियो। त्यो सेन्ट हेलेन ज्वालामुखी रहेछ। हाम्रो जहाज ओरेगन राज्य नाघेर क्यालिफोर्नियातिर लाग्दै थियो। त्यताको भू-बनोट पनि उस्तैउस्तै थियो। तर विकट जस्ता देखिने ती पहाडी क्षेत्रहरूमा पनि सडकचाहिँ थिए। तिनमा एकपछि अर्को गर्दै कुदिरहेका गाडीहरू देखेर हामी बूढाबूढीले आश्चर्य मान्दै एकअर्कालाई हेर्‍यौँ। कतैकतै पहाडका बीचमा देखिने टारहरूमा ठूलठूला निर्माणहरू भइरहेका पनि देखिए। यस्तो मरुभूमिरूपी अनकन्टारमा के बनाएको होला भन्ने लाग्यो। पछि ज्वाइँसाहेबबाट थाहा पायौँ– अमेरिकाको सडक सञ्जाल

आश्चर्यजनक छ। उसले जतासुकै सडक पुऱ्याएको छ। साँच्चै, उसका निम्ति केही पनि दुष्कर छैन। अति विकट मानिने मरुभूमिमा पनि लास भेगास जस्तो अत्याधुनिक सहर बसालेर संसारभरिका धनाढ्यहरूको आकर्षण केन्द्र बनाएको छ रे– जुवाघर, नाइट क्लब र त्यस्तै विलासिताका साधनहरूको रहरलाग्दो प्रबन्ध गरेर।

हाम्रो उडान अवधि दुई घण्टा बीस मिनेटको थियो। घडी हेरेँ– ओर्लने समय हुनै लागेछ। बाहिर नीलो समुद्रको तटमा लमतन्न परेको ठूलो विमानस्थल देखियो। हेर्दाहेर्दै विमानले आकाशमा एक फन्का माऱ्यो र ओर्लियो। ज्वाइँसाहेबले पहिल्यै यहाँको रेन्टल कम्पनीसँग कुरा गरेर एल.ए. घुम्ने अवधिसम्मका लागि भाडाको गाडी बुक गर्नुभएको रहेछ। एयरपोर्टबाट निस्कँदा हामीलाई त्यही कम्पनीको गाडी लिन आयो र उसको कार्यालयमा लग्यो। हामीले फोर्ड कम्पनीको एउटा एस.यु.भी. जिप लियौँ र होटेल रेडिसन पुग्यौँ। काठमाडौँमा पनि त्यही नामको पाँचतारे होटेल देखेको

हुँदा एक छिन बाहिरैबाट नियालेँ, पन्ध्र तलाजतिको गुलाबी भवनलाई ।

त्यहाँ अग्रिम बुक गरिराखेको कोठामा पुगेर हातमुख धुन बाथरुम पस्दा कफी बनाउने भाँडो पनि राखेको देखेँ । त्यो भाँडो अनौठो थियो । ओल्टाईपल्टाई हेरेँ । त्यसभित्र पानी कसरी हाल्ने हो, झट्ट ठम्याउन सकिनँ र त्यसका सबै अङ्ग खोलखाल गरेर हेरेँ । प्रविधि नौलो रहेछ । मलाई त्यसमा कफी बनाएर खान रहर लाग्यो र पानी तताएँ । कफी लिएर भित्र आउँदा उनी झ्यालनेर उभिएर बाहिर हेर्दै रहिछन् ।

“हेर्नुहोस् त, यहाँ एक मिनेटमा एउटा जहाज ओर्लंदो रहेछ !” म नजिकै पुगेपछि उनले औँलाले बाहिर देखाउँदै भनिन् ।

हामी बाह्र तलाको कोठामा थियौँ । हाम्रो होटेल अन्तर्राष्ट्रिय एयरपोर्टको छेवैमा रहेछ । मैले पनि बाहिर हेरेँ– एकपछि अर्को गर्दै वायुयानहरू आइरहेका थिए । घडी हेरेँ । साँच्चै, एक मिनेटमा एउटाका दरले नै ओर्लँदै थिए विमानहरू । कति व्यस्त यो

विमानस्थल ! निरन्तर आइरहेका जहाजहरू देखेर मलाई दुबई एयरपोर्टमा उडान कुर्दाको सम्झना भयो। त्यहाँ पनि छिनछिनमै संसारका विभिन्न ठाउँबाट ओर्लेका र विभिन्न ठाउँतिर उडेका विमानहरूको सूचना माइकद्वारा दिइरहेको हुन्थ्यो। डफ्फाका डफ्फा यात्रुहरू आए-गएका पनि देखिरहेको थिएँ। त्यहाँको त्यो व्यस्त दृश्य देख्दै र ती जानकारीहरू सुन्दै गर्दा मैले सोचेको थिएँ– ओह, कति व्यस्त! लन्डनको हिथ्रो विमानस्थल झन् कस्तो होला ! त्यो त संसारको व्यस्ततम एयरपोर्टमध्ये हो भन्ने सुनेको थिएँ।

पछि थाहा पाएँ, अमेरिकाको दोस्रो मानिने लस एन्जेलस अन्तर्राष्ट्रिय विमानस्थल संसारको पाँचौं व्यस्ततम एयरपोर्टमा पर्दो रहेछ। सन् २००६ मा त्यहाँबाट छ करोड दस लाख यात्रुहरू आवतजावत गरेका रहेछन् र बीस लाख टन बराबर मालसामान ढुवानी भएको रहेछ। हुन त साढे अठतीस लाख मानिसको बसोबास भएको यो सहरै पनि अमेरिकाको न्यु योर्कपछिको दोस्रो ठूलो आबादी भएको नगरपालिका रहेछ।

लन्चपछि हामी भेनिस बिच नाम गरेको समुद्री तट घुम्न गयौँ। प्रशान्त महासागरको त्यो तट सहरभित्रै पर्दो रहेछ। लस एन्जेलसका धेरै बिचहरूमध्ये त्यो पर्यटकहरूका निम्ति आकर्षक मानिँदो रहेछ। मान्छेहरू बालुवामा पल्टेर आनन्दसित सुतेका देख्यौँ। निर्विकार भएर अर्धनग्न सुतेकाहरूमा तरुनीहरू पनि थिए। कोही नाङ्गो जीउ बालुवाले पूरै छोपेर सुतेका पनि देख्यौँ। केटाकेटी र आमाबाबु मिलेर बालुवाको घर बनाउँदै गरेको पनि देखियो। तातो बालुवामा उभिएर मैले चारैतिर हेरेँ; लाग्यो सबै मस्त छन्, सबै निर्धक्क छन्– चिन्तारहित, सुर्ताविहीन अनि मस्त।

आमा, छोरी र ज्वाइँ फोटो खिच्दै थिए। छोरीले यतायता भन्दै मेरो पनि फोटो खिचिन् बेलाबेला। म रमाइलो हेर्दै केही बेर तीरैतीर हिँडेँ। हिँड्दै जाँदा देखेँ– केही पानीमा पौडिरहेका, केही काठको फल्याकमा टेकेर पानीको छालसँगै बगिरहेका र केही छाल छातीसम्म आउँदा अत्तालिएर कराइरहेका अनि केही छेउमा बसेर हेर्दै थपडी बजाएर जलक्रीडा गर्नेलाई

हौस्याइरहेका। मलाई समुद्र किनारको बालुवामा हिँड्न रमाइलो लाग्छ। नुनिलो चिसो पानीको उर्लंदो छाल वेगसित आएर खुट्टा स्पर्श गर्दै बग्दा मलाई अनौठो आनन्दको अनुभूति हुन्छ।

सम्झिएँ– इरानको जिवाकेनार नामको सानो सहरमा बेलुकी सेमिनार सकिएपछि क्यास्पियन सागर तटको बालुवामा एक्लै परपरसम्म हिँडेको। पर क्षितिजमा सागरको नीलो पानीभित्र डुब्दै गरेको रक्तिम सूर्यलाई एकै छिन आत्मविभोर भएर हेरेको हेर्‍यै गरेको पनि सम्झना भयो। कस्तो नैसर्गिक आनन्दको अनुभूति भएको थियो, आहा! त्यहीं एक ठाउँमा त हो टिनका दुइटा थोत्रा टहराहरू देखाउँदै एउटा स्थानीय साथीले रोचक पाराले मलाई टुटेफुटेको अङ्ग्रेजीमा उसको मीठो अनुभव सुनाएको!

समुद्रको क्षारिलो पानीमा पौडी खेलिसकेपछि आइमाईहरूले त्यस टहराभित्र पसेर धाराको पानीमा नुहाउँदा रहेछन्। ऊ लुकेर टिनका प्वालबाट चियाउँदो रहेछ। एक दिन एउटी बूढीले थाहा पाइछ र चाल

मार्दै पछाडिबाट आएर उसको कान समातिछ। ऊ कसोकसो फुत्किएर त्यहाँबाट कुलेलम ठोक्छि। आफ्ना कुरा भन्दै जाने क्रममा कहिले सटीक शब्द नपाएर उसले मलाई हातको इसाराले नै बुझाउन खोजेको थियो, अनि बोलिसकेर आफैँ मरीमरी हाँसिरहेको थियो। साँच्चै, कस्तो सोझो थियो त्यो इरानी साथी!

म एक्लै हिँड्दै परसम्मै पुगेँ। तटको छेउछेउ ओसन फ्रन्ट वाक भनिने कालोपत्रे सडक बनाइएको रहेछ। त्यहीँ हिँड्दै मान्छेहरू तटको रमाइलो हेर्दा रहेछन्। केहीले साइकल पनि कुदाउँदै थिए। एक ठाउँमा ढुङ्गढुङ्गाको थुप्रो थियो। समुद्री छाल त्यहाँसम्मै उर्लंदै आएर भिजाउने हुनाले होला, ती पत्थरहरू ज्यादै काला थिए।

मलाई त्यो तट खासै राम्रो लागेन। भूपरिवेष्ठित हाम्रो देशमा समुद्र नभएकाले पल्लो तट नै नदेखिने, परपरसम्म फैलिएको नीलो पानीको त्यस्तो भण्डार देख्दा हामीलाई उत्तेजनाको अनुभव हुनु स्वाभाविक हुन्छ। तर मैले श्रीलङ्कामा चारैतिर नरिवल र

हरियापरिया रूखहरू भएका सुनौला बालुवाका रमणीय समुद्री तटहरू देखेको हुनाले सामुन्ने लहरै बडाबडा भवनहरू र वरपर ठिङ्ग उभिएका बेढबका बूढा ताडका रूखहरू देखिने यस तटको परिवेश मलाई सबै कृत्रिम जस्तो लाग्यो। व्यावसायिक तवरमा बिचार्दा पनि ब्याङ्कको पटाया तटमा पाइने विविधता मैले यहाँ देख्न पाइनँ। हुन त मिश्रित संस्कृतिपूर्ण वातावरणका निम्ति यो तट प्रख्यात रहेछ। यहाँ साङ्गीतिक कार्यक्रम गर्ने, कसरत गर्ने, चटक देखाउने, हात हेर्ने जस्ता खेल-तमासा गर्नेहरू थुप्रै हुँदा रहेछन्। बेलाबेला बिच भलिबल, बास्केटबल जस्ता खेल प्रतियोगिताहरू पनि हुँदा रहेछन्।

म फर्केर आएपछि छोरीले पुलतिर जाने प्रस्ताव राखिन्। समुद्रमाथि एक किलोमिटरजति लामो पुल बनाइएको रहेछ। मान्छेहरू त्यसमा हिँडेर सागरको मध्य भागतिरको दृश्य हेर्दा रहेछन्। केटाकेटीहरू त्यहाँ साइकल पनि चलाउँदै थिए। हेर्दा मेक्सिकोतिरका जस्ता देखिने केही व्यक्तिहरूले समुद्रमा बल्छी थापेर

छ-सात इन्च लामा माइक्रो फिस नामक माछा मार्दै थिए। हामी पुलको पल्लो छेउसम्मै पुग्यौँ। जहाजहरू नजिकैबाट गएको हेर्दा रमाइलो लाग्यो। सिगल चराहरू छेउछेउमा आएर चर्दा रहेछन्। मान्छेहरू रमाइलो मान्दै उनीहरूलाई चारो छरिदिँदा पनि रहेछन्।

धेरै समय समुद्री तीरको आनन्द उपभोग गरेपछि हामी बजारतिर लाग्यौँ, हलिउड सहर हेर्ने अनि त्यतैतिर रहेको चाइना टाउनमा रातिको खाना खाने निश्चय गरेर। ज्वाइँसाहेबले जी.पी.एस. को मदतले हाई वेमा गाडी हाँक्दै हुनुहुन्थ्यो। मेसिनले 'आधा माइलपछि दाहिने लाग, अब एक माइल सोझै हिँड' भन्दै हामी जाने गन्तव्यको निर्देशन दिँदै थियो। म गाडीबाट बाहिर हेर्दै थिएँ। चारैतिर पहाड देखियो। अलिअलि काठमाडौँ जस्तो पनि लाग्यो। पर एउटा पहाडमा सेतो रङ्गले ठूला अक्षरमा 'हलिउड' लेखेको देखियो। केही अघि हाइल्यान्ड-बुलेभार्ड भन्ने ठाउँमा आकर्षक घरहरू देखिएका थिए। बाहिर सुन्दर बगैँचा, फूल, रूख, बोट-बिरुवाहरू आदिले गर्दा सर्वत्र हरियाली

देखिने त्यो इलाका एकदमै मनोरम थियो। त्यहाँका घरहरू मैले अमेरिकामा अन्यत्र देखेभन्दा भिन्न प्रकारका र सुन्दर बनोटका थिए। स्पेनिस ढाँचाका पो हुन् कि भन्ने लागेको थियो। बाटामा हिँडेका मान्छेहरूमध्ये पनि धेरैजसो मेक्सिको तथा एसियाली मूलका जस्ता देखिन्थे। मैले जिज्ञासा राखेपछि ज्वाइँसाहेबले हामीलाई त्यस इलाकाबारे केही जानकारी दिनुभएको थियो।

क्यालिफोर्निया लगायतका सम्पूर्ण इलाका पहिले स्पेनको अधीनमा रहेछन्। तर पछि मेक्सिकोले लिएको रहेछ। सन् १८४८ मा अमेरिकाले मेक्सिकोसँगको लडाइँ जितेर त्यस भूभागलाई आफ्नो राज्यमा गाभेको रहेछ र त्यसको दुई वर्षपछि लस एन्जेलस नगरपालिका बनेको रहेछ। त्यहाँ अमेरिकाका अन्य सहरहरूको तुलनामा कुइरेहरूका आबादी केही कम र एसियाली मूलका मानिसहरूको बसोबास बढी रहेछ। जनसङ्ख्याको दस प्रतिशत मानिस जापान, फिलिपिन्स, चीन, थाइल्यान्ड, भारत, इरान, पाकिस्तान आदिबाट आएर बसेका रहेछन्। कुइरेहरू भने सतचालीस प्रतिशतको हाराहारी

रहेछन्। काला पनि रहेछन् एघार प्रतिशतजति र बाँकी बत्तीस प्रतिशतजति अन्य भिन्दाभिन्दै मूलका मानिसहरू रहेछन्। अर्थात्, त्यहाँ सबैजसो देशका मान्छेहरूको बसोबास छ भन्न सकिने रहेछ।

झन्डै चालीस मिनेटको यात्रापछि हाम्रो गाडीले बजार क्षेत्र टेक्यो क्यार, अट्टालिकाहरूको जालो वरैबाट देखिन थाल्यो। मान्छेको भीड पनि देखियो चारैतिर। यस इलाकामा वासिङ्टनतिरको जस्तो हरियाली देख्न पाइएन। गाडीबाट हेर्दा बाटाका वरपर धेरै ठाउँ बन्जर थिए। एक-दुई ठाउँमा युकलिप्टस भनिने मसलाका रूख देखें, तर धेरैजसो अग्लाअग्ला ताड र खजुरका रूखहरू नै थिए। यहाँ गर्मी पनि प्रचण्डै हुँदो रहेछ। दिउँसो भाडाको गाडी लिने ठाउँमा केही बेर कुर्नुपर्दा उकुसमुकुस भएको थियो। त्यस बेला गर्मीले आत्तिएर रुमालले अनुहारतिर हम्किँदै श्रीमतीले सोधेकी थिइन्– “यहाँ जुलाईमा धेरै गर्मी हुँदो रै’छ कि क्या हो? कि बाह्रमासै यस्तो हो?” चालीस डिग्री सेन्टिग्रेडको आसपास थियो होला, तापक्रम।

मैले होटेलबाट निस्कने बेला आगन्तुक कक्षमा पर्यटकका लागि राखिएको एउटा पुस्तिका टिपेको थिएँ। त्यसलाई ओल्टाइपल्टाइ गर्दा थाहा पाएको थिएँ– यहाँ गर्मीयाममा तापक्रम सामान्यतया बत्तीस डिग्री सेन्टिग्रेडको हाराहारीमा रहँदो रहेछ। तर तापक्रमको रेकर्ड हेर्दा अठचालीस डिग्रीसम्मै पनि पुगेको थाहा पाएको थिएँ। पुस-माघतिरको जाडोयाममा पानी पर्दो रहेछ र तापक्रम सालाखाला दस डिग्री पुग्दो रहेछ। रेकर्ड अनुसार एक पटक जाडामा माइनस सातभन्दा पनि तल पुगेको रहेछ। लस एन्जेलस सहर अन्तर्राष्ट्रिय व्यापार, विज्ञान तथा प्रविधि, उच्च शिक्षा आदिमा संसारभरि कहलिएको रहेछ। सिनेमा, टेलिभिजन र सङ्गीतका निम्ति त विश्वप्रसिद्धै रहेछ। सम्झेँ– सन् १९३२ को दसौँ र सन् १९८४ को तेइसौँ गरी दुई पटकका ओलम्पिक खेलहरूको आयोजना लस एन्जेलसमै भएको थियो।

“एकै छिन बेभर्ली हिल्स पनि हेरौँ है !” एउटा चौबाटोनेर पुगेपछि ज्वाइँसाहेबले प्रस्ताव राख्नुभयो।

"हुन्छ, हुन्छ ।" खुसीले उत्तेजित हुँदै छोरीले समर्थन जनाइन् र जी.पी.एस. थिच्न थालिन्। मेसिनले दिशा-निर्देश गर्न थाल्यो– 'एकचौथाइ माइलपछि दाहिने लाग ।'

एभेन्यु अफ द स्टार सडक हुँदै हाम्रो गाडी कुद्दै थियो। बाहिर अट्टालिकाहरू देखिए। सरर हेर्दा तीमध्ये कुनैमा सन अमेरिका, कुनैमा एम.जी.एम. अनि कुनैमा हिल्टन होटेल लेखिएको थियो। एकै छिनपछि हाम्रो गाडी डेटन वे, बेडफोर्ड ड्राइभ, रोडिआ ड्राइभ नामका सडकहरू छिचोल्दै थियो। अमेरिकामा टोलका नाम हुँदा रहेनछन्। सडकको नाम र घर नम्बर नै चिनारी हुँदो रहेछ। त्यहाँका सडकहरू पनि थरीथरी नामले चिनिँदा रहेछन्। हाम्रा तिर मार्ग, पथ, सडक, गल्ली भनेझैँ यता बुलेभार्ड, पार्क वे, एभेन्यु, स्ट्रिट, ड्राइभ, लेन आदि भनिँदो रहेछ। हाई वेहरू नम्बरले चिनिँदा रहेछन्।

एउटा ठूलो भवनको भुइँतलामा गाडी राखेर हामी त्यहाँका बाटाहरूमा यताउति हेर्दै हिँड्न थाल्यौँ।

सानो पहाडमा राम्राराम्रा घरहरू बडो सुन्दर किसिमले सजाइएका जस्ता देखिए। बाटोबीचका क्यारीहरूमा फूलहरू ढकमक्क फुलेका थिए। त्यहाँ पनि हामीले ताड र खजुरका रूखहरू देख्यौँ। तर सम्पूर्ण परिवेश निकै आकर्षक थियो।

बेभर्ली हिल्स अमेरिकाका धनाढ्यहरूको इलाका मानिँदो रहेछ। यहाँ हलिउडका प्राय: सबै ठूला कलाकार र नामुद व्यक्तिहरूका घर रहेछन्। धनीमानीको जमघट हुने हुनाले होला, बाटाका दुवै छेउमा लहरै कहलिएका ब्रान्डका सामानका पसलहरू थिए। मान्छेको चहलपहल पनि राम्रै थियो। पहाडी इलाका भएकाले कतैकतै उकाली-ओराली बाटाहरू थिए। हामी केही अग्लै सिँढी चढेर एउटा रेस्टुरेन्टमा पस्यौँ र आँगनमा राखिएका कुर्सीमा बसेर कफी खाँदै चारैतिरको रमाइलो हेर्न थाल्यौँ। रेस्टुरेन्ट निकै राम्ररी सजाइएको थियो। छतमा बाँधेर झुन्ड्याइएका गमलाहरूमा सुन्दर फूलहरू थिए। त्यहाँ पनि थुप्रै ग्राहकहरू थिए, तर वातावरण शान्त अनि आनन्ददायी थियो। एक घण्टाजति त्यहाँको

रमणीय परिवेशको आनन्द लिएर हामी हलिउड-बुलेभार्डतर्फ लाग्यौँ।

साँझ पर्न थालेको थियो। एक ठाउँमा गाडी राखेर हामी पैदलै लाग्यौँ, हलिउड भनेर पनि चिनिने त्यस सहरको रमाइलो अनि मोहकता हेर्न। हामी सडकको पेटीपेटी भेइन स्ट्रिटतिरबाट रमाइलो हेर्दै हलिउड-बुलेभार्ड नामक सडकमा हिंड्न थाल्यौँ। बाटामा मान्छेको चहलपहल निकै थियो। ओलम्पियातिरको त कुरै भएन, सियाटलतिर पनि स्वतन्त्रता दिवसका दिन छोडेर एक पटकमा त्यति मान्छे हामीले देखेका थिएनौँ। यहाँको आबादी धेरै भएर पनि हुन सक्छ र आज शुक्रबारको बेलुकी, छुट्टीको अघिल्लो साँझ, भएर पनि हुन सक्छ, यस्तो भीड। युवायुवतीहरू जोडीजोडीमा देखिए– निर्धक्क आलिङ्गनबद्ध हुँदै अनि बाटोबाटो म्वाइँ खाँदै। केटीहरूका पहिरन पनि अलि बढी नै छोटाछोटा थिए। बूढाबूढी, केटाकेटी जो पनि चिटिक्क परेका अनि ठाँटिएरै हिँडिरहेका थिए। बाटामा जतातते डङडङ चुरोट फुक्दै हिँडेका आइमाईहरू देख्दा म

अचम्ममा परेँ।

एक ठाउँमा एउटा सिनेमाघर देख्यौँ। त्यहाँ पनि राम्रै भीड थियो। त्यसको अगाडि एक जना डोनाल्ड डकको मखुन्डो लाएर मुखले हाँस कराएझैँ प्याकप्याक आवाज निकाल्दै सामुन्ने परेकासित हात मिलाउँदै हिँड्दै थियो। अर्कोचाहिँ गीत गाउँदै थियो। बाटामा गाडीहरू गुड्दै थिए– चिल्ला लामालामा लिमोसिन। त्यस्ता कारहरू मैले पहिले अङ्ग्रेजी सिनेमाहरूमा मात्रै देखेको थिएँ। एउटा त्यस्तै गाडी हामी उभिएनेरै रोकियो। हामीले अनौठो लागेर हेर्‍यौँ। एकपछि अर्को गर्दै भित्रबाट युवायुवतीको टोली ओर्लियो। जिज्ञासावश छोरीले गन्दै गइन्– “एक, दुई, तीन, चार ... एक्काइस, बाइस।”

“कति अटाउँदा रहेछन्!” आमाचाहिँले आश्चर्य व्यक्त गरिन्। मैले पनि ट्वाल्ल परेर हेरिरहेँ।

एक ठाउँमा एउटा निकै आकर्षक भवन देख्यौँ। बुझ्दा, त्यो संसार-प्रसिद्ध कोडाक थिएटर रहेछ।

कोडाक कम्पनीको आर्थिक सहयोगमा सन् २००१ को अन्तितिर बनेको त्यस भवनमा अमेरिकाका कहलिएका कलाकारहरूको साङ्गीतिक कार्यक्रम, सिम्फोनी, ओपेरा जस्ता मनोरञ्जनपूर्ण कार्यक्रम र ठूलठूला पुरस्कार वितरण समारोह तथा प्रतियोगिताहरू आयोजना गरिँदा रहेछन्। सन् २००२ देखि ओस्कार पुरस्कार वितरण समारोह नियमित रूपले त्यहीँ सञ्चालन भइरहेको थाहा पाएँ। हालैको अमेरिकन आइडलको फाइनल पनि त्यसैमा भएको रहेछ। त्यस भव्य र विशाल गृहमा चौँतीस सय सिट रहेछन् र स्टेज पनि निकै ठूलो रहेछ– एक सय चौध फिट लम्बाइ र बयसठ्ठी फिट चौडाइको।

एकाएक ठूलै हाऽहाऽहीऽहीऽ सुनियो। एउटा बसमा एक हूल तन्नेरीहरू देखिए। बस छेउ लागेर रोकियो। सबै केटाकेटी बसबाट ओर्लिएर पेटीमै उभिएर कराउन थाले। कलेजका विद्यार्थीहरू घुम्न आएका हुनन् भन्ने लाग्यो। कोही मुखले सिटी बजाउँदै थिए। कोही एक-अर्कालाई चुम्बन गर्दै, कोही एक-अर्कालाई हेर्दै

ठूलै स्वर निकालेर हाँस्दै थिए। केही दिनको अमेरिका बसाइमा यस जातिका मानिसहरू ज्यादै शान्त तथा सौम्य प्रकृतिका हुन्छन् भन्ने धारणा बन्दै गएको अवस्थामा अहिले ती तन्नेरीहरूको व्यवहार र क्रियाकलाप देख्दा मलाई विचित्र लागिरह्यो।

हिँड्दै जाँदा हामीले भेइन स्ट्रिट र हलिउड-बुलेभार्डका पेटीहरूमा चिल्ला ढुङ्गा छापिएको देख्यौँ। प्रत्येक ढुङ्गामा चम्किला धातुका एक-एक तारा र त्यसको तल एक-एक प्रसिद्ध व्यक्तिका नाम पनि खोपिएका थिए। ती दुई बाटाहरूको चोकमा पुगेर बाटो काट्न थाल्दा मैले चन्द्रमामा पहिलो पाइला टेक्नेसहित तीन जना एस्ट्रोनटहरू (निल आर्मस्ट्रङ, मिचेल कोलिन र इडविन एल्डिन) का नाम देखेको थिएँ। तिनका नामसँगै एक-एक तारा थिए र अर्को एउटा तारा भने एपोलो-११ अन्तरिक्ष यानलाई चन्द्रमामा अवतरण गराउन सफल भएका नासाका वैज्ञानिकहरूको टोलीको नाममा थियो। सडकका पाइलैपिच्छेका ढुङ्गामा त्यस्ता तारा खोपिएका रहेछन्। मान्छेहरूको भीडबीच चारैतिरको

रमाइलो हेर्दै झ्ल्याकझुलुक आँखा परेका त्यस्ता नामहरूमा मैले जानेका व्यक्तित्वहरूमध्ये डिज्नील्यान्डका निर्माता वाल्ट डिज्नी, चलचित्र अभिनेता एन्थोनी क्वीन, गायक तथा नायक डिन मार्टिनको नाम देखेँ।

अमेरिकाका चलचित्र, टेलिभिजन, रेडियो आदि कार्यक्रमका माध्यमबाट मनोरञ्जनका विभिन्न विधामा योगदान पुऱ्याउने महानुभावहरूलाई सम्मान जनाउन प्रत्येक वर्ष त्यस्ता व्यक्तिका नाममा एउटा तारा अङ्कित गरिँदो रहेछ। सन् १९६० तिर सुरु गरिएको वाक अफ फेम नामले जानिने त्यो कार्यक्रमको सञ्चालन त्यहाँको चेम्बर अफ कमर्सले गर्दो रहेछ। अहिलेसम्म चौबीस सयजति त्यस्ता व्यक्तिहरूलाई सम्मानित गरिसकिएको रहेछ। अन्तिममा रक एन रोलका राजा मानिने एल्भिस प्रेस्ली र सन् १९६०-७० को दशकताका संसारभरिका युवाहरूलाई आफ्नो सङ्गीतले मोहित पारेको बिटल्स ब्यान्डको तारा राखेपछि लाब्रिअ् एभेन्यु भन्ने बाटामा ठाउँ सकिएको रहेछ र अब अर्को बाटोतिरको पेटीमा राखिने कार्यक्रम रहेछ।

म पेटीका ती ताराहरू छल्दै हिँड्दै थिएँ, अनि सोच्दै पनि थिएँ– मान्छेलाई सम्मान दिन दिनहुँ बटुवाले कुल्चिँदै हिँड्ने ठाउँ नै किन छानिएको होला ! यो त झन् अपमान भएन र ? पछि थाहा पाएँ– त्यस्तै कुरा उठाएर महान् मुक्केबाज मोहम्मद अली (उनी मुस्लिम धर्म अपनाउनुअघि केसियस क्ले नामले चिनिन्थे) ले आफ्नो नाम पेटीको ढुङ्गामा खोप्न दिन नमानेपछि सञ्चालकहरूले उनलाई समर्पित धातुको पातो कोडाक थिएटरको भित्तामा राखेका रहेछन् ।

हिँड्दै जाँदा एक ठाउँमा हलिउड वाक्स म्युजियम लेखेको देखेँ । त्यसलाई पृष्ठभागमा राखेर मान्छेहरूले फोटो खिच्दै थिए । त्यो लेखोट त्यस म्युजियमको कुनातिरको भित्तामा थियो । आगन्तुकहरूले त्यहाँ आएर फोटो खिचून् भनेरै राखिएको हो कि जस्तो लाग्यो । म्युजियमको बाहिरै अग्र भागमा 'किङकङ' सिनेमामा देखाइएको गुरिल्लाको बडेमानको मैनको मूर्ति थियो । त्यस जनावरले नायिकालाई हातमा समातेर मुख बाएर हेरेको भङ्गिमामा बनाइएको थियो

त्यो अनुकृति। त्यही तल फिल्मका नायक र कालो कोटमा डाइरेक्टरको भूमिका खेलेका अभिनेता लगायतका मूर्तिहरू पनि थिए। सबै जीवन्त लागे।

"यो वाक्स म्युजियम सिंह नामको एउटा भारतीय मूलको मान्छेले सुरु गरेको हो रे।" छोरीले जानकारी दिइन्– "सरदारजी हो कि !" मलाई भने अघि त्यहाँको सङ्केतपाटी देख्दा लन्डनको मादम टुसाउदको प्रसिद्ध वाक्स म्युजियमको सम्झना भएको थियो र संसारका महान् हस्तीहरूको मैनको मूर्ति बनाउने रहेछ भन्ने ठानेको थिएँ। तर त्यसमा भने धेरैजसो फिल्मी कलाकार र केही अनौठा जनावरका आकृतिहरू मात्रै रहेछन्। सन् १९६५ तिर सुरु गरिएको त्यस म्युजियममा दुई सयजति मैनका पुतलाहरू छन् भन्ने थाहा पाएको थिएँ।

हामी सडकको रमाइलो हेर्दै हिँड्दै थियौँ। एक ठाउँमा पेटीमै ब्यान्डबाजा बजाइरहेको टोली देख्यौँ। त्यहाँ कुनै एल्बमका लागि छायाङ्कन हुँदै गरेको बुझियो। हाम्रा तिर जस्तै रमिता हेर्ने मान्छेहरू

चारैतिर झुरुम्म झुम्मिएका थिए त्यहाँ पनि। बीस कदम नहिँड्दै अर्को एक ठाउँमा छ्याङ्क्न चलिरहेको देख्यौँ। त्यहाँ केही युवाले पेटीमै एक्रोबेटिक चटक देखाइरहेका थिए। ठाउँठाउँमा गायन कार्यक्रम पनि चल्दै थियो। हामी भीडमा तर्किंदै हिँड्दै थियौँ।

त्यस सडकमा मैले जता हेरे पनि रौनकैरौनक देखेँ। चारैतिर मोहकता छरिएझैँ लाग्यो। तर आश्चर्य, सर्वत्र आनन्द र उल्लास भरिएर मगमगाउँदो बास्ना फैलिएको सडकको एउटो कुनामा सहयोगको लेखोट सामुन्ने राखेर एउटी आइमाई माग्न बसेकी थिई ! मैले छेकिएर उसलाई एक छिन हेरेँ। पुष्ट गोरो शरीरमा कालो टी-सर्ट लाएकी तीस-पैँतीस वर्षजतिकी नारी बटुवाहरूतिर टुलुटुलु हेरिरहेकी थिई। मलाई सँगै नदेखेर होला, छोरीले खोज्दै आएर परैबाट छिटो आउन इसारा गरिन्। म केही नबोली त्यहाँबाट सुरुसुरु हिँडेँ।

फेरि बाटामा हल्लीखल्ली भएको सुनियो। हामी सबैले एकैसाथ हेऱ्यौँ। एउटा दुईतले बस बाटामा

रोकिएको थियो। त्यसको टाउकामा हलिउड सिटी टुरिस्ट बस लेखिएको थियो। त्यो बस सर्कसको जस्तै गरी थरीथरी रङ्गीबिरङ्गी आकृतिका चित्रहरूले सिँगारिएको थियो। छतमा पनि कुर्सीहरू थिए। सबैतिर यात्रुहरू टनाटन थिए। छतमा बसेका मान्छेहरू सबै थपडी बजाउँदै गीत गाउँदै पनि थिए। हामीले एकै छिन त्यसैको रमाइलो हेरिरह्यौँ। छतमा बसेका सबै यात्रुहरू बाजागाजासहित ओर्लेर पेटीमै सामान थुपार्दै थिए। मलाई लाग्यो– त्यो अर्को साङ्गीतिक समूह हो; अब त्यसले त्यहीँ पेटीमा जलसा देखाउनेछ।

मान्छेहरूको भीड र होहल्लाबीच भाँतिभाँतिका रमाइला अनि आनन्ददायी रमिता हेर्दै हिँड्दै जाँदा एक ठाउँमा ग्राउमेन्स चाइनिज थिएटर देख्यौँ र हामी रोकियौँ। निकै पुरानो र संसारभरि कहलिएको त्यस सिनेमाघरको प्राङ्गणमा दुई सयभन्दा बढी नामुद कलाकारका हात र खुट्टाका छाप तथा हस्ताक्षरहरू सिमेन्टमै डामेर राखिएका रहेछन्। त्यहाँ भर्खरै रिलिज भएको ‘ह्यारी पोटर एन्ड द अर्डर अफ द फिनिक्स’

चलचित्रका तीन जना प्रमुख कलाकारहरू ड्यानियल रेडक्लिफ, एम्मा वाटसन र रुपर्ट ग्रीन्टका हस्ताक्षर र हातखुट्टाका छापहरू पनि देख्यौँ।

सन् १९२७ तिर बनेको त्यस ऐतिहासिक सिनेमाघरको बनोट अनौठो लाग्यो। रातो रङ्गको चाइनिज पगोडा शैलीको त्यस भवनको छानो तामाको थियो। भवनअगाडि ड्रेगनको चित्र बनाइएको थियो। मूल ढोकामा दुवैतिर ढुङ्गे सिंह रखवारी गरेझैँ राखिएका थिए। दोस्रो विश्वयुद्धताकाका ओस्कार पुरस्कार वितरण समारोहहरू त्यसै भवनमा गरिएका रहेछन्। म सिनेमाघर नियाल्दै थिएँ, एउटाले छेवैमा आएर झिलिकझिलिक टल्किने ट्युब लाइट जस्तो लौरो घुमायो। के हो बुझ्नै नसकेर म तर्किन खोजेँ। तर ऊ मेरै वरपर घुम्न थाल्यो। म अलमलिएको देखेर छोरीले मलाई तानिन्।

"यी सबै चटके हुन् बुबा! यसरी नै पैसा माग्छन्। उः हेर्नुहोस् उता, कस्तो वेश बनाएर घुम्दै छन्!"

मैले छोरीले देखाएतिर हेरेँ। एउटाले पादरीको जस्तो लामो चोला लाएर एक हातमा डोरी र अर्कामा चमर

जस्तो केही समातेर हल्लाउँदै थियो। अर्को महाराज जस्तो बनेको थियो, अनि अर्को रबिनहुड जस्तै लुगा लाएर हातमा रातो मोटो डोरी लिएर उफ्रीउफ्री हिँड्दै थियो। एउटो हिरोझैं ठाँटिएको केटो र एउटी हिरोइन जस्तै सजिएकी केटी आपसमा कुरा गर्दै रल्लिँदै थिए। त्यसै बेला श्रीमती कराएको सुनेँ। स्पाइडर-म्यान बनेको एउटो केटो उनकै छेउमा कताबाट हो हाम फाल्दै आएको थियो र भ्यागुतो जस्तै गरी भुइँमा हातखुट्टा टेकेर यताउति हेर्दै थियो।

हलिउड सडकको रमिता हेर्दाहेर्दै अँध्यारो भएको थाहै पाइएनछ। फेरि यसो चारैतिर हेरेँ। ओहो, कस्तो उज्यालो, कस्तो झिलिमिली! उदेकलाग्दो रमाइलो हेर्दै गरेको मलाई सूर्यका किरणलाई पनि झुक्याउन सक्ने गरी जताततै बलेका बत्तीको चहकले रात परेको थाहा पाउने मौका दियोस् पो कसरी? जता आँखा डुलायो उतै फिरफिर गर्दै नाचेका रङ्गीचङ्गी उज्याला बत्तीहरू अनि आँखै तिरमिराउने गरी छरिएको झिलिमिली !

ज्वाइँसाहेबलाई छेउमा देखिनँ र छोरीलाई सोधेँ। चाइना टाउन कता छ भनेर बुझ्न जानुभएको रहेछ। एकै छिनमा उहाँ आउनुभयो र भन्नुभयो– “अलि टाढा रै'छ। म गाडी लिएर आउँछु, अनि जाउँला।”

गाडी राखेको ठाउँबाट हामी धेरै पर आइसकेका थियौँ। हिँड्दाहिँड्दै सबै थाकेका थियौँ र भोक पनि उत्तिकै लागेको थियो। अब अरू टाढा नजाने बरु यतै कतै बसेर खाने सबैको ठहर भयो र हामी होटेल खोज्दै हिँड्यौँ। ज्वाइँसाहेबले तलै सोधेर थाहा पाउनुभएको रहेछ क्यार, हामीलाई विद्युतीय सिँढीबाट माथि लगेर एउटा मध्यम प्रकाश भएको रेस्टुरेन्टमा छिराउनुभयो। त्यो उल्फग्याङ पक नामक सेफको रेस्टुरेन्ट रहेछ। त्यता हुने ओस्कार जस्ता कार्यक्रमका अतिथिहरूलाई खाना ख्वाउनेमध्येका एक हुनाले ती सेफ त्यहाँ निकै कहलिएका रहेछन्। तिनका नामका रेस्टुरेन्टहरू धेरै ठाउँमा रहेछन्।

हामीले खाना खायौँ। हामीलाई खासै लागेन त्यहाँको खाना। ओएस्टर नामको समुद्री माछाका बारेमा धेरै

सुनेका हुनाले हामीले खानामा अर्डर गरेका थियौँ। तर काँचै हुँदो रहेछ कि क्या हो त्यसको परिकार, मुखमा हाल्नेबित्तिकै धन्न खाएको अर्थोक बाहिर आएन। खाइसकेपछि बिल आयो; केही महँगो रहेछ। दिउँसो समुद्र तटनेरको होटेलमा चाइनिज खाना खाएका थियौँ; खासै पैसा परेको थिएन। सेल्फ सर्भिसवाला भएर हो कि !

बिल तिरेपछि छोरीले पर्सबाट केही डलर झिकेर टिप्स दिइन्। हुन त होटेलहरूमा खाएपछि हाम्रा तिर पनि टिप्सका रूपमा केही रकम बिलको प्लेटमै राखिदिने गरिन्छ, तर अमेरिकामा होटेलहरूमा खाएपछि टिप्स दिने चलन बाध्यात्मक भएझैँ लाग्यो। बुझ्दै जाँदा टिप्स दिनु-लिनु यहाँ संस्कार जस्तै भइसकेको रहेछ। यहाँ मैले ट्याक्सी चढ्दा होस् वा गाडी राख्दा होस्, जहाँ पनि सेवा दिने ठाउँमा टिप्स दिनुपर्ने देखेको थिएँ। अन्यत्र आफ्नो मनमुताबिक दिए पनि होटेलहरूमा भने बिलका आधारमा छ-सात प्रतिशतजसो नै दिनुपर्दो रहेछ। दिउँसो बेभर्ली हिल्स जाँदा ज्वाइँसाहेबले

गाडी राख्न एउटा होटेलमा छिराउनुभएको थियो। त्यहाँ भाले पार्किङको व्यवस्था थियो। त्यसैले गाडी एउटो केटाले चलाएर लगेको थियो र उहाँलाई एउटा रसिद दिएको थियो। हामी घुमफिर गरेर गाडी लिन त्यहाँको काउन्टरमा सम्पर्क गर्दा चार-पाँच मिनेटपछि अर्को एउटाले गाडी ल्याइदिएको थियो। होटेलको आफ्नै पार्किङ क्षेत्र हुनाले शुल्क तिर्नु त परेको थिएन, तर गाडी ल्याइदिनेलाई टिप्स भने दिनुपरेको थियो।

टिप्सको कुरा सम्झँदा मैले एउटा आइसक्रिम पसलको अनौठो तरिका पनि सम्झेको थिएँ र मनमनै रमाएको थिएँ। अमेरिकामा कोल्ड स्टोन नाम गरेको एउटा ठूलै शृङ्खलाको आइसक्रिम पसल रहेछ। हामीले त्यहाँ आइसक्रिम खाएर बिल तिर्ने बेला टिप्स दिँदा काउन्टरकी केटीले हाम्रा तिर पूजा गर्दा बजाइने जस्तो एउटा सानो घण्टी बजाएकी थिई। टिनटिनको आवाज सुन्नेबित्तिकै त्यहाँ काममा खटिएका सबै केटीहरूले काम रोकेर थपडी बजाउँदै लय हालेर धन्यवाद जनाउने गीत गाएका थिए। त्यो देखेर हामी

दुवै जना खुपै आनन्दित भएका थियौँ। क्रेडिट कार्डबाट बिल तिर्दा रकम कट्टा गरेको कागजमा टिप्सको रकम लेखिदिएपछि काउन्टरवालाले त्यसैबमोजिम कार्डबाट रकम कट्टा गरेर हिसाब मिलाउँदो रहेछ।

हामी खाना खाएर तल झर्‍यौँ। रातिको एघार बजेको थियो, तर सडक पेटीको रौनक कम हुनुको साटो झन् तातेको थियो। बाहिरका रङ्गीचङ्गी बत्तीहरू पनि अरू चहकिला देखिएका थिए। सडकमा जतातत्तै नाच, जतातत्तै गाना अनि जतातत्तै बाजा। असङ्ख्य पैतालाहरू उफ्रँदै थिए ती तारा खोपिएका चिल्ला ढुङ्गाका पेटीमा। नाच्ने केटाकेटीहरूले दर्शकहरूलाई पनि तान्दै नचाउँदै थिए। हामीलाई बाटामा हिँड्न गाह्रो भइरहेको थियो। हामी जतिजति अघि बढ्थ्यौँ, रमितेको घुइँचो झन् बढी भएझैँ लाग्थ्यो। भीडलाई हातले पन्छाउँदै बाटो बनाउँदै पेटीपेटी हिँडेर हामी बल्लबल्ल पल्लो चोकमा पुग्यौँ। हामीलाई गाडीसम्म पुग्न त्यहाँबाट देब्रे लाग्नु थियो। मैले त्यहाँ उभिएर पुनः एक पटक फर्केर हेरेँ– त्यो उन्मादपूर्ण वातावरण

अनि मनोरञ्जनको आनन्दमा लट्ठिइरहेका अमेरिकी तन्नेरीहरूलाई। ओहो, कस्तो आनन्द, कस्तो उल्लास ! संसारभरिको मस्ती हलिउडको सडकवरपर छरिएको छ कि क्या हो !

मेरा सहयात्रीहरू परै पुगिसकेछन्। अन्तिम पटक त्यस उन्मुक्त जमातलाई हेरेर म बिदाइको हात हल्लाउँदै हिँडें।

# ऐँसेलु, सुत्केरी र बिरालो

"तपाईंको दाहिनेतिर।" कोही अङ्ग्रेजीमा बोल्यो।

म के हो र कता हो भनेर अलमलिँदै नै थिएँ, श्रीमतीले "यतायता" भन्दै आफूतिर तानिन्। छेउ लागेर हेर्न भ्याएको पनि थिइनँ, रातो साइकले टोपी र नीलो कट्टु लाएको कुइरेले "धन्यवाद" भन्दै मेरो दाहिनेतिरबाट साइकल हुइँक्यायो। हामी यहाँको ट्रेइल भनिने पैदल बाटामा थियौँ।

अमेरिका आएदेखि हामीलाई मर्निङ वाकमा जान गाह्रो परिरहेको थियो। पहिलेका केही दिन त जेट-ल्यागले अलमल पारेको थियो। पछिपछिका केही दिन हामी दुई जनाले त्यहीँ कम्युनिटीभित्रै फन्का मारेका थियौँ। दुई-चार दिन यसो सडकतिर पेटीपेटी हिँडौँ न भनेर बाहिरै पनि निस्केका थियौँ, तर ज्यादै वेगले कुदाइने यहाँका बडेमानका ट्रकहरू स्वाइँस्वाइँ गर्दै

छेउबाट घुइँकिँदा बेलाबेला साह्रै डर पनि लाग्थ्यो। सुनसान, विरलै कोही देखिने बाटाहरूका पेटीमा हिँड्दा हामीलाई सवारी-चालकहरूले फर्कीफर्की हेरेको देखेर पनि अप्ठ्यारो लाग्थ्यो। हिँड्दाको आनन्द खासै लिन पाइरहेका थिएनौँ।

"हिँड्नलाई भनेर यहाँ छुट्टै बाटो बनाइएको हुन्छ। तपाईँहरू त्यहाँ जाने गर्नुस् न, नजिकै छ।" हामी फर्केर आएपछि कुरा हुँदा छोरीले सल्लाह दिन्थिन्। उनले हामीलाई लगेर बाटो देखाइदिने कुरो पनि गरेकी थिइन्, तर उनलाई फुर्सत नभएर त्यो कार्यक्रम जुरेको थिएन। हामी स्वेच्छाले कहिले कम्युनिटीको उत्तरतिरको त कहिले दक्षिणतिरको निकासबाट निस्केर बाटोबाटो चहार्दै थियौँ।

एक दिन हिँड्दाहिँड्दै हामी एउटा चौबाटाको गोलाकार घुम्तीनेर पुगेका थियौँ। चारैतिर फूलैफूल रोपिएका थिए। सवारी चलाउँदा हुने थकानबाट चालकहरूलाई केही विश्रान्ति मिलोस् भनेर सुन्दर पारिएको होला। पारिपट्टि सानो उद्यान थियो। त्यसको मध्य भागमा

काठ र फलाम मिलाएर बनाइएको आकर्षक ढाँचाको अग्लो चौकोसमा बडेमानको गोलो घडी राखिएको देखेर मैले समय हेरेको थिएँ– बिहानको सवा नौ बजेको थियो। यस भेकमा जुलाई-अगस्टमा दिउँसोतिर गर्मी भए पनि बिहान भने चिसोचिसै हुने रहेछ। त्यसैले हामी खाजा खाएपछि मात्र निस्कन्थ्यौं हिँड्न। हामी घुम्तीको दाहिनेतिर थियौं। त्यहाँको सुन्दर परिवेश देखेर उनले उद्याननजिकै राखिएको बेन्चमा बस्न मन लागेको सुनाएकी थिइन्। त्यस ठाउँले मलाई पनि लोभ्याएको त थियो, तर अमेरिकी बाटो तर्ने तकलिफ सम्झेर "भैगो आज" भन्दै दुवै जना अघि बढेका थियौं। सकभर कतै बाटो नाघ्न नपरोस् भनेर हामी घुम्न निस्कँदै हिँड्ने दिशा तय गर्थ्यौं र त्यतैत्यतैबाट फर्कन्थ्यौं पनि।

त्यस दिन पनि हामी पहिलेकै फुटपाथ समातेर फर्किएका थियौं। हिँड्दाहिँड्दै मैले सोह्र वर्षजति अघि तेहरानको सडकमा डुल्दा एउटा चौबाटामा त्यस्तै गोलो घुम्ती देखेको कुरा सम्झेको थिएँ। त्यसवरिपरि

पनि सुन्दर फूल फुलेका थिए। चारैतिर रङ्गीन बत्तीको प्रकाश छरिएको थियो र त्यहाँ रहेको फोहोराको पानी इन्द्रधनुषी रङ्गमा झिलमिल-झिलमिल गर्दै खसिरहेको थियो। मैले धेरै बेर रल्लिएर हेरेको थिएँ त्यो मनमोहक दृश्य। त्यहाँका बाटाहरू पनि साँघुरै थिए र गाडीको चापले गर्दा हिजोआज काठमाडौँमा हुने जस्तै जाम हुन्थ्यो जताततै। सवारी नियम पनि व्यवस्थित देखेको थिइनँ। हामीतिर जस्तै थिति मिलिनसकेको हो कि भनेझैँ लाग्थ्यो। पहिलो दिनै त्यहाँको बाटामा हिँड्दा मलाई परेको अप्ठ्यारो पनि सम्झेको थिएँ। एकपछि अर्को पेल्दै आउने गाडीहरूको ताँतीले गर्दा मैले पाइलो चाल्नै सकिरहेको थिइनँ। मलाई लिएर हिँडेको इरानी ट्याक्सी-चालक बाटो काटेर पारि पुगिसकेको थियो र हातको इसाराले “आऊ-आऊ” भन्दै थियो। म धेरै बेर अलमलिएको देखेर फेरि वारि आएर उसले मेरो हात समातेको थियो र चालकहरूलाई हात तेर्स्याएर “रोक-रोक” भन्दै बाटो कटाएको थियो। काठमाडौँमा अचेल बाटो

काट्नुपर्दा त्यस्तै गर्नुपर्छ !

म एकोहोरिएरै हिँडिरहेको थिएँ। उनी पनि मौन थिइन्। हामी कम्युनिटीको गेटनेर पुग्नै आँटेका थियौँ, एउटा गाडी नजिक आएर रोकियो। मैले फर्केर हेरेको थिएँ। गस्तीमा हिंडेको रहेछ। भित्र बसेका पुलिसले हामीलाई हेर्दै थिए। त्यसलाई एकै छिनअघि उता जाँदै गरेको देखेको थिएँ। त्यति खेर पनि ती पुलिसहरूले हामीलाई फर्कीफर्की हेरेका थिए। "के हो" भनेर सोध्न म यसो अगाडि बढ्न खोज्दै थिएँ, त्यत्तिकैमा त्यस चारपाङ्ग्रेले वेग लिएको थियो।

त्यसै दिन लन्चका बेला कुरा हुँदा पुलिसले हामीलाई आँखा तरेको थाहा पाएर छोरीले लगत्तै त्यो हिंड्ने बाटो देखाएकी थिइन्। त्यसपछि हामी सधैँजसो त्यहाँ हिँड्न थालेका थियौँ। हामी प्राय: बिहान नौ बजेतिर त्यहाँ पुग्थ्यौँ। कम्युनिटीको उत्तरतिरको निकासबाट आठ-नौ मिनेट हिँडेपछि त्यहाँ पुगिँदो रहेछ। मैले पहिले धेरै पटक त्यो ठाउँ देखेको त थिएँ तर वरपर सवारीहरू राखेको देखेर त्यता कुनै कार्यालय होला

भन्ने ठानेको थिएँ। हुन पनि जङ्गलैजङ्गल भएको ठाउँमा त्यस्तो बाटो बनाइएको होला भन्ने कसरी सोचूँ म !

चेहाली वेस्टर्न ट्रेइल भनिने साढे चौध माइल लामो त्यस बाटाले मूल सडक छिचोल्ने ठाउँमा रातो रङ्गको फलामे बार लाएर गाडीहरू छिर्न नसक्ने पारिएको थियो र बटुवालाई बाटो काटेर अर्को छेउ पुग्न रोकी-हेरी जाने निर्देशन लेखिएको रातै पाटी राखिएको थियो। एक-दुई ठाउँमा बाटो तर्न पुल पनि बनाइएको थियो। चेम्बर लेकको तीरैतीर बनेको त्यो बाटो येल्म टेनिनो भनिने अर्को ट्रेइलमा पुगेर मिल्दो रहेछ। यहाँ त्यस्ता बाटाहरू तीस-चालीस माइलसम्मका पनि हुँदा रहेछन्।

सल्ला, मेपल, कटन उडको घना जङ्गल फाँडेर बनाइएको त्यस बाह्रफिटे पिच बाटामा मान्छेहरू हिँड्ने र केहीले साइकल कुदाउने गर्दा रहेछन्। केही धावकहरू अभ्यासरत पनि देखिन्थे। हिँड्न आउने मान्छेहरू घरबाट गाडीमा आउँदा रहेछन् र निर्दिष्ट

ठाउँमा सवारी राखेर त्यस्ता ट्रेइलमा छिर्दा रहेछन्। त्यहाँ हिँड्नेहरूमा हामीले धेरैजसो बूढी आइमाईहरू देखेका थियौं। कुकुरलाई दिसा-पिसाप गराउन ल्याउनेहरू बढी थिए। तर समग्रमा भन्नुपर्दा त्यहाँ हिँड्ने मान्छेहरूको सङ्ख्या नगण्य नै थियो। एक पटकमा झन्डै एक घण्टाको हिँडाइ अवधिमा हामीले त्यहाँ आठ-दस जनाभन्दा बढी मान्छे सायदै देखेका थियौं। सबेरै आएका बेला त त्यति पनि भेटिँदैनथ्यो। बिदाका दिन भने साइकल कुदाउनेहरू केही बढी देखिन्थे।

त्यसरी हिँड्न भनेर बनाइएका बाटामा पनि मान्छे नदेखिएका सम्बन्धमा कुरा हुँदा ज्वाइँसाहेबका एक मित्रले दिएको जानकारीले म झन् आश्चर्यमा परेको थिएँ। उनको भनाइ अनुसार यहाँ कसैसित पनि हिँडेर खेर फाल्ने समय छैन रे। प्राय: सबै अमेरिकीहरू 'समय नै पैसा हो' भन्ने सिद्धान्तमा कुदेका हुन्छन्। उही काम नभएका बूढाबूढी हिँड्ने हो कि धावकहरूले अभ्यास गर्ने वा सौखिनहरूले साइकल कुदाउने हो ती

बाटाहरूमा त। उनको भनाइ ठीकै होला, तर अमेरिका-बसाइका दिनहरूमा हिँडाइ हाम्रा निम्ति भने समय बिताउने राम्रो माध्यम बनेको थियो।

त्यहाँ हिँड्दा हामीले बाटाका दायाँबायाँ जताततै ऐँसेलुका झाङ देखेका थियौँ। हाम्रा गाउँघरका जङ्गलैभरि देखिने फल अमेरिकामा लटरम्म फलेको देख्दा केही क्षण त म अवाक् भएको थिएँ। हाम्रातिर चैत-वैशाखमा पाक्ने ती फल यहाँ साउन-भदौतिर मात्रै खान हुने हुँदा रहेछन्। एक ठाउँमा एउटी बूढीले पाकेका दाना टिप्दै कोकाकोलाको कपमा हाल्दै गरेको देखेका थियौँ। मैले उत्सुकता रोक्न नसकेर सोधेको थिएँ– "यसको के गर्नुहुन्छ म्याडम ?"

"पाई बनाउँछु, जुस बनाउँछु र त्यसै पनि खान्छु।" कुरो सकेर ती वृद्धाले हातका दाना कपमा राखेकी थिइन् र मतिर हेरेर सोधेकी थिइन्– "तपाईंहरू पनि यो फल खानुहुन्छ ?"

ऐँसेलु, काफल यिनै त हुन् हाम्रा पहाडी जनजीवनमा

भिजेका फलहरू। मैले ती महिलातिर हेरेर हाँस्दै भनेको थिएँ– "खान्छौँ नि, हाम्रा पहाडमा जताततै हुन्छ।"

मेरो कुरा सुनेर उनी अनुहार उज्यालो पार्दै मुसुक्क हाँसेकी थिइन्।

त्यस्तै आश्चर्य मलाई अमेरिकामा सिस्नु देखेर भएको थियो। हाम्रा गाउँघरका गरिब जनताले त्यही जङ्गली काँडे पात खाएर आफ्नो भोक मेटेको देखेकाले होला, एक विकसित मुलुकको जङ्गलमा त्यो वनस्पति देख्दा म जिल्लाराम परेको थिएँ र कुद्दै छाम्न पुगेको थिएँ, यहाँकाले पोल्छ कि पोल्दैन भनेर। पछि छोरीसित कुरा हुँदा थाहा पाएको थिएँ– त्यसमा शरीरलाई हित गर्ने तत्त्व हुने हुनाले अमेरिकीहरूले पनि खाँदा रहेछन्। उनले टी.भी. को खानासम्बन्धी एउटा कार्यक्रममा सिस्नु उमालेर सुप बनाएको देखेकी रहिछन्।

एक दिन हिँड्दै जाँदा एक ठाउँमा एउटा काठको

बेन्च देखेका थियौँ। त्यसमा फलामको सानो पट्टी पनि थियो, जसमा अङ्ग्रेजीमा 'हिँड्न ज्यादै मन पराउने प्यारी एनीको सम्झनामा' भन्ने लेखिएको थियो।

"बिचरी यहीँ हिँड्थिन् होली !" मेरी श्रीमती ती हरफ पढ्दापढ्दै भावुक भएकी थिइन्। त्यस लेखनीले मलाई पनि छोएको थियो र तीस वर्षअघिको कुरा सम्झेको थिएँ, अनि बिसाएको थिएँ त्यस बेन्चमा।

म कामको सिलसिलामा पूर्वी पहाडको एउटा डाँडो उक्लँदै थिएँ। हिँडाइको थकान त थियो नै, तिर्खाले पनि सताइरहेको थियो। पहाडमा हिँड्दा धेरै पटक पानी-अमलाका गेडा खाएर तिर्खा मेटेको थिएँ, तर त्यहाँ मैले त्यो पनि भेटेको थिइनँ। बडो कष्टसाथ उक्लँदै जाँदा एक ठाउँमा एउटा चौतारो देखेर सकी-नसकी पुगेर थचक्क बसेको थिएँ, त्यहाँ ओछ्याइएका ढुङ्गे फल्याकमा। नजिकै झरझर गर्दै झरेको पानीको आवाज सुनेर ममा थप ऊर्जा जाग्रत भएको थियो। म उफ्रँदै पुगेको थिएँ त्यस जलाशयनेर। अँजुली

भरिभरि चिसो पानी खाएपछि मलाई नयाँ जीवन पाएको अनुभूति भएको थियो, अनि मैले चारैतिर हेरेको थिएँ। त्यहाँ वर-पीपलका रूखछेउ ठड्याइएको एउटा ढुङ्गामा केही हरफ देखेको थिएँ। त्यो चौतारो पनि एक भलादमीले आफ्नी श्रीमतीको सम्झनामा निर्माण गरेका रहेछन्। मैले त्यस दिनपछि त्यस्ता स्मारकहरू चाख मानेर हेर्न थालेको थिएँ। त्यसै क्रममा मैले देशका विभिन्न ठाउँमा स्मृतिचिह्नका रूपमा निर्मित चौतारा, इनार, प्रतीक्षालय आदि देखेको थिएँ र सोचेको थिएँ– यी सबै मानवीय संवेदनाका उदाहरण हुन्।

"हिँड्दाहिँड्दै थाकेकाहरू यसमा बसेर बिसाऊन् भनेर बनाइदिएछ।" उनी झन्झन् भावुक हुँदै बोल्दै थिइन्। "यही ठाउँ किन छानेको रहेछ" भनिसकेर उनले चारैतिर हेरेकी थिइन्, आधार खोज्न होला।

"बूढाबूढी सँगै हिँड्थे होलान्। कुनै दिन यहीँ आइपुग्दा उनी थाकेकी होलिन् नि !" मैले उनलाई आफ्नो अडकल सुनाएको थिएँ।

"कस्तो माया गर्दो रहेछ आफ्नी श्रीमतीलाई ! बिचरो बूढो ! ऊ पनि यहाँ आएर बस्दो हो कि सम्झना गर्दै ?" उनको स्वर मलिन हुँदै गएझैँ लागेको थियो मलाई ।

आउँदो होला, हेर्दो होला, बस्दो पनि होला यस आसनमा– मैले सोच्दै गएको थिएँ । मुगल बादशाह शाहजहाँले पनि आफ्नी प्यारी रानी मुमताज महलको मृत्युपछि उनैको सम्झनामा जमुना नदीको तीरमा बनाएको ताजमहललाई हेरिरहन्थे रे, वल्लो छेउको आगरा फोर्टमा बसेर । दिल्ली गएका बेला आगरास्थित त्यो संसारप्रसिद्ध स्मारक हेर्न जाँदा गाइडले हामीलाई पहिले त्यही फोर्टमा लगेर पर्खालमा एउटा प्वाल देखाउँदै भनेको थियो– "यहाँ एउटा हीरा खोपिएको थियो । आफ्नो बुढेसकालमा यहाँ बसेर बादशाहले त्यसै हीराबाट परको ताजमहल हेर्थे । अङ्ग्रेजहरूले पछि त्यो बहुमूल्य पत्थर यहाँबाट उक्काएर बेलाइत लगे ।"

त्यो विश्वविख्यात प्रेमको प्रतीक मैले पहिलो पटक

त्यहीँबाट देखेको थिएँ। ओह, देख्नेबित्तिकै कस्तो उत्तेजनाको तरङ्ग फैलिएको थियो मेरो शरीरभरि, त्यो चम्किलो र आकर्षक स्मारकको सुन्दरता देखेर! केही दिनअघि– सन् दुई हजार सातको सातौँ महिनाको सातै दिनका दिन एक मित्रलाई भेट्न सियाटल गएका बेला मैले टेलिभिजनको प्रत्यक्ष प्रसारणमा त्यस स्मारिकाको चित्र देख्न र त्यसको चर्चा सुन्न पाएको थिएँ। त्यसै कार्यक्रममा संसारभरिका जनताको निर्णय अनुसार, सन् १६४८ तिर बनेको ताजमहल नै विश्वका दस आश्चर्यजनक निर्माणमध्ये प्रथम घोषित भएको थियो। हुन पनि अद्भुत छ त्यो सङ्गमर्मरको स्मारक र अनुपम छ त्यसको सुन्दरता अनि अद्वितीय छ त्यसमा गरिएको नक्कासी। जसले हेर्छ त्यो हेरेको हेर्‍यै हुन्छ, मन्त्रमुग्ध।

हामी त्यस बेन्चमा बसेर कुरा गरिरहेकै बेला एउटी गोरी आइमाई कुद्दै आएकी थिइन् र हाम्रो छेउको खाँबामा झुन्ड्याइएको बाकसबाट एउटा प्लास्टिक झोला झिकेर उस्तै चालमा फर्किएकी थिइन्। त्यहाँ

पनि हाम्रो कम्युनिटीमा राखिएको जस्तै कुकुरको चित्र भएको बाकस रहेछ। हामी आश्चर्यसाथ हेरिरहेका थियौँ। उनी कुदेकै वेगमा बाटाछेउको झाडीभित्र पसेकी थिइन्। उनको कुदाइले मलाई लागेको थियो– त्यहाँको सिस्नुले उनलाई पोल्यो होला, नभए पनि ऐँसेलुको काँडाले चिथर्‍यो होला। एकै छिनपछि ती महिला हातमा त्यही प्लास्टिकको पोको बोकेर कुकुर डोर्‍याउँदै फर्किएकी थिइन् र हामीतिर हेर्दै मुसुक्क हाँसेर अभिवादनको चालले टाउको झुकाएकी थिइन्।

ती महिलाले हामीलाई उछिनेर गइसकेपछि मेरी श्रीमतीले मतिर पुलुक्क हेरेर भनेकी थिइन्– "कस्ता इमानदार है यी अमेरिकीहरू! यो जङ्गलमा कसले पो देखेको थियो र तिनको कुकुरले दिसा गरेको? किन गर्नुपरेको थियो त्यत्रो दुःख त्यस्तरी, झाडीभित्र पसीपसी?" उनी अवाक् थिइन् यहाँका मान्छेले नियम पालना गरेको देखेर।

हो त, म पनि घोरिएको थिएँ सोच्दै– अब ती महिला यसरी नै पोको हल्लाउँदै कुकुर डोर्‍याएर

जान्छिन् आफ्नो गाडीसम्म। कुकुरसहित त्यसमा चढ्छिन् र पुग्छिन् घर, अनि निर्दिष्ट फोहोरको भाँडामा फाल्छिन् त्यो पोको।

"हामीले भए ..."

"छोड अब, हामीले भए केके गर्थ्यौं कुन्नि!" मैले बीचैमा उनलाई रोकेको थिएँ। साँच्चै भन्ने हो भने मैले आफ्नो खिन्नता पोखेको थिएँ। ती महिलाको जस्तै इमानदारी र जिम्मेवारीपूर्ण कृत्य मैले यहाँ अन्यत्र अरूले पनि गरेको देखेको थिएँ र सबै देख्दै जाँदा मलाई अलिअलि हीनताबोध हुन थालेको थियो।

"यी साइकलवाला दाहिनेतिरबाट आउँदा रहेछन्।" फेरि अर्को एउटाले हामीलाई सतर्क गर्दै साइकल कुदाएर लगेपछि उनले भनिन्– "त्यसैले हामी बायाँतिरबाट हिँड्दा ठीक हुन्छ।"

हामी बाटाको वरिपरि हेर्दै सधैंझैं आपसमा कुरा गर्दै हिँड्दै थियौं। केही पर पुगेपछि एउटी आइमाईलाई बच्चाको गाडी धकेल्दै आइरहेको देख्यौं। तिनी कोक्रातिर

हेर्दै बोल्दै पनि थिइन् । नजिकै आइपुग्दा तिनले हामीतिर हेरेर मुसुक्क हाँस्दै "गुडमर्निङ" भनिन् । हामीले पनि हाँस्दै कोक्रातिर हेर्‍यौँ । सानो बच्चो आँखा चिमचिम गर्दै थियो ।

"ओहो, साह्रै चिचिलो पो रहेछ । एक महिनाभन्दा बढीको होइन होला !" ती महिला अलिक पर पुगेपछि उनले मनजिकै आएर सुस्तरी भनिन्– "हाम्रातिर त चिसो लाग्छ भनेर महिनौँ सुत्केरी स्याहार्नुपर्छ । यहाँ भर्खरकी सुत्केरी यस्तो चिसो हावा चलेको ठाउँमा बच्चा लिएर ठमठम हिँड्दै छिन् । झन् यहाँकै आइमाईहरू स्वस्थ अनि टाठा देखिन्छन् । खोइ के हो ? बुझिएन !" उनले कुरो सकेर मतिर हेरिन् ।

"तिमीले त मतिर हेरेर प्रश्न गर्दै छ्यौ । मलाई सोधेकी कि क्या हो ? मलाई के थाहा र ! कहिल्यै सुत्केरी भएको भए पो त जानूँ !" मैले उनलाई जिस्क्याउन हाँस्दै भनेँ ।

"हरे, मैले सोधेको हो र ! आफ्नो द्विविधा पो व्यक्त गरेकी ।" उनी टक्क रोकिइन् र मलाई हेर्दै प्रश्न

थपिन्– "मेरो कुरा ठीक हो कि होइन भन्नुस् त ?"

उनको जिज्ञासा स्वाभाविक थियो। तर म पनि यसबारे अनभिज्ञ नै थिएँ। उनीतिर हेरेर टाउको हल्लाउँदै भनेँ– "तिमीले भनेको ठीक हो।"

हामी हिँड्ने एकतर्फी समय पूरा हुँदै थियो। फर्कने बेला उनले सधैँझैँ नयाँ प्रस्ताव राखिन्– "अलिक परसम्म जाऔँ र त्यता कुनै निकास देखियो भने त्यतैबाट मूल बाटो निस्केर फर्कौं। हेरौँ न उतातिर केही छ कि !"

मैले पनि सही थापेँ– "ठीकै हो जाऔँ। हामी घुम्न आएकाले नयाँनयाँ हेर्ने, अनुभव बटुल्ने त हो नि।"

केही अगाडि पुग्दा हामीले एउटा सुन्दर पोखरी देख्यौँ। पोखरीको पानी एकदमै सफा थियो। त्यसमा राजहंसहरू पौडिँदै, डुबुल्की लाउँदै थिए। पोखरीको छेउछेउ राम्रो चौर बनाइएको रहेछ। चौरको उतापट्टि राम्रा बान्कीका घरहरू थिए। सबै घरका अघिल्तिर एउटा-एउटा सुन्दर बगैँचा। हाम्रो सामुन्नेको घरको

बगैँचा त ज्यादै रमणीय थियो। बोटबिरुवा, लता, लहरा, दूबो, बाँस, काठ, ढुङ्गा, मूर्ति आदिको मिश्रण गरेर आकर्षक तरिकाले सजाइएको थियो त्यो बगैँचा। सोचेँ– बगैँचा विशेषज्ञलाई जिम्मा दिएर बनाइएको होला। सौखिन होला घरधनी।

मैले जापानमा पनि त्यस्तै ससाना र कलात्मक तरिकाले सजाइएका बगैँचाहरू देखेको थिएँ। तर तिनको प्रस्तुति यहाँको भन्दा केही भिन्न अनि केही बढी प्रकृतिसदृश लाग्थ्यो। ठूलठूला प्रजातिलाई बोनसाई प्रविधिद्वारा साना आकारमा हुर्काएर राखिएका रूखहरूले छुट्टै विशिष्टता थपेका हुन्छन् जापानी बगैँचाहरूमा। हिजोआज काठमाडौँमा पनि मानिसमा बगैँचाप्रति अभिरुचि बढ्दै गएको छ र तत्सम्बन्धी व्यवसायमा वृद्धि हुँदै छ। मलाई पनि बगैँचाको सौख सानैदेखि छ। त्यसैले राम्रो बगैँचा देखे म छिटै आकर्षित हुन्छु। त्यहाँ पनि एकै छिन उभिएर हेरेँ र सम्झिएँ पोर्टल्यान्डको इन्टरनेसनल रोज टेस्ट गार्डेन हेर्न जाँदाका कुरा। आहा, कति सुन्दर थियो त्यो

गुलाफैगुलाफको बगैँचा !

यहाँ आएपछि हामी एक दिन ओरेगन राज्यको पोर्टल्यान्ड सहर घुम्न गएका थियौँ। वासिङ्टन र ओरेगन दुई राज्यहरूलाई ओलम्पिया नदीले छुट्ट्याउँदो रहेछ। पुल तर्नेबित्तिकै 'पोर्टल्यान्ड सहरमा तपाईंलाई स्वागत छ' लेखिएको ठूलो पाटी बाटाको दाहिनेतिर देखेको थिएँ। हामी बसेको ओलम्पिया सहरबाट झन्डै दुई सय किलोमिटर पर रहेको त्यस सहरमा पुग्न हामीलाई गाडीमा दुई घण्टा लागेको थियो। बाटामा हामीले अमेरिकातर्फको भ्यानकुभर सहर नाघेका थियौँ।

अमेरिकाको वासिङ्टन तटमा पहिलो पल्ट सन् १७७५ मा स्पेनका नाविक क्याप्टेन हेसेटा ओर्लेपछि एक-एक गरी युरोपतिरका जहाजहरू आउन थालेका रहेछन्। सन् १७७८ मा ब्रिटिस क्याप्टेन जेम्स कुक अनि पछि सन् १७९२ मा त्यहींका अर्का क्याप्टेन भ्यानकुभर त्यहाँ आएका रहेछन्। तिनै पछिल्ला नाविकको नाममा वासिङ्टनको त्यस सहरको नाम राखिएको रहेछ। तर क्यानाडामा पनि नजिकैको

सिमानानेर त्यही नामको अर्को सहर रहेछ। भ्यानकुभरको उल्लेख हुँदा मान्छेहरूले सामान्यतया क्यानाडाको सहरलाई नै सम्झँदा रहेछन्।

हामीले पहिले पोर्टल्यान्ड सहरको एक पाटाको परिक्रमा गरेर स्यालमोन स्ट्रिटमा बाटैनेर रहेको फोहोराको वरिपरि घुमेर त्यहाँको रमिता हेरेका थियौँ। त्यसको पानीमा भिज्दै ससाना केटाकेटी रमाउँदै थिए र अभिभावकहरूले थपडी बजाउँदै तिनलाई हौस्याइरहेका थिए। त्यसपछि हामी गाडीमै सहरको अर्को पाटाको फन्को मारेर अन्त्यमा संसारप्रसिद्ध गुलाफको बगैँचा हेर्न गएका थियौँ।

वासिङ्टन पार्क इलाकामा अवस्थित त्यो विशाल उद्यान साढे चार एकड अर्थात् छत्तीस रोपनीजति क्षेत्रफलमा फैलिएको रहेछ। त्यहाँ साढे पाँच सय जातका सात हजार गुलाफका बोट रहेछन्। संसारभरिका सौखिन बगैँचेहरूले आफूले फुलाएका गुलाफका रङ्ग, सुवास र अन्य गुणहरू परीक्षण गर्न त्यहाँ पठाउँदा रहेछन्। त्यसै बगैँचाका कारण पोर्टल्यान्डलाई

'गुलाफहरूको सहर' पनि भनिँदो रहेछ। त्यो अमेरिकाको सबैभन्दा पुरानो सार्वजनिक उद्यान रहेछ। सन् १९०५ तिर केही उत्साही व्यक्तिहरूले त्यसको स्थापना गरेका रहेछन्। अहिले पनि थुप्रैले त्यहाँ आएर स्वयंसेवकका रूपमा काम गर्दा रहेछन्। त्यहाँ विवाह समारोह पनि हुँदो रहेछ। हामी पुगेका बेला एउटा हरियालीपूर्ण कक्षमा एक जोडीको विवाह भइरहेको थियो। बगैँचाभित्रै रहेको क्वीन्स वाक नामको सानो बाटामा काँसले बनेका थुप्रै ताराहरू छापिएको देखेका थियौँ। प्रत्येक ताराको तल व्यक्तिका नाम पनि खोपिएका थिए। बुझ्दा थाहा पाएका थियौँ– सन् १९०७ देखि नै त्यहाँ आयोजना हुने प्रतियोगितामा छानिने रोज फेस्टिभल क्वीनको सम्मानमा त्यहाँ एउटा तारा थपिँदो रहेछ।

त्यहाँबाट निस्कँदा मैले दक्षिण भारतको मैसुर सहरनेरको वृन्दावन गार्डेन सम्झेको थिएँ। कावेरी नदीको तीरमा रहेको त्यस विशाल र सुन्दर बगैँचामा थरीथरीका फूल र भू-सजावट हेर्दै घुम्दा तीन घण्टा बितेको मैले थाहै पाएको थिइनँ। साँझ परेपछि त्यहाँको फोहोरा-

नाचको कार्यक्रम हेर्न पर्खेको थिएँ। अँध्यारो हुनासाथै फोहोरामा झिलिमिली रङ्गीन बत्तीको प्रकाश छरिएको थियो, अनि पार्श्वमा बजेको सङ्गीतको तालमा नाचेझैं गरी फोहोराको पानी झरिरहेको दृश्य देखेर म निकै आनन्दित भएको थिएँ। बडो सुन्दर थियो त्यो प्रस्तुति ।

उद्यानहरूको सम्झना हुँदा मैले काठमाडौंको केशरमहलभित्र रहेको स्वप्न बगैंचा पनि सम्झन पुगेको थिएँ। सानो भए पनि त्यसको अवधारणा मैले नौलो मानेको थिएँ। तर त्यसलगत्तै मेरो स्मृतिमा रत्नपार्क झल्किएकाले मन एकै छिन खिन्न भएको थियो र सोचेको थिएँ– राजधानीको मुटुमा अवस्थित उद्यानलाई राम्ररी स्याहार्न सके कस्तो सुन्दर हुने थियो त्यहाँको परिवेश !

"होइन, हाँस पौडेको हेर्दै यहीँ बस्ने विचार छ कि क्या हो ? म त आउनुहोला भनेर पर पुगेर कुरिराखेकी थिएँ।" श्रीमतीको बोलीले म झस्कें।

साँच्चै, म त कताकता पुगेछु कल्पनैकल्पनामा। म

छिटछिटो कदम चाल्दै हिँडेँ। नजिकै पुगेपछि उनी आफैँलाई सोधेझैँ बोलिन्– "यहाँ हाँस खाँदा रहेनछन् कि क्या हो? टेलिभिजनमा खानासम्बन्धी कार्यक्रममा पनि हाँस पकाएको कहिल्यै देखिएन।"

हो त, मैले सोचेँ, हामीले यहाँ आएदेखि नै टेलिभिजन हेर्नुपर्दा खानावाला च्यानल नै हेरिरहेका थियौँ धेरैजसो। चौबीसै घण्टा चल्ने त्यस च्यानलमा कुनै आधाघण्टे, कुनै एकघण्टे कार्यक्रमहरूमा यहाँका कहलिएका एकएक भान्सेले थरीथरीका खाना पकाएको देखाइन्थ्यो। सबै प्रस्तुति आकर्षक र रमाइला हुन्थे। खानासम्बन्धी प्रतियोगिताहरू त झन् सनसनीपूर्ण पारेर प्रस्तुत गरिन्थे। त्यस्ता कार्यक्रमहरू यहाँ धेरै लोकप्रिय रहेछन् भन्ने बुझिएको थियो।

पसलहरूमा किनमेल गर्न जाँदा पनि कुखुरा र टर्कीको मासु देखेको थिएँ। तर कहीँ पनि हाँसको मासु राखेको देखेको थिइनँ। रेस्टुरेन्टहरूमा खान जाँदा कहिलेकहिले जिज्ञासावश मैले मेनु ओल्टाईपल्टाई हेर्ने गर्थेँ। तर त्यहाँ पनि हाँसका परिकार लेखेको

पाए जस्तो लागेन।

"हो त है!" मैले उनीतिर हेर्दै आश्चर्य व्यक्त गरेँ। उनले पनि हो भनेझैँ गरिन्।

हाम्रो कम्युनिटीको एक छेउमा एउटा पोखरी थियो। त्यतातिर निर्माण सामग्री थुपारिएकाले हो कि, त्यहाँको पानी त्यति सफा थिएन। त्यसको एकातर्फको भागमा लामालामा बुटा उम्रिएका थिए। बेलाबेला मैले त्यहाँ थुप्रै हाँसहरू पौडी खेल्दै गरेको देखेको थिएँ। पोखरीको छेउमा एउटा घर थियो। त्यसै घरकाले पो पालेका हुन् कि भन्ने पनि लागेको थियो, सुरुसुरुमा। तर एक-दुई पटक बेलुकीपख ती पक्षीहरू त्यहाँ नदेखेकाले बाहिर कतैबाट उडेर आउँदा हुन् भन्ने लागेको थियो। एक दिन हामी हिँड्न निस्कने बेला आकाशमा चराहरू कराउँदै उडेको देखेका थियौँ।

"यसरी कराउने के चराहरू रै'छन्?" उनले सोधेकी थिइन्।

"यी पानीहाँस हुन्। पक्कै पनि हाम्रो कम्युनिटीको

पोखरीमा पौडन आएका हुन् ।" मैले आफ्नो जानकारी व्यक्त गरेको थिएँ ।

"हाँस यतिमाथि पनि उड्न सक्छ र ?" उनले थप जिज्ञासा पोखेकी थिइन् ।

मैले सम्झेको थिएँ– कलेज पढ्नेताका चोभारपारिको टौदहमा बस्न आएका हाँसको सिकार गर्न झाडीझाडी पाछिँदै, पछारिँदै हिँडेको । मेरा एक सहपाठीको बन्दुक थियो । उनी बेलाबेला बिदाका दिनमा आफ्ना काकाहरूसित सिकार खेल्न जान्थे र त्यहाँ भएका घटनाहरू बडो सनसनीपूर्ण तवरले सुनाउँथे हामीलाई । उनको वर्णन सुनेर मलाई पनि सिकारमा जाने लालसा जाग्रत भएर एक दिन उनीसामु आफ्नो इच्छा जाहेर गरेको थिएँ । उनले जोसका साथ सहमति जनाएका थिए । तर धेरैपछि मात्र उनले बल्लबल्ल जुराएका थिए मलाई लैजाने साइत ।

त्यस दिन उनले मलाई चोभारसम्म मोटरसाइकलमा लगेका थिए । त्यहाँबाट हामी पहाडैपहाड हिँडेका

थियौं। "यता थुप्रै कालिज र तित्रा पाइन्छन्" भन्ने जानकारी दिँदै उनले मलाई बन्दुक बोकाएर झाडी नै झाडी कुदाएका थिए। कालिज त मैले कतै देख्न पाएको थिइनँ; अँ, एक ठाउँमा "उः तित्रा" भन्दै मित्रले बन्दुक काँधमा तेर्स्याएका थिए र एक आँखा चिम्लेर निसाना लाउन आँटेका थिए। तर त्यसै बेला मलाई जङ्गली कमिलाले चिरिक्क पारेकाले मेरो मुखबाट "ऐया" निस्केको थियो। मेरा मित्र दिक्क मानेर "धत्तेरी, धत्तेरी" भन्दै त्यहाँबाट छिटो चालले हिँडेका थिए र सिकारमा हिँड्दा के गर्न हुन्छ, के गर्न हुँदैन भन्ने पाठ पढाउँदै मलाई त्यस पोखरीसम्म पुऱ्याएका थिए। ओह, कस्तो गलेको थिएँ म त्यस दिन भोक र थकाइले ! साँझपख दहमा पुग्दासम्म हाँसहरू उड्न थालेका थिए। पोखरीको पल्ला छेउतिर रहेका केही हाँसलाई ताकेर मेरा ती सिकारी मित्रले गोली चलाएका त थिए, तर कुनै मऱ्यो होला भन्ने मलाई विश्वास भएको थिएन। हुन पनि बन्दुक पड्केको आवाजले सबै पक्षी त्यहाँबाट उडेका थिए।

म घोत्लिँदै थिएँ, अनि सम्झेको थिएँ एउटा अर्को दृश्य, जसमा एउटो केटाले कोसी नदीमा बडो कुशलतासाथ हाँस समातेको थियो।

एक पटक कामविशेषले सप्तरी गएका बेला कञ्चनपुरका एक मित्रले ताजा जलकपूर ख्वाउँछु भनेर आफ्नै राजदूत मोटरसाइकलमा मलाई कोसीमै पुऱ्याएका थिए। उनले बाटामा पर्ने भारदहनेरको कुनै बाबा नाम गरेको होटेलमा लगेर "यहाँ नेपालभरिकै नामी पेडा पाइन्छ, चाख्नुहोस्" भनेर मलाई कुराउनीको भर्खरै बनेका मिठाई पनि ख्वाएका थिए। तर हामी नदीछेउ पुग्दा उनले चिनेको मछुवार आइपुगेको थिएन। समय काट्न हामी नदीको तीरैतीर हिँडेका थियौँ केही बेर। म हेर्दै थिएँ परपरसम्म फैलिएको त्यस विशाल जलाशयलाई र सम्झँदै थिएँ– छापाहरूमा वर्षैपिच्छे पढ्दै आइरहेको डुबानको मारमा परेका कोसी तटका बासिन्दाहरूको कारुणिक व्यथाको समाचार। आह, कुनै उपयोग गर्न सकेनौँ है हामीले त्यस्तो सम्पदाको !

हिँड्दाहिँड्दै एक ठाउँमा एउटो केटातिर देखाउँदै ती मित्रले भनेका थिए– “उः हेर्नुहोस्, अब त्यसले कस्तो तरकिबले त्यहाँ पौडँदै गरेका हाँस समात्छ।”

कट्टु मात्रै लाएको त्यस कालो केटाले हातमा एउटा कालै हाँडी लिएको थियो। उसले सुइँसुइँ पानीमा पसेर हाँडीलाई खप्लक्क आफ्नो टाउकामा छिराएको थियो। त्यसमा हेर्न मिल्ने गरी दुइटा प्वाल पारिएको रहेछ। ऊ सुस्त चालले पौडी खेल्दै हाँसहरू भएनेर पुगेको थियो र ती पक्षीहरूले थाहै नपाउने गरी च्याप्पच्याप्प एकपछि अर्काको खुट्टा समात्दै, तान्दै चार वटा हाँस उसले कम्मरमा भिरेको झोलामा हालेको थियो। मैले छक्क परेर हेरेको थिएँ, त्यो गजबको तरकिब।

“आज यतैबाट निस्केर जाऊँ।” एउटा निकासनेर पुगेपछि उनले भनिन्।

म “हुन्छ” भन्दै त्यता फर्कँदै थिएँ, एउटा खाँबामा केही लेखिएको बाक्लो कागज झुन्ड्याइएको देखेर रोकिएँ। कसैको बिरालो हराएको रहेछ। त्यस

बिरालाको फोटोसहित पाउने वा देख्नेलाई खबर गरिदिन अनुरोध गर्दै मालिकको नाम, ठेगाना र फोन नम्बर उल्लेख गरिएको रहेछ त्यसमा ।

एक छिन गहिरिएर फोटो नियालेपछि उनले शङ्का व्यक्त गरिन्– "ए, यो कतै त्यही त होइन ?"

मैले पनि हेरेँ– घाँटीमा छालाको पेटी, त्यसमा एउटा सानो घण्टी झुन्ड्याइएको बुब्ला नामधारी मोटोघाटो अनि सुन्दर बिरालाको तस्बिर ।

एक दिनको कुरो हो। हामी दुवै मूल बाटातिर निस्केका थियौँ हिँड्दै । चिसो हावा चलिरहेको थियो; घाम पनि लागेको थिएन । एउटा चोकनेर पुग्दा सिनुको गन्धले हामी दुवैले आत्तिएर एक-अर्कालाई हेरेका थियौँ । आश्चर्यसाथ यताउति हेर्दा बाटाको बीचमा गाडीले कच्याककुचुक पारेर सुकेको छाला मात्रै रहेको अवस्थाको बिरालो देखेका थियौँ । कस्तो दुर्गन्ध फैलिरहेको थियो छेउछाउमा ! रुमालले नाक छोप्दै मैले सोचेको थिएँ– के हो यो अमेरिकामा पनि ? यहाँ सफाइ भइरहन्छ भन्छन्, खोइ त ?

केही पर पुगेपछि उनले लामो सास फेर्दै शङ्का पोखेकी थिइन्– “कसको हो भन्ने सनाखत नभई उठाइँदैन कि यहाँ कुकुर-बिरालाको लास पनि? पहिले मालिक खोज्दै हिँडेर पो हो कि?”

साँच्चै, के भएको होला यो? कसैले रिपोर्ट त गर्नुपर्ने? म पनि सोच्दै हिँड्दै थिएँ र सम्झेको थिएँ तेइस-चौबीस वर्षअघि जापानमा भेटिएका एक वृद्ध सज्जनका कुरा।

एक दिन म एक जना भारतीय सहभागी साथीसित टोक्योको सडकमा डुल्दै थिएँ। एक ठाउँमा भारतीय होटेलको सङ्केतपाटी देखेर दुवै जना केही राम्रो खाजा पाइए चाखौँ भनेर छिरेका थियौँ। होटेलका मालिक दक्षिण भारतीय रहेछन्। मोटोघाटो जीउडाल भएका काला अग्ला व्यक्ति, देख्दै रवाफिला थिए। भेटेर हामीले आ-आफ्नो परिचय दिएपछि उनले मेरा साथीतिर हेर्दै ओजनदार स्वरमा सोधेका थिए– “पान त खाँदैनौ?” जवाफ नपर्खी उनले भनेका थिए– “यहाँ इन्डियामा जस्तो जताततै पिच्चपिच्च थुक्न पाइँदैन नि।” कुरा

नसक्दै उनले आफ्ना दुवै हातका नाडीहरू एकमाथि अर्को गरी खप्ट्याएका थिए र ठूलठूला आँखा पारेर थपेका थिए– "यहाँ त सोझै लैजान्छ।" उनका ती ठाडा कुरा सुनेर हामीले अप्ठ्यारो मान्दै एक-अर्कालाई हेरेका थियौं।

ती बालब्रह्मचारी वृद्धलाई म किन पनि सम्झन्छु भने उनी युवावस्थामै नेताजी सुभाषचन्द्र बोसको आजाद हिन्द फौजमा लागेर सन् १९४५ तिर जापान पुगेका रहेछन्। त्यसपछि हवाईजहाज दुर्घटनामा नेताजीको मृत्यु भयो भन्ने खबर पढेपछि विरक्तिएर भौंतारिँदै हिंडेका रहेछन्। केही समयपछि जीविकोपार्जनका निम्ति त्यहाँ होटेल खोलेका रहेछन्। उनले नेताजीका बारेमा एउटा किताब पनि लेखेका रहेछन्। हाम्रो जिज्ञासामा उनले त्यो मोटो पुस्तक होटेलको भित्री कोठाबाट ल्याएर देखाएका थिए। त्यसको बाहिरी गातामा फौजी पोसाक लाएका नेताजीको तस्बिर थियो।

हामीसित कुरा गर्दा एउटा सन्दर्भमा उनले भनेका

थिए– "इन्डियामा कानुनी राज्य भने पनि हिजोआज कानुन भन्ने त छँदै छैन रे। खालि ठूलाबडाको हालीमुहाली चल्छ रे। साधारण जनता त पिल्सिइरहेका छन् रे। त्यो ठीक होइन; प्रजातान्त्रिक हुँदै होइन।" उनी बोल्दाबोल्दै जुरुक्क उठेका थिए र बडो गम्भीर हुँदै आफ्नो कुरा टुङ्ग्याएका थिए– "त्यो त अधिनायकवादी व्यवस्था भयो, अङ्ग्रेज राजकै जस्तो।"

उनका कुरा सुनेर हामी दुवै जनाले मुखामुख गरेका थियौँ। त्यस बेला एकाएक मैले आफ्नै देश सम्झेको थिएँ र घुटुक्क थुक निलेको थिएँ। हामीले त्यहाँ डोसा र दक्षिण भारततिरकै रोस्टेड कफी खाएका थियौँ। समय धेरै नभएकाले ती भारतीय स्वतन्त्रता सेनानीका रोचक र सनसनीपूर्ण अनुभव सुन्ने तीव्र लालसा हुँदाहुँदै पनि हामी उठेका थियौँ। पैसा तिरेर निस्कने बेला ती वृद्धले हामी दुवैको काँधमा हात राख्दै भावुक स्वरमा भनेका थिए– "बाबूहरूले नराम्रो नमान्नुहोला। तपाईंहरूलाई भेटेर मलाई मेरो युवाकालको सम्झना भयो र मनका कुरा निस्किए। धेरैपछि

यस्तरी कुरा गर्न पाएँ। को पो भेटिहालिन्छ र यस परदेशमा आफ्नू ?"

हामी दुवै फेरि आउने बाचा गर्दै त्यहाँबाट हिँडेका थियौँ।

उनीसित बिदा भएर फर्कंदा बाटामा मैले धेरै अरू कुराका साथै जापानको सरसफाइका कुराहरू पनि सम्झेको थिएँ। जापानको सरसफाइ व्यवस्था पनि यहाँको जस्तै राम्रो थियो। परिवेश पनि सफासुग्घर देखिन्थ्यो जतातत्तै। तर त्यहाँ मातेर बाटोबाटो पिसाप फेर्दै हिँडेका मान्छेहरू पनि मैले देखेको थिएँ।

यहाँ पनि यो बिरालो मात्रैको कुरो होइन। हिजोअस्ति हिँड्दा मैले ठाउँठाउँमा बियरका बट्टा, कोकका कप, नेप्किन जस्ता फोहोरहरू बाटाबाटै देखेको थिएँ। बजारका एक-दुई ठाउँमा चुरोटका ठुटाहरू यत्रतत्र फालिएको पनि देखेको थिएँ। यस्ता एकाध घटनाहरू जहाँ पनि हुन्छन्; यिनलाई अपवाद नै मान्नुपर्छ। मुख्य कुरो कानुन बनाएर मात्रै पुग्दैन। जापानमा मैले भेटेका ती वृद्धले भनेको म ठीक ठान्छु।

कानुनको प्रभावकारी प्रयोग हुनुपर्छ। सबैलाई समान रूपले लागू हुनुपर्दछ; भेदभाव हुनु हुँदैन। अन्यथा बेथिति हुन्छ।

"निकै घोरिएर सरलक होम्सझैँ गरी हेर्नुभएको छ बिरालाको फोटोलाई। केही पत्तो लाउन सक्नुभयो र ?" पिठ्यूँमा थपथपाउँदै श्रीमतीले भनिन्।

"तिमीले सडकमा किच्चियो भनेर शङ्का गरेको बिरालो योचाहिँ होइन है।" मैले पनि जासुस होम्सले आफ्ना सहयोगी मित्र डाक्टर वाटसनलाई भनेझैँ गरी उनीतिर हेर्दै भनेँ।

"कसरी ठोकुवा गर्न सक्नुहुन्छ ?" उनले थप प्रश्न तेर्स्याइन्।

"मुद्दा एकदमै सरल छ।" मैले भन्दै गएँ– "यो फोटो हेर। बुब्ला नाम गरेको यो बिरालो कालो-सेतो रङ्गको टाटेपाटे छ। हामीले सडकमा किच्चिएको देखेको बिरालाको छाला खैरो थियो। ठीक हो ?"

उनले पुनः तस्बिर नियालिन् र भनिन्– "हो त।"

हामी त्यताबाट निस्कने मूल बाटो समातेर पेटीपेटी यताउति हेर्दै घरतिर लाग्दै थियौँ, मोबाइल बज्यो। हामी फर्कन ढिलो गरेकाले के भएछ भनेर छोरीले फोन गरेकी रहिछन्। घडी हेरेँ– साँच्चै हामीले अलमल गर्दागर्दै धेरै समय बिताएका रहेछौँ।

"आइपुग्नै आँट्यौँ।" मैले छोरीलाई आश्वस्त पारेँ।

# जादुनगरीको सयर

खोइ त, अमेरिकामा पनि रुघा लाग्दो रहेछ त ! कटकट दुखेको शरीर ओछ्यानमा ओल्टेकोल्टे फर्काउँदै मैले सोचें। अमेरिकाबाट फर्केका साथीहरूले "छ महिना अमेरिका बस्दा कहिल्यै एक पटक छिउँसम्म आएन" भनेको सुन्थें। एक दिन एउटा क्लिनिकमा भेट भएका साथीले "अमेरिकामा त कहिल्यै केही भएन; यहाँ आउनेबित्तिकै पखाला चलेर इन्तु न चिन्तु पाऱ्यो" भन्ने सुनाएका थिए।

एल.ए. बाट सियाटल फर्केको भोलि पल्ट मलाई पखाला पनि चलेको थियो, दिनभरि नै। रोग-व्याधि भनेको हुँदै नहुने भन्ने हुन्छ होला र ! स्वास्थ्य विज्ञानमा ठूलै प्रगति गरेको अमेरिकामा त झन् डाक्टर देखाउन महिनौं कुर्नुपर्दो रहेछ। मुखमा डाबर आयो भनेर छोरीले डाक्टरको समय माग्दा दुई

महिनापछिको मात्रै पाएकी थिइन्। त्यो पालो आएकाले अघि भर्खरै गएका छन् आमाछोरी, जँचाउनका निम्ति। म घरकुरुवा भएर बसेको छु एक्लै। ज्वाइँसाहेब त काममा सबेरै निस्कनुहुन्छ। सम्झेँ– काठमाडौँमा पनि कतिपय विशेषज्ञ डाक्टरहरूसँग जँचाउन लामै कुर्नुपर्ने भएको छ। यहाँ आकस्मिक उपचारको भने बडो राम्रो प्रबन्ध रहेछ। ९११ मा फोन गरे तत्काल सहायता टोली गाडीमा आइपुग्दो रहेछ। सामान्य उपचारले नपुग्ने देखे त्यसैले अस्पताल लाँदो रहेछ बिरामीलाई।

ओहो, शरीर त धेरै पो दुख्यो ! छोरीले दिएको औषधि खानुपर्छ कि क्या हो ! मैले थर्मसबाट पानी झिकेँ। रचनाले जानुअघि डिग्री लाएर मेरो ज्वरो नापेकी थिइन्। सयको हाराहारी देखेर उनले आफ्नो औषधिको बट्टाबाट झिकेर मलाई एउटा चक्की दिएकी थिइन्। खपिनसक्नु भए खाउँला भनेर मैले राखिछोडेको थिएँ।

“चाहिनेजति सबै औषधि यहीँबाट एकमुस्ट बोकेर

जानु है। त्यहाँ औषधि निकै महँगो पर्छ। डाक्टरको प्रेस्क्रिप्सन नभई किन्न पनि पाइँदैन।" औषधि निल्दानिल्दै मैले काठमाडौँमा साथीले दिएको सल्लाह सम्झेँ। साँच्चै, यहाँ उपचार निकै महँगो रहेछ। स्वास्थ्य बिमा गरेको छैन भने त ढाडै सेकिने रहेछ। तर रुघा-खोकी, ज्वरो, झाडा-पखाला, ग्यास आदि जस्ता सामान्य रोगको औषधि भने फार्मेसीमा सहजै किन्न पाइँदो रहेछ। बाहिरै खुला र्‍याकमा देखिने गरी राखिने हुनाले प्रेस्क्रिप्सन चाहिँदो रहेनछ।

औषधिको प्रभावले तन्द्रा परेछ क्यार, केही क्षणमै सपना देखेझैँ भयो। कहिले कता हो कता रमिता हेर्दै रमाउँदै हिँडेको जस्तो, कहिले आकाशमा उडेर तारामण्डलमा विचरण गरेको जस्तो भएर आनन्द लागिरहेको थियो। तर एक पटक उड्दाउड्दै पानीमा झ्वाम्म खसेझैँ भयो र अत्तालिँदै ब्यूँझिएँ।

औषधिले गर्दा शरीर दुख्न केही कम भयो। तर घाँटी भने खसखस गरी नै रह्यो। तातो चिया खान मन लाग्यो र उठेँ। भान्सानेर पुग्दा गिदी नै

खलबलाउने गरी छिँक्का आयो। हत्त र पत्त मुख छोपेँ। हातभरि सिँगान टाँसियो। धारामा हात पखाल्दापखाल्दै सिनेमामा गधाले बडेमानको मुख बाउँदै आँखा चिम्लेर घरै थर्काउने गरी गरेको शक्तिशाली छिउँ सम्झिएँ। अनायास हाँसो फुस्कियो। कस्तो झुक्किएका थियौँ हामी त्यो सिनेमा हेर्दा !

लस एन्जेलसमा युनिभर्सल स्टुडियो घुम्न निस्केका थियौँ। एक ठाउँमा फोर-डी सिनेमा 'श्रेक' को विज्ञापनपाटी देखेका थियौँ। मैले सोचेको थिएँ– थ्री-डी भनिने त्रि-आयामिक प्रविधिको सिनेमा त सानैमा कालो चस्मा लाएर हेरेको थिएँ; अस्ति सियाटलमै पनि 'ह्यारी पोटर' हेर्दा पछिल्लो भागमा त्यस्तै चस्मा लाउनुपरेको थियो, तर यो फोर-डी कस्तो होला ?

हामी सबै आश्चर्यका साथ लाममा उभिएका थियौँ। त्यहाँ पनि मूल ढोकानेरै राखिएका थिए त्यस्तै प्लास्टिकका चस्माहरू। हामीले एकुन्टा टिपेका थियौँ र सिनेमा हेर्दा लगाएका थियौँ।

'श्रेक' निकै रमाइलो थियो र उत्तिकै रोमाञ्चक

पनि। कम्प्युटरको नयाँ प्रविधिको संयोजनद्वारा कार्टुन जस्ता देखिने कृत्रिम चरित्र निर्माण गरेर प्रथम पटक सन् २००१ मा निर्माण गरिएको त्यस शृङ्खलाको पहिलो चलचित्रले निकै ख्याति आर्जन गरेको थियो, अनि त्यस विधाका सिनेमामध्ये हलिउडको सर्वोत्कृष्ट अवार्ड ओस्कार पनि जितेको थियो। त्यस शृङ्खलाका दोस्रो र तेस्रो भाग पनि बनिसकेका थिए र हामी त्यसैको चौथो भाग हेर्न बसेका थियौँ।

तल्लीन भएर सिनेमा हेर्दाहेर्दै एउटा दृश्यमा श्रेकको गधाले बडेमानको हाच्छिउँ गरेको थियो। हामी सबैको मुखभरि ल्यासल्यास सिँगान टाँसिएको थियो। दर्शक सबै झस्किएर कराएका थिए। मैले अत्तालिएर हातले मुख पुछेको थिएँ। अनुहारभरि हल्का बास्ना छरिएको थियो। हामीले छक्क परेर एक-अर्कालाई हेराहेर गरेका थियौँ। एक ठाउँमा भाग्दै गरेको एउटा पात्रलाई समात्न त्यो गधा श्रेकलाई आफूमाथि चढाएर कुदेको थियो। त्यसै बेला एकाएक हामी बसेका कुर्सीहरू खटखट गर्दै हल्लिएका थिए। सिनेमाघरभरि

कोलाहल मच्चिएको थियो। म र उनी पनि "लौ भुइँचालो आयो" भनेर आत्तिएका थियौँ र उठ्नै आँटेका थियौँ। तर त्यति नै बेला त्यो गधा कुद्दाकुद्दै वायुपङ्खी घोडा जस्तै गरी आकाशमा उड्न थालेको थियो, अनि कुर्सीहरू पनि हल्लिन रोकिएर स्थिर भएका थिए।

अर्को दृश्यमा त्यो गधा श्रेकसहित समुद्रमा झ्वाम्म खसेको थियो र चारैतिर पानी उछिट्टिएको थियो। तर आश्चर्य, त्यो पानीले हामीलाई पो भिजाएको थियो त ! कस्तो तीन छक परेका थियौँ हामी सबै त्यति खेर, आहा! चलचित्र हेर्दा आफूले देखेका दृश्यहरू दर्शकहरूले प्रत्यक्ष अनुभव गर्न सक्ने गरी बनाइएको हुनाले त्यस प्रविधिलाई फोर-डी भनिएको रहेछ। त्यहाँका कुर्सीहरू आवश्यकता अनुसार हल्लाउन सकिने किसिमका यान्त्रिक रहेछन् र चाहिएका बेला प्रयोग गर्न सकिने गरी कुर्सीकै वरिपरि पाइप ओछ्याएर पानी छर्किने, हावा फाल्ने आदि व्यवस्था गरिएको रहेछ भन्ने कुरा हामीले पछि थाहा पाएका थियौँ।

गर्मी त उधुम थियो त्यस दिन। मान्छे पनि कति आएका हुन् त्यो स्टुडियो हेर्न! एक लाखभन्दा पनि बढी थिए होलान्। सबै लहरै उभिएका थिए काउन्टरमा। हामीलाई पनि आधा घण्टाजसो त कुर्नुपरेको थियो टिकट लिन। तर कस्तो सुन्दर व्यवस्था! काउन्टर पनि थुप्रै थिए। आगन्तुकहरूलाई गर्मीबाट राहत होस् भनेर जताततै रूखमा र खुला ठाउँमा खाँबाहरूमा स्प्रिङ्कलहरू जडान गरेर बाफ जस्तै पारिएको चिसो पानी छर्किने व्यवस्था गरिएको थियो। ठाउँठाउँमा शीतल हावा फाल्ने ठूलठूला विद्युतीय पङ्खाहरू राखिएका थिए। लाममा हिँड्दै म सोच्दै थिएँ– सबै शान्त भएर आफ्नो पालो कुर्न अनुशासित रूपमा उभिएका छन्। हामीकहाँ भए यतिन्जेलमा मान्छे छटपटाउँथे, कराउँथे अनि हूलदङ्गा भइसक्थ्यो। अझ दादागिरी देखाउँदै लाम उछिनेर अगाडि पुग्ने एउटो पुरुषार्थी पनि निस्किसक्थ्यो। टिकटको दलाली वा कालोबजारी गर्ने व्यापारै पो फस्टाइसक्थ्यो कि!

हिँड्नु पनि कम परेको थिएन। निकै ठूलो रहेछ

त्यो स्टुडियो इलाका। हाम्रा एक-एक टोलभन्दा पनि ठूलो होला क्षेत्रफलमा। सानोतिनो सहरैजत्रो भने हुन्छ। त्यहाँ हलिउडका थुप्रै सिनेमाहरूको छायाङ्कन हुँदो रहेछ। चर्चित सिनेमाहरू छायाङ्कन गरिएका ठाउँहरू देखाउँदै घुमाउने र दर्शकहरूलाई चलचित्र निर्माणसम्बन्धी जानकारी गराउने स्टुडियो टुर कार्यक्रम पनि त्यहाँ सञ्चालन गरिएको रहेछ। हामी त्यो हेर्न भनेर लाम लागेका थियौँ। आधा घण्टाभन्दा बढी नै लागेको थियो होला त्यहाँ पनि पालो कुर्दा। रेल जस्तै एकपछि अर्का डब्बाहरू जोडिएको लहरे बसले घुमाउँदो रहेछ विभिन्न चलचित्रका सेटहरूमा। गाडीमा जडान गरिएको भिडियोमा हलिउडकी एउटी ख्यातिप्राप्त महिला कलाकारले प्रत्येक चलचित्र र तिनको छायाङ्कनबारे जानकारी दिँदी रहिछन्।

हामी चढेको लहरे बस एउटा बस्तीतिरबाट हिँड्न थालेको थियो। "यो 'फ्ल्यास फ्लड' फिल्मको सेट हो।" भिडियोमा उद्घोषिकाले सूचना दिँदै थिइन्। म रमाइलो मानेर हेर्दै थिएँ। निकै पुराना घरहरू

देखिएका थिए। सामुन्ने इनार पनि थियो। एकातिर गेग्रान भएको बगर क्षेत्र पनि देखेको थिएँ। एकाएक पानी पर्न थालेको थियो। छेउतिर बसेका दर्शकहरू भिजेकाले अत्तालिँदै झ्याल बन्द गर्न यताउति हेर्दै थिए।

उद्घोषिकाले हाँस्दै भनेकी थिइन्– "नआत्तिनुहोस्, हेर्दै मात्र जानुहोस्!" उनले कुरा नटुग्याउँदै ठूलो बाढी आएर हाम्रो गाडीलाई हल्लाउँदै गएको थियो। उद्घोषिकाले जानकारी दिएकी थिइन्– "यी सबै चलचित्र निर्माणका प्रविधि हुन्। सिनेमामा तपाईंहरूले देख्ने गरेका बाढीका दृश्यहरू यसरी नै टङ्कीमा जम्मा गरिराखेको हजारौँ ग्यालेन पानी शक्तिशाली पम्पले वेगसित फालेर सिर्जना गरिएका हुन्छन्। वर्षाको दृश्य पनि अहिले देखाइएझैँ माथि खाँबामा जडान गरिएका स्प्रिङ्कलहरूबाट पानी छर्केर छायाङ्कन गरिन्छ। 'द मेक्सिकन' र 'बिग फेट लायर' चलचित्रहरूमा पनि यो सेटको प्रयोग गरिएको छ।"

त्यहाँबाट गाडी फेरि अर्को बस्तीको बीचबाट हिँड्न

थालेको थियो। बस्ती उजाड थियो। सामुन्ने भत्किएका घरहरू देखिन्थे। मान्छेका सामानहरू यत्रतत्र छरिएका थिए। "यो सेट सन् २००५ मा स्टेभन स्पिलबर्गको निर्देशनमा बनेको 'वार अफ द वर्ल्ड' फिल्मको हो। त्यसको निर्माणमा बहुचर्चित सिनेमा 'द टाइटनिक' भन्दा पनि बढी खर्च लागेको थियो रे। त्यस चलचित्रमा देखाइएको दुर्घटनाग्रस्त जेट-७४७ हवाईजहाज बस्तीका घरहरूमा जोत्तिँदै भर्खरै त्यहाँ खसेको छ। उः हेर्नुहोस्, जल्दै गरेको त्यो अभागी वायुयान !"

हामीले देखेका थियौँ– बीचबाट गिँडिएझैँ दुई टुक्रा भएर भुइँमा बजारिएको बडेमानको जहाज। त्यसका भग्नावशेषहरूमा कतैकतै आगो बलिरहेको थियो र यत्रतत्र धूवाँ पुतपुताइरहेको थियो। उद्घोषिका भन्दै थिइन्– "तपाईंहरू जस्ता जिज्ञासुलाई जानकारी दिन राखिएको छ त्यो दृश्य यहाँ, जस्ताको तस्तै।"

हाम्रो बस एउटा तलाउतिर जाँदाजाँदै त्यहाँको होचो साँघुतर्फ लागेको थियो। केही पर नपुग्दै बस हल्लिन थालेको थियो। पुल पनि मच्चिन थालेकाले उद्घोषिका

त्रसित अनुहारसहित कराएकी थिइन्– “ए ड्राइभर सा’ब ! यो साँघुले हाम्रो गाडीको बोझ थाम्न सक्छ के ?”

उनको बोली पूरा नहुँदै क्याककुरुकको आवाजसँगै गाडी बेतोडले हल्लिएको थियो। सबै त्रसित भएका थियौँ। गाडी सुलुलुलु पानीमा डुब्न थालेको थियो। उद्घोषिकाले प्रार्थना गर्न थालेकी थिइन्। हामीले “ए-ए” भन्दा नभन्दै गाडी ग्ल्यालग्ल्यालसम्म डुबिसकेको थियो। मान्छेहरूले चीत्कार गर्न थालेका थिए। श्रीमतीले मेरो हात जोडसित समातेकी थिइन्। म पनि डराएको थिएँ। के भएको हो यो? डुबियो कि क्या हो? सोच्दै थिएँ। एकाएक गाडी माथि उचालिन थालेको थियो, अनि ड्राइभरले हाँस्दै गाडीको गति तेज गरेर पुल तारेको थियो। चलचित्रमा गाडीहरू पानीमा डुबेको दृश्य छायाङ्कन गर्दा यस्तै हाइड्रोलिक प्रविधि अपनाइन्छ र पुललाई तलमाथि गरिन्छ रे। भिडियोले जानकारी दिँदै थियो।

त्यहाँबाट दाहिने लागेपछि हाम्रो बस पुनः अर्को

तलाउको छेउछेउ अगाडि बढ्दै थियो। जलाशयको एकातिर हेर्न लाउँदै भिडियोमा उद्घोषिका बोलेकी थिइन्– “पिटर ज्याक्सनद्वारा निर्देशित सन् २००५ को बहुचर्चित र बक्स अफिस हिट सिनेमा ‘किङकङ’ त तपाईंहरूले हेर्नुभएकै होला। त्यसमा देखाइएको स्कल टापु उः त्यही तलाउको बीचमा ठडाइएको सानो पहाड हो। त्यहाँ जान प्रयोग गरिएको जहाज पनि त्यसैको छेउमा देख्न सक्नुहुन्छ।”

हामी सबैले जहाजको त्यो सानो प्रतिरूप पानीमा हल्लिइरहेको देखेका थियौं। मैले त्यस चलचित्रको दृश्य सम्झेको थिएँ– समुद्रमा बाक्लो तुवाँलोबीच जहाज हिँडेको, आँधीहुरी आएर जहाजभरि पानी पसेको, यात्रुहरू कुदाकुद गरेका, गुरिल्लाले आक्रमण गरेको ... ।

“त्यो सिनेमा छायाङ्कन गर्दा डिजिटल प्रभावद्वारा यही तलाउलाई समुद्र जस्तो देखाइएको थियो। त्यो सानो ढिस्कोलाई पहाड अनि त्यो खेलौना जस्तो जहाजलाई बडेमानको पानीजहाजमा रूपान्तरण गरिएको

थियो। त्यस्तै आश्चर्यजनक प्रभावहरू सिर्जेर निर्माण गरिएको हुनाले त्यो चलचित्रले स्पेसल इफेक्ट विधा अन्तर्गत ओस्कार अवार्ड प्राप्त गरेको थियो। उः त्यो बाटोछेउको गुरिल्लाको पूर्णकदको मूर्ति हेर्नुहोस् !"

हामी सबैले उद्घोषिकाले निर्देश गरेतिर हेरेका थियौँ। त्यहाँ मुख बाएर उभिएको वनमान्छेको बडेमानको मूर्ति थियो। उद्घोषिकाले थप जानकारी दिँदै थिइन्– "त्यो तीस फिट अग्लो छ र त्यसको वजन सात टन छ। त्यति मात्र होइन, एकै छिनपछि त्यो सिनेमाको कङ नामक गुरिल्लासँग हाम्रो साक्षात्कार हुनेछ। नजिस्क्याउनुहोला नि। ऊ रिसाएको बेला परे खतरा हुन सक्छ।"

त्यसपछि हाम्रो बस जङ्गल इलाकातिर लागेको थियो। त्यहाँ ठूलठूला काठका मुढाहरू र कतैकतै कङ्कालहरू पनि देखिएका थिए। एकाएक त्यहाँको झाडीबाट बडेमानको डायनासोर निस्केर सातै लिने गरी गर्जेको थियो र उसले मुखबाट सरर पानी फालेको थियो।

“‘जुरासिक पार्क’ सिनेमाको छायाङ्कन यहीँ भएको रहेछ त्यसो भए,” श्रीमती प्रफुल्लित हुँदै बोलेकी थिइन्। मैले पनि हाँस्दै टाउको हल्लाएको थिएँ। उद्घोषिकाले भिडियोमार्फत दिइरहेको जानकारीबाट अब हामीले धेरै कुरा बुझ्न थालेका थियौँ।

एक ठाउँमा ‘फास्ट एन्ड फ्युरियस’ चलचित्रमा प्रयोग भएका गाडी राखिएका थिए। सिनेमामा एउटाले गाडी घुइँक्याउँदै भाग्ने, अर्काले पछाडिबाट ठोकेर उसको गाडीलाई तीन बल्ड्याङ ख्वाउने अनि कुनै दृश्यमा बम पड्केर गाडी हावामा उडेको देख्दा यी सबै कसरी गरिन्छन् होला भन्ने लाग्थ्यो। त्यहीँ पर्तिर त्यस्तै हाई अक्टेन एक्सन भनिने उत्तेजक दृश्यको छायाङ्कन गर्ने प्रविधि देखाइएको थियो। त्यस्ता गाडी दौड र एक्सनका निम्ति कम्प्युटरद्वारा सञ्चालित रोबोटहरूको प्रयोग गरिँदो रहेछ। त्यसरी पल्टने, उछिट्टिने गाडीहरू सबै कम्प्युटरबाट सञ्चालित हुँदा रहेछन्। हामीले हेर्दाहेर्दै गाडीहरू छमछम गर्दै नाचेको पनि देखाइएको थियो।

हामीलाई बोकेको बस अघि बढ्दै थियो। उनी गाडी नाचेको दृश्य सम्झँदै आनन्दित हुँदै थिइन्। म सोच्दै थिएँ– नयाँनयाँ प्रविधिको प्रयोगले त हो हिजोआजका सिनेमाहरू यति उत्कृष्ट बनेका। त्यसैको अपर्याप्तताले गर्दा हाम्रा चलचित्र हेर्दा कठ्याङ्ग्रिएका जस्ता देखिन्छन्। हुन त यो क्षेत्र हामीकहाँ भर्खर बामे सर्ने अवस्थामा छ।

"आहा, कस्ता राम्रा घरहरू!" एकाएक उनी बोलेको सुनेर मेरो तन्द्रा टुटेको थियो। हाम्रो गाडी सुन्दर घरहरू भएको बस्ती हुँदै गुड्दै थियो। राम्राराम्रा बगैँचा, सफासुग्घर परिवेश देख्दा मलाई बेभर्ली हिल्सको झल्को आएको थियो। त्यो अमेरिकामा प्रसारण भइरहेको टी.भी. सिरियल 'डेस्परेट हाउस-वाइफ' को सेट रहेछ। अमेरिकाभरि नै चर्चित कार्यक्रम भएर होला, त्यसको जानकारी दिने क्रममा उद्घोषिका उज्यालो अनुहार पार्दै निकै उत्तेजित स्वरमा बोलेकी थिइन्। हामीले यसअघि पनि एउटा सहरको दृश्य देखेका थियौँ। कोर्ट हाउस स्क्वायर

भनिने त्यस सेटमा 'क्रसिङ जोर्डन,' 'ब्याक टु द फ्युचर' जस्ता सिनेमाहरूको छायाङ्कन भएको कुरा उनले जनाएकी थिइन्। त्यसैको पल्लो छेउमा हो क्यार, युरोपतिरका जस्ता ठूलठूला खाँबा भएका घरहरू, साँघुरा गल्ली र ढुङ्गे बाटाहरू भएको अर्को सेट पनि हामीले देखेका थियौँ।

बस फेरि एउटा ठूलै तलाउछेउ भएर हिँड्दै थियो। त्यहाँ एउटा डुङ्गा पनि थियो। भिडियोले जानकारी दिँदै थियो– "यो चर्चित सिनेमा ...।" एकाएक पानीमा छप्ल्याङको आवाजले हामी सबै झस्केका थियौँ। त्यता हेर्न नभ्याउँदै एउटा बडेमानको माछ्राले तलाउबाट उफ्रँदै हाम्रो गाडीलाई झम्टेको थियो। ओह, हामी कम्ता त डराएका थिएनौँ! धेरै बेरसम्म बसभरि चीत्कार गुन्जिएको थियो। भिडियोमा जानकारी दिइए अनुसार 'जअ्ज' सिनेमाको छायाङ्कन त्यहीँ भएको रहेछ। त्यस सिनेमामा सार्क नामक ठूलो माछ्राले त्यसरी नै समुद्रमा झम्टीझम्टी मान्छेहरू मारेको दृश्य देखाइएको थियो।

एक ठाउँमा हाम्रो बस घुमाउरो सुरुङभित्र पसेको थियो । 'ममी' फिल्मको छायाङ्कन त्यहीँ भएको रहेछ । त्यहाँ डरलाग्दा दृश्यहरू पनि थिए, तर मैले त्यस सिनेमाका बारेमा केही थाहा नपाएको हुनाले सबै बुझ्न सकेको थिइनँ ।

त्यसपछि बसले हामीलाई सानो स्टुडियोभित्र छिराएको थियो । त्यो भूमिगत रेल स्टेसन जस्तो थियो । भित्र सामान्य उज्यालो थियो । हामी यताउति हेर्दै थियौँ । हठात् गड्याङगुडुङको आवाजसहित प्लेटफर्मका प्लास्टरहरू उक्किन थालेका थिए । हाम्रो गाडी हल्लिएको थियो । हेर्दाहेर्दै अचम्मको आवाजसँगै हामीनजिकैको भुइँ चिरा परेको थियो, अनि ठूलो बाढी आएर जताततै पानी नै पानी भएको थियो । के भएको हो भन्ने हामीले बुझ्नै पाएका थिएनौँ, पल्लो छेउको छानो भाँचिएर गड्याङ्ङ खसेको थियो । हामी सबै डरले कराउनै थालेका थियौँ, एकाएक सबै क्रिया थामिएका थिए र निमेषमै सबै वस्तुहरू यथास्थितिमा फर्केका थिए, उस्तै-दुरुस्तै भएर । ती सबै कुरा मात्र

पन्ध्र सेकेन्डभित्र भएका थिए। त्यो सन् १९८८ मा निर्मित 'अर्थक्वेक' सिनेमाको सेट रहेछ। त्यसमा ८.३ रेक्टर स्केलको भुइँचालो गएको देखाइएको रहेछ।

बसले हामीलाई ठाउँठाउँ घुमाउँदै थियो। म आश्चर्य मान्दै चारैतिर हेर्दै थिएँ र घोरिँदै पनि थिएँ– सिनेमामा दुरुस्तै जस्ता देखिने दृश्यहरू यसरी थरीथरीका वस्तु र प्रविधिहरू प्रयोग गरेर प्रशस्तै स्रोत, श्रम तथा कल्पनाको सम्मिश्रणबाट तयार पार्नुपर्दो रहेछ। ठूलै सिर्जनशीलताको आवश्यकता रहेछ एउटा राम्रो र स्तरीय चलचित्र निर्माण गर्न।

बस फेरि त्यस्तै अर्को स्टुडियो घरभित्र छिरेको थियो। 'किङकङ' को छायाङ्कन त्यहाँ पनि भएको रहेछ। हाम्रो गाडी त्यहाँ पस्नेबित्तिकै गुरिल्लाको गर्जन सुनिएको थियो। केही अगाडि पुग्दा उद्घोषिकाले अघि जानकारी दिए अनुसारको एउटा अजङ्गको गुरिल्ला रिसाएको अनुहार पार्दै उफ्रिरहेको देखेका थियौँ। उद्घोषिकाले हामीलाई सतर्क पार्दै सुस्त

स्वरमा भनेकी थिइन्– "यही हो कङ ।नजिस्क्याउनुहोला है ! आज ऊ औधी रिसाएको छ । यस्तो बेला उसले जे पनि गर्न सक्छ ।"

हाम्रो गाडी अगाडि बढेको थियो, तर किन हो वेग लिन सकेको थिएन । मैले अन्योलमा यताउति हेरेको थिएँ । सबै यात्रु जड भएझैँ देखिन्थे । उनी पनि अलमलिएकी थिइन् । एकाएक हाम्रो गाडी उचालिएको थियो । उद्घोषिका भिडियोमा अत्तालिँदै बोल्दै थिइन्– "लौ न, रिसाएको झोँकमा कङले हाम्रो गाडी उचाल्यो ! अब के हुने हो ?"

उनका कुरा सुनेर हामीहरू झन् डराएका थियौँ । गाडीभरि कोलाहल मच्चिएको थियो । तत्कालै उद्घोषिकाले मरीमरी हाँस्दै भनेकी थिइन्– "मेरा प्यारा दर्शकवृन्द, कृपया नआत्तिनुहोस् । यो त तपाईंहरूका लागि चलचित्र निर्माण प्रविधिको नमुना प्रस्तुत गरिएको हो ।"

हरे, कस्तो आश्चर्य ! यो प्रदर्शनी हो भन्ने थाहा हुँदाहुँदै पनि कस्तो डर लागेको !

सिनेमाका रमाइला दृश्यहरूको सम्झना गर्दागर्दै मैले चिया पकाएर खाई पनि सकेको रहेछु। नाकबाट पानी बगिरहेको थियो। मैले छोरीले राखिदिएको नेप्किनले नाक पुछ्दै छेउको डस्टबिनमा फाल्दै पनि थिएँ। जाडो लाग्न कम भएको थिएन। जाडो भित्रभित्रै गढेझैँ लागिरहेको थियो। म छोरीले राखिदिएको विद्युतीय कम्बलभित्र गुटमुटिएँ। त्यो खास्टो न्यानो त थियो तर कडा भएर सिरक ओढ्दाको जस्तो आनन्द लागेको थिएन। सिरकको मज्जा त अर्कै छ नि ! त्यसै बेला मैले मेरा एक मित्रका अमेरिकावासी काकाको सिरकमोहको कुरा पनि सम्झन पुगेँ।

केही वर्षअघिको कुरो हो। मेरा ती मित्रका छोराले छात्रवृत्ति पाएर अमेरिका टेक्ने भएका थिए। छोराका पोकापन्तुरा कस्दै जाने क्रममा सामान बढी भएझैँ लागेर ती मित्रलाई चिन्ता परेको रहेछ। पढ्न जाने केटालाई चाहिनेजति लुगाफाटा त हालिदिनैपर्‍यो। त्यसमाथि अमेरिकाका आफन्तहरूको सिफारिस अनि परिचितहरूको “यत्ति कोसेली पुर्‍याइदिनुहोस् न” भन्ने

जस्ता आग्रह; सामान धेरै हुने त भयो नै। तोकिएको वजनभन्दा बढी भए त्रिभुवन विमानस्थलमा जहाज कम्पनीले दह्रै रकम तिर्न लाउने हुनाले उनले "केही उपाय छ कि" भनेर मलाई सोधेका थिए।

संयोगले त्यहाँको एक कर्मचारीलाई मैले चिनेको हुँदा मित्रसँगै विमानस्थल गएर कुरो मिलाइदिएको थिएँ। त्यति खेर उनीबाटै थाहा पाएको थिएँ, सिरक कथा। अमेरिकाकै बासिन्दा भइसकेका उनका काकालाई बीस वर्षको अमेरिका-बसाइपछि एकाएक सिरकको न्यानो आनन्दको सम्झना भएछ र उनले "नातिका हात एउटा सिरक पठाइदिनू" भनेर अह्राएका रहेछन्। त्यस बेला मित्रका कुरा सुनेर मलाई केही उदेक लागेको थियो। तर साँच्चै, जाडामा सिरकमा गुटुमुटु भएर सुत्दाको आनन्द नै भिन्दै छ। त्यसलाई यी खास्टाहरूले के बिर्साउन सकुन्!

आनन्दको कुरा सम्झँदा मैले पुन: त्यही युनिभर्सल स्टुडियोको कुरा सम्झेको थिएँ। त्यस दिन हामी बिहानको खाजा खाएर निस्केका थियौँ। बजार हुँदै

अघि बढ्दा मैले गाडीबाटै थुप्रै अट्टालिकाहरू देखेको थिएँ। पल हस्टिङ बिल्डिङ, वेल्स फर्गो बिल्डिङ, कोमेरिका ब्याङ्क र यस्तैयस्तै नाम गरेका अग्लाअग्ला आकाशै छेड्ने गरी ठडिएका घरहरू। सडकका नामहरू पनि अनौठा, उच्चारण गर्न पनि गाह्रो पर्ने खालका थिए। पहिले स्पेन अधीनस्थ इलाका भएकाले ती नामहरू पनि त्यही बोलीका हुन् कि जस्तो लागेको थियो। सान पाड्रो, पासाडेना, ला जिजेरा, सान बार्नारडिनो, अल्भाराडो आदि नाम लेखिएका पाटीहरू ठड्याइएको देखेको थिएँ बाटाबाटामा। झन्डै डेढ घण्टा लागेको थियो विमानस्थलछेउ रहेको हाम्रो होटेलबाट स्टुडियो क्षेत्र पुग्न। स्टुडियोको ढोकानेर ज्वाइँसाहेबले गाडी रोक्दा मैले त्यहाँको नीलो सङ्केतपाटीमा ठूलठूला सेता अक्षरमा देखेको थिएँ– 'युनिभर्सल स्टुडियो हलिउड : द इन्टरटेनमेन्ट सिटी अफ लस एन्जेलस'।

स्टुडियो परिसरभित्र गाडी पार्क गरेर अग्लो सिँढी चढेपछि मैले चारैतिर हेरेको थिएँ। पर्तिरका होचाहोचा डाँडामा छपक्क घरहरू देखिएका थिए, हाम्रा पहाडतिर

सेतो कमेरो पोतिएका घरहरू जस्तै। तर यहाँका घर त धेरै आधुनिक र सुन्दर थिए नि। हामी उभिएको स्टुडियो क्षेत्र पनि डाँडामै थियो। सामुन्ने ऐनैऐना भएको हिल्टन होटेल चुलिएको थियो।

युनिभर्सल स्टुडियोका रमाइला क्षणहरूको कल्पनामा रुमलिँदै जाँदा म कहिले झुपुक्क भएछु थाहै पाइनँ। फेरि आकाशमा उडेर कताकता विचरण गर्दै रहेछु। बाहिर जोडसित कुकुर भुकेको सुनेर झस्केँ। उठेर बाहिर च्याएँ– आमा-छोरी पो आए कि! घडी हेरेँ– एक घण्टा पनि भएको रहेनछ उनीहरू गएको। बजार क्षेत्रसम्मै पुग्नुपर्छ भन्थिन्। अहिल्यै के भ्याउँथे र त्यहाँ पुगेर जँचाईवरी फर्कन!

फेरि कम्बलमा गुटमुटिएर मैले सोच्न थालेँ– अघि सपनामा उडेझैँ उडाएको थियो नि हामीलाई त्यो 'ब्याक टु द फ्युचर' भन्ने खेल हेर्न जाँदा। हरे, कहाँकहाँ पुर्‍याइएको थिएन हामी चार जनालाई एउटा सानो जिप जस्तो खुला गाडीमा बसालेर! निर्दिष्ट कोठाभित्र छिरेपछि मोटो कुइरेले हामीलाई त्यस

गाडीमा बसालेको थियो र पेटी कस्न लाएर सिटनेरको फलामे डन्डी समात्न भनेको थियो। अलिअलि उज्यालोमा मैले सामुन्ने बडेमानको पर्दा देखेको थिएँ। गाडीको मुन्तिर पनि यन्त्रहरू भएझैँ मानेको थिएँ। हामीलाई अह्राउने व्यक्तिले अर्को कोठामा गएर कम्प्युटर चलाउन थालेको थियो। लगत्तै बत्ती निभेको थियो, अनि सुरु भएको थियो हाम्रो अनन्त यात्राको उडान।

त्यसले वेगसित आकाशमा उडाएर निमेषमै पुऱ्याएको थियो तारामण्डलबीच। कति खेर हावामा कावा ख्वाउँदै अग्लाअग्ला पहाडको खोँचबाट अब ठोक्कियो भनेझैँ गरी उडाउँथ्यो। कहिले समुद्रको उर्लँदो छालभित्र डुबाउलाझैँ गर्थ्यो। कहिले आँधीहुरीबीचबाट निकाल्थ्यो। ओह, कस्तो सातो लिएको थियो हामी सबैको! सास रोकिराखेकाले होला, म त अररो भइसकेको थिएँ। छाती पनि दुख्न थालेको थियो। लौ के हुने हो अब भन्ने त्रासमै थिएँ, एकाएक अग्लो घण्टाघरमा लगेर ठोक्काएको थियो त्यो वाहन, अनि टुङ्ग्याएको थियो हाम्रो रोमाञ्चक हवाई यात्रा। उफ! थोरै त

तर्साएको थिएन अन्त्यमा पनि।

बत्ती बलेपछि थाहा पाएको थिएँ– सामुन्नेको पर्दामा सबै दृश्यहरू कुदाएको रहेछ। हामीलाई त त्यही सानो गाडीमा फगत तलमाथि, ओल्टेकोल्टे पारेर छक्याएको रहेछ त्यस्तरी।

हामी त्यसपछि 'ब्याक ड्राफ्ट' हेर्न लाममा बसेका थियौँ। मुख्य प्रदर्शन कक्षमा पुग्नुअघि हामीलाई भिडियोमार्फत त्यो सिनेमा र त्यहाँ देखाइने दृश्यका बारेमा केही जानकारी दिइएको थियो। त्यस फिल्ममा एउटा भवनमा आगो लाग्दा उद्धार कार्यमा खटिएका कर्मचारीहरूको भूमिका निर्वाह गरेका कलाकारहरूले कस्ताकस्ता कष्ट भोग्नुपर्‍यो; के-कस्ता प्रविधि प्रयोग गरेर रोन होवार्डद्वारा निर्देशित सन् १९९१ को त्यो चर्चित सिनेमा तयार पारिएको थियो आदिबारे जानकारी दिइएको थियो। हामी लाममै रहेर त्यो दृश्य देखाइने ठाउँसम्म पुगेका थियौँ। हामी रोकिएलगत्तै सामुन्नेको ठूलो फलामे टावरमा आगो लागेको थियो। हेर्दाहेर्दै त्यो आगो सबैतिर फैलिएको थियो। पूरै परिवेश

तातेझैँ लागेको थियो। साह्रै गर्मी अनुभव भएको थियो। चारैतिर कोलाहल मच्चिएको र थुप्रै मान्छे आत्तिएर कुदेको जस्तो आवाज पनि सुनिएको थियो। के भएको हो भनेर हामी यताउति हेर्दै थियौँ, एक्कासि ठूलो आवाजसहित हामीमाथिको छत खसेको थियो। सिनेमाको चटक हो भन्ने मनमा हुँदाहुँदै पनि हामी सबै तर्सिएका थियौँ। एकै छिनमा हामीले हेर्दाहेर्दै त्यहाँको आगो निभेको थियो, अनि भत्केको छानो पनि आफ्नै ठाउँमा गएर यथास्थानमा अडिएको थियो। उद्घोषकले दिएको जानकारीबाट ट्राइच्टिक्लोरेट रसायन प्रयोग गरेर कृत्रिम आगो उत्पन्न गरिएको रहेछ भन्ने थाहा पाएका थियौँ।

रमिता हेर्दाहेर्दै साँझ पर्न आँटेको थियो। दिउँसोको खाना त हामीले 'जुरासिक पार्क' फिल्मको कार्यक्रम देखाउने ठाउँनेर रहेको रेस्टुरेन्टमा खाएका थियौँ। ओहो, कति भीड थियो त्यस ठाउँमा पनि ! पहिल्यै पैसा तिरेको खाना लिन पनि पौने घण्टाजति नै उभिनुपरेको थियो लाममा। घुम्दाघुम्दा हामीलाई

थकाइ लागेको थियो, तापनि त्यहाँको रमिता हेर्ने लालसा रोक्न सकेका थिएनौँ र पसेका थियौँ स्पेसल इफेक्ट देखाउने भवनतिर ।

त्यहाँ छायाङ्कन र ध्वनिसम्बन्धी थरीथरीका प्रविधिसँग दर्शकहरूलाई परिचित गराइएको थियो । दर्शकहरूलाई नै प्रत्यक्ष कलाकार बनाएर केही दृश्य छायाङ्कन गरिएको थियो र छायाङ्कित दृश्य तत्काल पर्दामा देखाएर प्रविधिको व्याख्या गरिएको थियो । हामीले त्यहाँ सानो आकृतिलाई कसरी ठूलो पारेर देखाइन्छ, कसरी दुई अलगअलग ठाउँमा छायाङ्कन गरिएका व्यक्ति वा दृश्यहरूलाई एकै ठाउँमा मिलाएर सिनेमामा प्रस्तुत गरिन्छ भन्ने थाहा पाएका थियौँ । त्यसै क्रममा हामीले तरबारले हात काट्दाको र रगत निस्कँदाको दृश्य छायाङ्कन गर्ने तरिका पनि देख्न पाएका थियौँ । हामीलाई कोठाको अर्कापट्टि लगेर परेड खेल्दा, मौरी भुनभुनाउँदा, मुक्का प्रहार गर्दा र त्यस्तै थरीथरीका दृश्यमा सुनिने आवाजहरू कसरी रेकर्ड गरिन्छन् भन्ने देखाइएको थियो । त्यस्तै, छायाङ्कन

गरिसकेका दृश्यहरूमा संवाद कसरी भरिन्छ भन्ने प्रविधि पनि दर्शकहरूलाई सहभागी गराएरै देखाइएको थियो ।

अँध्यारो भइसकेको थियो । तर हेर्न थुप्रै थोक बाँकी नै थिए र मैले समयतालिका हेरेको थिएँ– धेरै खेलको समय सकिएको रहेछ । अब अरू नहेर्ने बरु तात्तातो कफी खाने विचारले हामी बाहिर निस्केका थियौँ ।

स्टुडियोको हाता र गाडी राख्ने इलाकाबीचको भागमा युनिभर्सल सिटी वाक भन्ने सानो तर बडो आकर्षक र व्यस्त बजार रहेछ । सोतो परेको साँघुरो सडकका दुवैतिर संसारका नामुद ब्रान्डका पसलहरू, अमेरिकैभरि कहलिएका रेस्टुरेन्ट, नाइट क्लब, सिनेमाघर र अन्य मनोरञ्जन गृहहरू रहेछन् । जतातातै भीड थियो । बाटाको बीचबीचमा नाचगान गर्ने टोलीहरू, नानावली चटक देखाउने जादुगरहरू र सामान बेच्न सजाइएका ससाना पसलहरूले गर्दा हिँड्न निकै गाह्रो भइरहेको थियो । एक ठाउँमा केही फराकिलो भएको थियो बाटो । त्यहाँ स्टेज बनाइएको थियो र एउटो

युवकले छेउमा माइक फिट गर्दै गरेको देखेर मैले अडकल काटेको थिएँ– अब यहाँ कुनै कार्यक्रम सुरु हुनेछ। त्यसै कार्यक्रममा दर्शक आकर्षित गर्न होला, उत्ताउलो पहिरन लाएका दुइटी तरुनी खुट्टामा लामो बाँस गाँसेर निकै अग्लाअग्ला भई त्यही स्टेजवरपर लम्प्याङलम्प्याङ हिँड्दै थिए। तिनीहरू बेलाबेला बटुवाहरूसँग जिस्किँदै पनि थिए। के देखेर हो कुन्नि, तीमध्येकी एउटीले "हाई" भन्दै उनीसँग पनि हात मिलाएकी थिई।

एक ठाउँमा कफीको पसल देखेर हामी छेउ लागेका थियौँ। मैले पसलनेर उभिएर चारैतिर हेरेको थिएँ– चम्किला बत्तीहरूको प्रकाशले झलमल्ल त्यस सडकको रौनक गजबकै थियो। म रल्ल परेर हेरिरहेको थिएँ त्यहाँको रमिता। श्रीमती पनि मेरै छेउमा उभिएर चारैतिर हेर्दै रहिछन्।

"कस्तो जादुनगरी जस्तो है!" उनले आश्चर्य व्यक्त गर्दै भनेकी थिइन्। म त अवाक् थिएँ त्यहाँका रमाइला दृश्य देखेर। केही नबोली उनीतिर हेरेर

मुसुक्क हाँस्दै टाउको हल्लाएर सोचेको थिएँ– दिनभरि डुल्दै हिँड्दा जादु नै त देखियो जताततै।

"ई लिनुहोस् !" छोरीको आवाज सुनेर मैले फर्केर हेरेको थिएँ। उनले हामीलाई कफी ल्याइदिएकी रहिछन्। हामी दुवैले कप समातेका थियौँ, अनि कफी खाँदै हेर्दै थियौँ त्यो आत्मविस्मृत पार्ने खालको परिवेश।

"बुबा !" छोरीले बोलाएको सुनी ओछ्यानबाट उठेर मैले तल चियाएँ। आमा-छोरी दुवै फर्केछन्। डाक्टरले जाँचेर छोरीलाई के भन्यो भन्ने जिज्ञासासाथ म बिस्तारै सिँढीबाट ओर्लें।

# हिमाल त हिमालै हो नि

तात्ताता डुनोटहरू एकपछि अर्को गरी पाक्दै निस्कँदै थिए, स्वचालित यन्त्रबाट। टाउकामा फिर्के टोपी लाएकी एउटी सुन्दरीले चिनीका झोलमा डुबेर निस्केका ती चिल्ला रोटाहरू झिक्दै छेउको भाँडामा मिलाएर राख्दै थिइन्। म चाख मानेर हेर्दै थिएँ त्यसको सम्पूर्ण प्रक्रिया। त्यस्तै टोपी लाएर पल्लो छेउमा उभिएको गोफ्लेले पीठोका डल्लाहरू मेसिनबाट झिक्दै बेलनामा हाल्दै थियो। त्यस अटोमेटिक मेसिनले पीठोलाई बेल्दै बाला जस्तै पारेर फलामका पाताहरूमा धकेल्दै थियो। ती फराकिला पाताहरू उकाली-ओराली गर्दै केही अगाडि पुगेर डुब्दै थिए भकभक उम्लेको तेलमा। अन्त्यमा पाकेर पूर्ण भएका रोटा स्वतः एकपछि अर्को गर्दै खस्दै थिए सामुन्ने चास्नीको भाँडामा।

“चाख्नुहुन्छ ?” सुन्दरीले हँसिलो अनुहार पार्दै मतिर

हेरेर सोधिन् ।

म अलमलिएँ– खाने लोभ त छ तर भर्खरै रगतमा चिनी देखिएको म चिनी नै चिनी भएको परिकार खान अँ भनूँ कि नभनूँ !

"अँ, हामी चार जना छौँ ।" मेरो साटो छोरीले जवाफ दिइन्– "चाख्ने नि बुबा ! सबैलाई एक-एक वटा त्यसै खान दिन्छ । एउटा खाँदा त्यति के बिगारिहाल्छ र !"

हामी डुनोट किन्न भनेर अमेरिकाभरि कहलिएको क्रिस्पी क्रिमी डुनोट पसलमा थियौँ । सुन्दरीले नेप्किनले बेरेर एउटा मतिर तेर्स्याइन् । मैले "धन्यवाद" भन्दै समातेँ देख्दै रहरलाग्दो रोटी । श्रीमती छेवैमा थिइन् । उनले पनि एउटा लिइन् र मलाई पुलुक्क हेरिन् । मैले मुसुमुसु हाँस्दै खाएँ । मुखमा पर्नासाथ मीठो र मगमगाउँदो बास्नादार स्वादको आनन्द जिब्रामा छर्दै त्यो रोटी क्षणमै बिलाएझैँ भयो ।

डुनोट मैले पहिलो पटक तीस वर्षअघि एक

मित्रकहाँ खाएको थिएँ। झट्ट हेर्दा सेलरोटी जस्तो लागेको थियो। त्यस बेला चियासित खाँदा निकै मीठो लागेकाले "कहाँ पाइन्छ" भनेर मित्रलाई सोधेको पनि सम्झन्छु। बालाजुको एउटा बेकरीले भर्खरभर्खर उत्पादन सुरु गरेको रहेछ। हिजोआज काठमाडौँका बजारमा थरीथरी स्वाद भएका ढाँचाढाँचाका डुनोट पाइन्छन्। तर मैले अहिले खाएकाको स्वाद ? साह्रैऽऽ मीठो।

हामी बाहिर निस्केर गाडीमा चढ्न आँटेका थियौँ, "मेरो चस्मा कता गएछ" भन्दै श्रीमतीले सनग्लास खोज्न थालिन्। गाडीभित्र हेरेपछि उनी पसलभित्र पनि छिरिन् र कतै नपाएपछि अन्योलको अनुहारसहित गाडीमा बसिन्।

"मम्मीले आज ल्याउनु नै भएको थिएन कि !" छोरीले शङ्का व्यक्त गरिन्।

"खोइ, ल्याए जस्तो पनि लाग्छ।" उनी अनकनाइन्।

मैले सान्त्वना दिने स्वरमा भनेँ– "हराएकै रहेछ भने पनि पीर नगर। भोलि यहाँ आयौँ भने

पाइहालिन्छ ।"

उनले छक्क परेझैँ मलाई हेरेको देखेर मैले हाँस्दै थपेँ– "हामीले ट्रेइलमा देखेको सूचनापाटी बिर्स्यौं कि क्या हो ?"

उनी घोरिइन् र क्षणमै उज्यालो अनुहार लाउँदै भनिन्– "ए, हो त है !"

हाम्रा कुराले खुलदुली भएर होला, गाडीमा चढेपछि छोरीले सोधिन्– "के भएको थियो र बुबा ?"

ज्वाइँसाहेबले गाडी हिँडाउनुभयो। म भने पूर्ण विवरण सुनाउन थालेँ।

सधैँझैँ हामी त्यस दिन पनि बिहान खाजा खाईवरी नौ बजेतिर मर्निङ वाकमा निस्केका थियौँ। हामी हिँड्ने गरेको बाटाको गल्छेँडो आइपुग्न आधाआधीजसो बाँकी नै थियो। श्रीमतीले त्यस दिन पनि एकाएक एउटा नयाँ प्रस्ताव राखेकी थिइन्– "आज त्यताबाट फन्को मारेर छिरौँ न। त्यो गजुर जस्तो के रै'छ, हेरौँ पनि ।"

हामी पारितिर देखिने कम्युनिटीका निर्जन बाटाहरू छिचोल्दै गजुर भएतिर लागेका थियौँ। एउटा चौबाटो तरेपछि अर्को कम्युनिटी देखिएको थियो, बडो मनमोहक। हुन त यहाँ घर भएका सबैजसो इलाकाहरूको परिवेश सुन्दर पारिएको हुन्छ, तर त्यति बेला हामीले देखेका ससाना घरहरू र तिनको हातावरिपरिको बनोट नै अलि बेग्लै प्रकारको थियो। यस इलाकामा पस्दादेखि नै मलाई पूरै वातावरणमा गहिरो शान्ति र गम्भीर सौम्यता छरिएझैँ महसुस भएको थियो। त्यहाँ रहेको ढुङ्गे पाटी पढेर त्यो ज्येष्ठ नागरिकहरूको बस्ती रहेछ भन्ने थाहा पाएका थियौँ। यहाँ ठाउँठाउँमा वृद्धहरूलाई थरीथरीका सुविधाहरू प्रदान गरिएको देखिन्थ्यो।

यतातिर हाम्रा जस्तो संयुक्त परिवारमा बस्ने चलन रहेनछ। बालिग उमेरका छोराछोरीहरू छुट्टै बसेर आफैँ गर्ने-खाने गर्दा रहेछन्। त्यसैले यहाँका मान्छेहरूले बुढेसकालमा एकलासे जीवन काट्नुपर्छ, वृद्धावस्था यहाँ बडो कष्टकर हुन्छ भन्ने जस्ता कुराहरू सुनेको

थिएँ। तर यस सम्बन्धमा मलाई धेरै जानकारी नभएकाले बढी केही भनिहाल्न सक्तिनँ। हाम्रो समाज भने परापूर्व कालदेखि नै संयुक्त परिवारको ढाँचामा विकसित भइआएको छ। तर अहिलेको अवस्थामा हेर्दा हाम्रा परिवारका सदस्यहरूले त्यसबाट हुने लाभभन्दा नकारात्मक परिणाम नै बढी ब्यहोरिरहेका छन् जस्तो मलाई लाग्छ। त्यस संरचनाको आडमा हुर्केका परमुखापेक्षी सन्तान, दिनहुँजसोको पारिवारिक अन्तर्कलह अनि त्यसबाट उत्पन्न अशान्तिले हाम्रा धेरै परिवारहरू गाँजिएका छन् र त्यसैका कारण हामीहरूको व्यक्तिगत प्रगतिमा अवरोध पुगिरहेको छ भन्ने पनि लाग्छ। हुन त सबै परिपाटीका आफ्नै राम्रा-नराम्रा पाटाहरू हुन्छन्। यी विदेशीहरूले पनि हाम्रा तिर आएर "आहा, तपाईंहरूको त कस्तो राम्रो, परिवारका सबै सदस्यहरू एकसाथ बसेका" भनेको पनि सुनेको छु।

जति अघि बढ्दै थियौँ, हामीले हेर्ने भनेको त्यो गजुर त्यति नै टाढिँदै गएझैँ लागिरहेको थियो। त्यो गिर्जाघर होला भन्ने लख काटेर हामी अगाडि नगई त्यहीँबाट

देब्रे लागेका थियौँ। तीन-चार मिनेटजति अघि बढेर फेरि देब्रे मोडिँदा तारबार गरेको ठूलै फाँट देखिएको थियो।

"ए, यहाँ त गाईगोठ पो रै'छ!" उनी केही उत्तेजित हुँदै बोलेकी थिइन्।

त्यो समथर हरियो चौरको एक छेउमा एउटा छाप्रो थियो। त्यसैको छेउमा बाक्ला पात भएको एउटा रूखवरपर चार वटा गाईहरू चरिरहेका थिए। त्यहाँको दृश्य हेर्दाहेर्दै मेरो शरीर एकाएक न्यानो भएको थियो, आफ्नै गाउँमा छु जस्तो आनन्दको अनुभूतिले सायद। केही नजिक पुग्दा तारे गाईले हामीतिर हेरेर ब्वाँऽऽऽ गरेकी थिइन्। उनको आवाज सुनेर म एकै छिन आत्मविस्मृत भएको थिएँ। श्रीमती मतिर हेर्दै मुसुक्क हाँसेकी थिइन्। मैले पनि हाँसेर सुखद आश्चर्य जनाएको थिएँ।

पेटीछेउ राखिएका दुई-तीन वटा गाडी छिचोलेर हाम्रो गन्तव्यको बाटामा छिर्न लाग्दा नै हामीले देखेका थियौँ सेतो कागजमा कम्प्युटर टाइप गरेर

बारमा झुन्ड्याइएको त्यो सूचना। के रहेछ भनेर हामी दुवैले पढेका थियौँ– 'हिजो साइकल दौड प्रतियोगिता भएका बेला दिउँसो एक बजेतिर यही बाटामा मैले एउटा सनग्लास फेला पारेको छु। कृपया सम्बन्धित महानुभावले आफ्नो चस्मा लिन चिनारीसहित निम्न ठेगानामा सम्पर्क राख्नुहोला ... ।' सूचकले पुछारमा आफ्नो नाम, ठेगाना र सम्पर्क फोन नम्बर पनि उल्लेख गरेको थियो। श्रीमतीले फेरि यहाँका मानिसको इमानदारीका कुरा झिकेकी थिइन्। म भने एकोहोरिएर हिँड्दै थिएँ।

"ल, यहाँ पनि पो राखेको रै'छ!" उनको आश्चर्यमिश्रित बोली सुनेर मैले यताउति हेरेको थिएँ। पानीले नबिगारोस् भनेर त्यो सूचना उसले प्लास्टिकले बेरेर अर्को खाँबामा पनि झुन्ड्याएको रहेछ।

"यस्तो तकलिफ गरीगरी पनि ... ।" अमेरिकीहरूको व्यवहारबाट प्रभावित भएर उनी आफ्नो विचार पोख्दै थिइन्।

मलाई भने औडाहा हुँदै थियो भित्रभित्रै र स्मृतिमा

आएको थियो आफ्नै घरको कथा। बेलाबखत बाहिर पानी चाहिन्छ भनेर मैले घरपछाडि एउटा धारा जडान गरेको थिएँ। एक दिन बिहान दूध लिएर आउँदा गाडीले छ्यापेर हिलाम्मे पारेको लुगा पखाल्छु भनेर धारा खोल्न गएको त, हरे! टुटी नै थिएन। कसैले पाइपैसहित उखेलेर लगेको रहेछ त्यो पित्तलको टुटी। बुझ्दै जाँदा केही दिनअघि छिमेकीको धाराको मिटर नै चोरेर लगेको पनि थाहा पाएको थिएँ। यस्ता घटना हामीकहाँ भई नै रहन्छन्। मैले यहाँका घरमा हामीतिर जस्तो झ्यालमा ग्रील लाएको वा कम्पाउन्डमा अग्लाअग्ला पर्खाल लाएको देखेको थिइनँ। कतैकतै बाटोछेउका घरहरूमा बाहिरै बिजुलीका चिमहरू देख्थेँ। खुलामै यत्रतत्र राखिएका अन्य दामी सामानहरू पनि सुरक्षित नै देख्दा मनमा लाग्थ्यो– विपन्नताले नै त होला, हामीलाई त्यस्ता ससाना अपराध गर्न पनि उद्यत तुल्याएको!

म सोच्दै थिएँ– त्यहीं, प्लास्टिकले बेरेको सूचना देखेको ठाउँनेरै हामीले मुखामुख गर्दा त हो एउटाले

ह्वाङह्वाङ स्वरमा हामीलाई “हाई” भनेर सम्बोधन गरेको। विचित्रको आवाज सुनेर हामी दुवैले एकैसाथ फर्केर हेरेका थियौँ। भीमकाय शरीरको कुइरे हामीतिर हात हल्लाउँदै अगाडि बढ्दै थियो।

“कत्रो हो!” ऊ केही अगाडि पुगेपछि आश्चर्यसाथ हेर्दै उनले भनेकी थिइन्।

हामीले बाटामा हिँड्दा धेरैजसो अमेरिकीहरू महिला हुन् वा पुरुष, दुवै थरीलाई हृष्टपुष्ट र फुर्तिला देख्थ्यौँ। उनीहरूको शारीरिक बनोट नै हामीहरूको भन्दा ठूलो र अग्लो थियो। हामीले पौराणिक ग्रन्थहरूमा पढेका भीमसरह काँठीका मान्छेहरू यहाँ जताततै देखिन्थे। यहाँ मोटे वा मोटी भन्नैपर्ने खालका मानिसहरू उल्लेख्य सङ्ख्यामा देख्दा मलाई हाम्रा तिनै ग्रन्थका हिडिम्बा र घटोत्कच जस्ता चरित्रहरूको सम्झना हुन्थ्यो। अहिले हामीले देखेको मोटे किङकङभन्दा पनि बडेमानको थियो। ऊ ठमठम गर्दै फुर्तिलो चालमा हिँड्दै थियो। हुन त बजारतिर हिँड्दा मोटा आइमाईहरूलाई पनि हामीले फुर्तिलै चालमा हिँडेका

देख्थ्यौं। उनीहरूमा हाम्रा तिरका मोटा वा मोटीहरूमा हुने जस्तो लघुताभासको मात्रा पनि मैले ठ्याम्मै पाएको थिइनँ।

एक दिन बजार जाँदा डिपार्टमेन्टल स्टोरबाहिरको बेन्चमा एउटा मोटेलाई मैले किताब पढ्दै गरेको देखेको थिएँ। ऊ त्यसमा अटाएको थिएन। उसको पुट्ठाको धेरै भाग बाहिर झुन्डिएको थियो। निस्कने बेला जिज्ञासावश मैले पुनः ऊ भएतिर हेरेको थिएँ। ऊ बेन्चको आड लाएर उभिएको थियो र यताउति हेर्दै थियो। म आश्चर्यचकित भएर हेरेको हेर्‍यै भएको थिएँ, अजङ्गको त्यस मनुवालाई। मैले तत्काल अडकलेको थिएँ– महाभारतमा वर्णित भीम र हिडिम्बाका छोरा भनिने घटोत्कच यस्तैयस्तै त थिए होलान्। ऊ छेवैमा राखेको टचाक्टर जस्तो गाडीमा चढ्ने प्रयास गर्दै थियो। मैले केही सहयोग गर्न सक्छु कि भनेर हातका सामान भुइँमा राख्दै थिएँ, तर त्यतिन्जेल ऊ गाडीमा चढिसकेको थियो र हेर्दाहेर्दै सरर आफ्नो वाहन हाँकेर गएको थियो। मैले उभिएर एकै छिन

विस्फारित नेत्रले हेरेको थिएँ, त्यो अनौठो स्वावलम्बी प्राणी गएतिर ।

घर पुगेपछि मैले ज्वाइँसाहेबसित अमेरिकाका मोटा मान्छेहरूबारे चर्चा गरेको थिएँ । मान्छे मोटाउँदै जाने यहाँको ठूलो समस्या रहेछ । यहाँका पन्ध्र-बीस प्रतिशतजति मान्छेहरू ओबेसिटी भनिने मोटाउने रोगबाट ग्रस्त रहेछन् । उहाँका अनुसार यहाँ मासु खान पालिने पशुपक्षीलाई द्रुत शारीरिक विकास गराएर मोटाघाटा पार्न हार्मोन इन्जेक्सन दिइन्छ । त्यसैले यहाँका त्यस्ता गाईगोरुहरू एकुन्टा ससाना हात्तीजत्रै हुन्छन् रे । भनिन्छ, त्यही मासु खाँदा त्यसमा रहेको हार्मोनको असरले मान्छेमा पनि मोटाउने रोग लागेको हो ।

“यहाँ सस्तोमा गाडी किन्न पाइन्छ बुबा !” एक ठाउँमा गाडीको थुप्रो भएतिर देखाउँदै छोरीले भनिन् । त्यो कार फर लेस नामको पसल रहेछ । त्यसको परिसरमा थुप्रै चम्किला गाडीहरू सजाइएका थिए र प्रत्येकमा ठूलठूला अक्षरले मूल्य लेखिएका कागजका

पाटीहरू पनि थिए।

"कति सस्तोमा गाडी पाइँदो रै'छ है यहाँ!" मूल्य देखेर मेरी श्रीमती छक्क परेकी थिइन्।

त्यहाँ टोयोटा, होन्डा, बेन्ज, सेभ्रोलेट, फोर्ड सबै ब्रान्डका गाडीहरू थिए। धेरैको मूल्य ६९९९ डलर लेखिएको थियो। यहाँका गाडीहरू सेकेन्ड-ह्यान्ड भने पनि त्यति पुराना हुँदा रहेनछन् र उल्लिखित मूल्य सस्तो नै मानिँदो रहेछ। केही रैथाने नेपालीहरूसँग कुरा हुँदा दैनिक मजदुरी गर्नेले पनि यताउति काम गरेर महिनाको दुई हजार डलर त कमाउँछन् भन्ने हामीले थाहा पाएका थियौँ। त्यति आम्दानीका आधारमा किस्ताबन्दीमा पाइने ती सवारी साधन किन्न गाह्रो पर्ने रहेनछ। पेट्रोल पनि यहाँ सस्तै लागेको थियो। ग्यालेनमा बेचिने त्यस इन्धनको दर लिटरमा हिसाब गर्दा सत्तरी सेन्टस् पर्दो रहेछ। अर्थात् सत्तरी पैसा! अनि को हिँडोस् त बाटामा? किन पर्‍यो र हिँड्न ?

हाम्रो गाडी पचास माइलको वेगमा कुद्दै थियो।

बाटामा देखिने दृश्यहरू भने त्यही गतिमा सरर विपरीत दिशातर्फ बग्दै थिए। तर मेरो मन आफ्नै सोचमा रुमलिँदै थियो। म सम्झँदै थिएँ– मेरो टोलको एक पसलेकी छोरी के कसरी हो कुन्नि अमेरिका पुगेकी रहिछन्। छ महिनाजति भएको रहेछ। मैले त्यस बेला पसलेसँग उनकी छोरी अमेरिकामा के गर्छिन्, कसरी पुगिन् आदिबारे खोजीनिधी गरेको थिइनँ। धेरैजसोका केटाकेटी हिजोआज अमेरिका वा अस्ट्रेलिया गएको सुनेको हुँदा त्यसतर्फ मैले सायद गहिरिएर सोचेको थिइनँ। तर सियाटलमा एक मित्रको घरमा भएको जमघटमा भेटेका अमेरिकाका नेपाली बन्धुहरूसँगको कुराकानी सुनेर भने म अलि अचम्ममा परेको थिएँ।

तीमध्येका एकले भनेका थिए– “नेपालमा त अब तन्नेरीहरू कोही बाँकी रहँदैनन् कि क्या हो, हँ?”

“किन र?” मेरो सोधनीमा उनले थपेका थिए– “सक्नेजति पढ्ने भनेर अमेरिका, अस्ट्रेलियातिर हान्निन्छन् रे। अरू पैसा कमाउन मलेसिया, अरब वा कोरियातिर

लाग्छन् रे। होइन र?" कुरा सकेर उनले मुखमा सामान्य हाँसोसहित प्रतिक्रिया जान्न खोजेझैं मतिर हेरेका थिए। उनको बोली र हेराइ दुवैमा केही व्यङ्ग्य मिसिएझैं पनि मैले अनुभव गरेको थिएँ। बोलिहाल्न उचित होला-नहोला सोच्दै म उनीतिर हेरेर हाँसेको थिएँ।

त्यसै बेला बोलीचालीमा विनोदी मानिने मेरा ती घरपटी मित्रले आफ्नो विचार पोखेका थिए– "म सुरुमा यहाँ पढ्न आएर काम गर्न थाल्दा बेलाबेला मुना-मदनमा महाकविले ल्हासा जाने मदनलाई नजान अनुरोध गर्दै मुनाका मुखबाट व्यक्त गरेका मार्मिक पङ्क्तिहरू सम्झन्थेँ– हातका मैला सुनका थैला, के गर्नु धनले? साग र सिस्नु खाएको बेस आनन्दी मनले ...। तर अहिले त नेपालमा सम्पूर्ण समीकरण नै फेरिएको रहेछ। आजका नेपाली स्वास्नीहरूले आफ्ना गरगहनासमेत बन्धकी राखेर लोग्नेलाई वैदेशिक रोजगारमा जान दबाब दिँदा रहेछन्। जान नचाहने वा प्रक्रिया मिलाउन नसक्नेलाई नामर्द पनि भन्दा

रहेछन् रे। लौ हेर्नुहोस् त!" उनले एक पटक सरर सबैका अनुहारमा हेरेका थिए र हाँस्दै कुरा टुङ्ग्याएका थिए– "अब त मुना-मदन नै नयाँ किसिमले लेख्नुपर्ने भयो। होइन, भन्नुस् त बन्धु?" अनि उनले एकटक मतिर हेरेका थिए।

म अलमलिएर सोच्दै थिएँ। त्यत्तिकैमा मेरो छेउमा बसेर नानी खेलाइरहेका एक मित्रले अङ्ग्रेजीमिश्रित नेपालीमा बोलेका थिए– "त्यति मात्र होइन। अहिले त नेपालका केटीहरूसमेत जुनसुकै तरिकाबाट भए पनि अमेरिका आउने प्रयास गर्दा रहेछन्। अलि अस्ति मेरी श्रीमतीसँग सल्लाह माग्न भनेर उनकै गाउँतिरकी एउटी केटी आएकी थिइन्। भर्खरकी थिइन् देख्नमा पनि। बुझ्दा थाहा पाएका थियौँ– उनले अमेरिका आउने दाउमा एउटा डी.भी. परेको केटोसित बिहे रचिछन् र यहाँ आएलगत्तै पारपाचुके लिन चाहेर त्यसका निम्ति के गर्नुपर्छ भनेर हामीलाई सोध्न आएकी रहिछन्। उनले अब स्वतन्त्र जीवन जिउने रे। हेर्नुस् त!"

"ए हो र ?" उनका कुरामा मेरा मित्रले आश्चर्य व्यक्त गरेका थिए। मलाई पनि कस्तोकस्तो लागेको थियो। तर म बोल्न नपाउँदै ती मित्रले नै थपेका थिए– "यस्ता घटना त कति छन् कति रे हिजोआज नेपालमा।"

हाम्रा धेरै युवाहरू बाहिर पढ्न जाने धुनमा छन् भन्ने त थाहा थियो। वैदेशिक रोजगारमा जानेहरूको अन्तर्वार्ता छ रे भन्ने ठाउँमा पनि ठूलै घुइँचो देख्थेँ। तर स्थिति त्यस्तोसम्म पुगिसकेको छ भन्ने अडकल आफूलाई लेश मात्र पनि नभएको हुँदा त्यहाँ गरिएका टिप्पणी सुनेर म हक्क न बक्क भएको थिएँ।

ती बूढाले आफ्नै घरमा पसल राखेका थिए। बारीको ताजा तरकारी पाइन्छ भनेर म बेलाबेला त्यहाँ किनमेल गर्न जान्थेँ। मेरी छोरी अमेरिकामा छिन् भन्ने थाहा पाएर उनले मलाई देखेपछि त्यताका कुरा झिक्थे र केही जिज्ञासाहरू पनि राख्थे। एक दिन कुरैकुरामा उनले "मेरी छोरीले त्यहाँ गाडी किनी रे" भनेर प्रसन्नता व्यक्त गरेका थिए। हुन पनि नेपालमा

कसैले गाडी किनेर चढ्नु भनेको ठूलै हैसियतको कुरो हो; सामान्य मान्छेले सोच्न सक्ने कुरो होइन पनि। त्यस्तोमा छोरीले गाडी किनेको थाहा पाउनु एउटा आम नेपाली बाबुका लागि खुसीको मात्र नभई गौरव गर्ने कुरो पनि हो। तर मैले बुझेसम्म यहाँ गाडी नभए जागिर खान पनि पाइँदैन रे। अन्तर्वार्तामा गाडी छैन भन्ने थाहा पाए 'यो समयमा अफिस आउन सक्दैन' भन्ने मानेर जागिरै दिँदैनन् रे। जे किन्न पनि परै पुग्नुपर्दो रहेछ। सवारी साधन नभई त यहाँ डेग चल्नै नसकिने। समग्रमा हेर्दा यहाँ गाडी किन्नु भनेको हामीतिर मर्निङ वाक गर्नेले कपडाको जुत्ता किनेझैँ लाग्यो मलाई, बाध्यात्मक।

मैले थाहा पाए अनुसार यहाँ पढ्न, गाडी किन्न, घर किन्न वा जुनसुकै कामका लागि पनि ब्याङ्कले सहजै ऋण दिने रहेछ– सरल किस्ता र नरम ब्याजदरमा। त्यसैले यहाँ जो पनि ऋण लिएरै चलेका हुन्छन् रे। त्यसैमा बाँधिन्छन् रे वर्षौंवर्ष, दशकौंदशक, अनि त्यस्तैत्यस्तै यतै बस्ने ...।

"यता कता जाने?" छोरीको प्रश्नले सोचाइको तन्द्रा टुट्यो र मैले यताउति हेरेँ। ज्वाइँसाहेबले पूरै फन्को मारेर गाडी एउटा कारखाना परिसरमा छिराउँदै हुनुहुन्थ्यो।

डुनोटको पसलबाट निस्केका बेलादेखि नै रोटी बाँडेको कुराले मलाई कुतकुत्याइरहेको थियो र अलि अघि मैले उहाँसामु जिज्ञासा राखेको थिएँ– "त्यसरी दिनभरि नै बाँड्छ होला र?"

जवाफमा उहाँबाट थाहा पाएको थिएँ– त्यो चौबीसै घण्टा खुला रहने पसलमा दिनको तीन बाह्रान रोटी पाक्दा रहेछन्। बेलुकी सात बजे पाक्ने बेला आएका ग्राहकलाई पसलले एकुन्टा सित्तैँमा खान दिँदो रहेछ। बिक्री प्रवर्धन नीति होला नि! त्यसै बेला मैले रोटी उत्पादन विधि देखेर आनन्द लागेको कुरा उल्लेख गर्दा उहाँले हामीलाई अर्को ठाउँमा अझ नौलो प्रक्रिया देखाउने जानकारी दिनुभएको थियो र त्यतै लैजान गाडी हाँक्नुभएको थियो।

एक ठाउँमा 'धुलाइ यता' लेखिएको चिह्न भएतिर

गाडी मोड्दै उहाँले भन्नुभयो– “यहीं हो हामीले नौलो प्रक्रिया हेर्ने भनेको। इन्टरनेटमा पढेको थिएँ, यहाँ कम्प्युटरको प्रयोगद्वारा गाडी धुलाइ गरिन्छ रे। गाडी पनि फोहोर भएको छ। हेरौँ न कस्तो गर्दो रहेछ।”

टाई लाएको कुइरेले हामीलाई देखेर दुवै हातको इसाराले दाहिने-देब्रे देखाउँदै गाडीलाई अगाडि ल्याउन अह्रायो र एक ठाउँमा पुगेपछि रोक्न लाएर “के” भनेझैँ गऱ्यो।

“सुनामी प्लिज !” ज्वाइँसाहेबले झ्यालबाट आफ्नो क्रेडिट कार्ड दिनुभयो।

“सुनामी भनेको त्यही समुद्री आँधी ?” मैले जिज्ञासा राखेँ।

उहाँले हाँस्दै भन्नुभयो– “ज्यू, यिनीहरूले धुलाइको नामै त्यस्तो राखेका छन्।”

कुइरेले मेसिनमा घोटेर लाग्ने शुल्क कट्टा गरेपछि कार्ड फर्काउँदै हामीलाई झ्याल बन्द गर्न लायो र

आफू कम्प्युटर चलाउन गयो। हाम्रो गाडी स्वचालित रूपले अगाडि बढ्न थाल्यो। क्षणमै केले हो कुन्नि, गाडीमा वारुण यन्त्रले झैँ पानीको मुस्लो फाल्यो– छररर। के हुँदै छ भन्ने हामीले बुझ्नै पाएका थिएनौँ, एक्कासि अन्धकार भयो। बाहिर हेर्दा गाडीको चारैतिर सेतो लेदो बग्दै थियो। साबुन हो कि रसायन हो भनेर नियाल्दै थिएँ, एकाएक अनौठो किसिमको आवाज आयो र चारैतिरबाट बडेमानका बुरुसहरू आएर फननन घुम्दै गाडीलाई घोट्न थाले। फेरि अन्धकार भयो। सामुन्नेको ऐना पूरै ढाक्ने गरी एउटा त्रिपाल गम्रङ्ङ खस्यो र हल्लिन थाल्यो। हाम्रो गाडी सुस्तसुस्त अगाडि बढ्दै थियो। हामी आश्चर्यसाथ एक-अर्कालाई हेर्दै थियौँ। हठात् ठूलै आवाजसाथ आँधीबेहरी आएझैँ भयो, अनि बाढी आयो। मैले लौ भिजिने पो हो कि भनेर सोच्नसम्म पाएको थिइनँ, पानी थामियो र एकाएक ठूलै हौँ-हौँको आवाजसहित हावा चल्यो अनि क्षणमै न्यानो भयो। हेर्दाहेर्दै हावाले सुकाएर चिल्लो पारेको हाम्रो गाडी बाहिर निस्क्यो। मैले घडी हेरेँ– यो सबै क्रियामा छ मिनेट मात्रै

लागेछ ।

सबैले गाडी नियाल्यौँ– कतै पानीको सामान्य छिटा अथवा त्यसको दाग पनि थिएन । गाडी ऐना जस्तै टल्किरहेको थियो । हामी सबै दङ्ग पर्‍यौँ ।



अमेरिकामा हामी दुईको समय बिताउने प्रमुख माध्यम तीन वटा थिए । पहिलो– छोरी-ज्वाइँसित घुम्न जानु, दोस्रो– हिँडाइका नाममा बरालिनु र तेस्रो– घरमा बसेर टेलिभिजन हेर्नु । टेलिभिजनमा दिउँसो प्रसारण हुने चित्रकलाको एउटा कार्यक्रमले भने हामी दुवैलाई निकै प्रभावित पारेको थियो ।

बब रोस नाम गरेका कलाकारले त्यस कार्यक्रममा पहाड, नदीनाला, जङ्गल जस्ता प्राकृतिक दृश्य चित्रण गर्थे । उनले क्यानभासमा बुरुस चलाएर दर्शकसँग गफ गर्दै आधा घण्टाभित्र यति सजिलोसित सुन्दर र जीवन्त चित्र कोर्थे, हामी मन्त्रमुग्ध भई हेरेका हेर्‍यै हुन्थ्यौँ । उनीद्वारा चित्रित ती दृश्यहरू मलाई कहिलेकहिले

वास्तविकभन्दा पनि सुन्दर लाग्थे। धेरै पहिले चित्र कोर्ने सौख ममा पनि पलाएको थियो र एकाध वर्ष केही समय खर्चेको पनि थिएँ, त्यस विधामा। बबले सहज किसिमले क्यानभासमा यत्रतत्र चलाएका तूलिका र त्यसबाट निमेषमै बनेका जीवन्त विम्बहरू देख्दा म आश्चर्यचकित हुन्थेँ। बुरुसलाई क्यानभासमा छ्यापछ्याप-छ्यापछ्याप पार्दै घोचेर कोरेका रेखाहरूले उनी मुसुक्क हाँसी नसिद्ध्याउँदै सुन्दर सल्लाको रूखको आकार लिएका देख्दा मलाई हुनसम्मको छटपटी हुन्थ्यो र पछुतो पनि लाग्थ्यो। सोच्थेँ– मैले बुरुस समात्न थालेका बेला यिनको प्रस्तुति देख्न पाएको भए मेरो सौख त्यसै मरेर जाँदैन थियो कि !

ती महान् कलाकारको चित्रकारिताबाटै मैले थाहा पाएको थिएँ– एउटै बोटका पातमा पनि दुई-तीन थरीका रङ्ग हुन्छन्। त्यही कार्यक्रम हेरेपछि मैले बाटो हिँड्दा रूख, बोट-बिरुवाहरूलाई नियालेर हेर्न थालेको थिएँ र देख्न थालेको थिएँ त्यहाँ भएका मिश्रित रङ्गहरू र बुझ्न थालेको थिएँ तीभित्र निहित

सुन्दरता। कुनैकुनै रूखमा त प्रस्टै मुखरित हुन्थे पातका थरीथरीका रूप। बेलाबेला त्यस्ता रूख देखे मेरी सहयात्रीले मलाई देखाउँदै भन्थिन्– "उः हेर्नुहोस्, बब रोसका पातहरू !"

एक दिन हामी मर्निङ वाकका निम्ति मूल सडकतिर लागेका थियौँ। उज्यालो दिन थियो। बाटाका छेउछेउ लहरै उभिएका बोटका पातहरू हावाका तालमा फिरफिर-फिरफिर गर्दै थिए। बिहानको मध्यम घाम परेर बेलाबेला झिलिकझिलिक गर्दै टल्कने ती पत्रहरूले हामीलाई एकाएक तिनै दिवङ्गत महान् चित्रकारको सम्झना गराएका थिए। हामी प्रकृतिको त्यो मनोरम छटा नियाल्दै हिँड्दै थियौँ।

एक ठाउँमा पेटीकै छेउको चौरमा सडकतिर फर्काएर नीलो रङ्गको लामो फलामे मेच देखेर हामी रोकिएका थियौँ। एक छिन हामी अलमलिएका पनि थियौँ। यस्तो व्यस्त सडकनेर मान्छे बसोस् नै भनेझैँ गरी मेच किन राखिएको होला ! अन्योलकै अवस्थामा मुखामुख गर्दै त्यसमा बसेर हामीले चारैतिर हेरेका थियौँ।

आहा, कति सुन्दर ! सामुन्ने हिउँले ढाकिएको माउन्ट रेइनियर पूरै देखिएको थियो, अनावृत्त, मनोहर ।

"कस्तो राम्रो ! यहाँ बसेर मान्छेले आनन्द लिऊन् भनेर राखेको रै'छ नि यो मेच !" उनले खुसी व्यक्त गरेकी थिइन्, अनि लगत्तै थपेकी थिइन्– "हाम्रो काठमाडौँबाट पनि कस्तो राम्रो देखिन्छ हिमाल ! तर कतै यसो बसेर रमाइलो हेरौँ न भने उपाय छैन । बरु फोहोरैफोहोर छ जताततै ।"

हो त, त्यो हिउँको थुम्कोलाई हेर्दै मैले पनि सम्झेको थिएँ– काठमाडौँमा जताबाट हेरे पनि देखिन्छ उत्तरभरिको क्षितिजलाई सेताम्मे पारेर चम्किरहेको सुन्दर हिमाल । जाडोयाममा आकाश उघ्रेका दिन देखिने हिमालको सुन्दरताको त झन् के बयान गर्नु ! सम्झँदै मन पुलकित हुन्छ । मैले त्यो हिमाच्छादित ज्वालामुखी हेर्दाहेर्दै एक दिन त्यस्तै बेन्चमा बसेर देखेको दृश्य सम्झेको थिएँ ।

त्यस दिन म एक्लै हिँड्दै थिएँ । दिन त्यस्तै सफा र उघ्रिएको थियो । एक ठाउँमा 'पार्क यतातिर'

लेखेको काँड अङ्कित पाटी देखेर हेरूँ न यहाँको पार्क भनेर त्यतै डोऱ्याएको थिएँ मैले आफ्ना पाइलाहरू। दुई-तीन मिनेट हिँडेपछि फलामे जालीले बारिएको रेइनियर भिस्टा कम्युनिटी पार्क नामक बडेमानको चौर देखिएको थियो र मैले चारैतिर आँखा डुलाएको थिएँ। हाम्रो टुँडिखेलजत्रै रहेछ। त्यो चौर क्षेत्रफलमा मात्र उत्रै थियो, सुन्दरतामा त दाँज्न मिल्दैन। त्यो मानवनिर्मित चौर सन् १९७० तिर बनेको रहेछ। त्यस बेला त्यहाँ सरसफाइ चल्दै थियो; पर मेसिनले घाँस काट्दै थियो। हाम्रो टुँडिखेल त प्राकृतिक हो। हामीले त्यसैले होला, त्यसलाई छोडेका छौँ प्रकृतिकै भरोसामा। अमेरिकी पार्कको सुन्दरता नियाल्दै सोचेको थिएँ– अहिल्यै किन आत्तिनु र? तत्काल त थुप्रै थोक गर्न बाँकी छ। आउला नि सहरको मुटुमा अवस्थित हाम्रो त्यस चौरको पनि पालो एक दिन।

त्यस उद्यानको दाहिनेतिरको चौरमा स्कुले केटाहरू फुटबल खेल्दै थिए। त्यसैको पल्लोपट्टिको चौरमा केही केटीहरूलाई तिनका कोचले पेनाल्टी हान्न

सिकाइरहेका थिए। त्यो देखेर मैले सोचेको थिएँ– अमेरिकामा फुटबल खेल निकै लोकप्रिय छ। तर अमेरिकन फुटबल भनिने त्यस खेलमा भकुन्डो खुट्टाले नभई हातले खेलिन्छ। संसारभरि खेलिने फुटबल खेललाई यहाँ सकर भनिन्छ। अमेरिकाले त्यो खेल खेल्न सुरु गरेको भने धेरै भएको छैन। फुटबलका महान् खेलाडी ब्राजिलका पेलेले केही वर्षदेखि यहाँ बसेर स्थानीय केटाकेटीलाई प्रशिक्षण दिँदै आइरहेका छन्। अमेरिकाको निम्तोमा प्रसिद्ध ब्रिटिस खेलाडी डेभिड बेकह्याम पनि त्यो खेल प्रवर्धन गर्न हालसालै यहाँ आएका छन्।

अलि अगाडि गएपछि देब्रेतिर भलिबल खेल्ने दुइटा चौर देखिएका थिए। एउटामा समुद्रछेउ खेलिने बिच भलिबल जस्तो पार्न बालुवा हालिएको थियो। त्यहाँबाट घुमेर दाहिने लाग्दा बास्केटबल कोर्ट देखिएको थियो। त्यसमा चार जना काला युवकहरू खेल्दै थिए। तीमध्ये एउटाले मलाई देखेर "हाई" भनेको थियो। हाँस्दै हात हल्लाएर लम्कँदा केटाकेटी कराएको सुनेर

मैले फर्केर हेरेको थिएँ। पल्लो छेउमा किशोरकिशोरीहरू स्केटिङ गर्दै रहेछन्। उनीहरू उफ्रेर अग्लो ठाउँबाट हामफाल्दा कराउँदा पनि रहेछन्।

त्यहाँको वातावरण निकै राम्रो थियो। चारैतिर हाम्रै तिर जस्ता सल्लाका ठूलठूला रूखहरू थिए। बीचबीचमा थरीथरीका आकर्षक बोटहरू पनि रोपिएका थिए। पार्कको सम्पूर्ण परिवेश अन्यत्र देखिने जस्तै सफा र स्वच्छ थियो। सामुन्ने गाडीहरू राख्ने ठूलो इलाका थियो। त्यसलाई नाघेर अघि जाँदा लहरै लन टेनिसका तीन वटा कोर्ट देखेको थिएँ। तिनमा खेलाडीहरूले अभ्यास गरिरहेका थिए। त्यसैको छेउमा दिसा-पिसाप गर्न, हातमुख धुन र नुहाउनका निम्ति रेस्टरुमहरू बनाइएका थिए। यहाँ हरेक सार्वजनिक ठाउँमा तथा ठूला पसलहरूमा त्यस्ता रेस्टरुमहरू बनाइएका हुँदा रहेछन्। निकै सफासुग्घर राखिएका त्यस्ता शौचालयहरूमा साबुन, ट्वाइलेट पेपर, ड्रायर आदि थिए, हाम्रा तिरका पाँचतारे होटेलमा झैँ। राजमार्गहरूमा पनि ठाउँठाउँमा रेस्टरुमहरू देखेको

थिएँ। यहाँ कतै पनि हामीकहाँ जस्तो कुनो खोज्दै हिँड्नुपर्ने वा नाक छोप्दै उभिनु वा बस्नुपर्ने बाध्यात्मक अवस्था भोग्नुपर्दो रहेनछ।

म अलकत्रा छापिएको बाटैबाटो अगाडि बढ्दै थिएँ। बेसबलको चौर नाघेपछि टिनका छाना भएका दुइटा सुन्दर छाप्राहरू देखेको थिएँ। तीमध्ये एउटामा टेबल-कुर्सीहरू राखिएका थिए र अर्कामा ती खेलाडीहरूका कपडा थिए। त्यसको नजिकै बच्चाहरू खेल्ने चिप्लेटी र पिङ पनि थिए। ठाउँठाउँमा खानेपानीका धाराहरू जडान गरिएका थिए। कस्तो सबै कुराको विचार पुर्‍याएर बनाएको होला– म हिँड्दै सोच्दै थिएँ।

हिँड्दाहिँड्दै म झुप्प रूखैरूख भएको ठाउँमा पुगेको थिएँ। त्यहाँ तीन-चार जना दस-बाह्र वर्षका केटाकेटीहरू साइकल चलाउँदै तिनै रूखहरूको फन्को मार्दै थिए। त्यहीं स्याउको एउटा रूख पनि थियो। त्यसमा लटरम्म फल देखेर मैले सोचेको थिएँ– पाक्ने बेला भइसक्यो; कसैले टिप्दा पनि रहेनछन्! हामीकहाँ भए

बतिलैमा सखाप भइसक्थे। घरभित्रका त रहन दिँदैनन् चोरेर, झन् यस्तो सार्वजनिक ठाउँको? अर्काको बारीका काँक्रा, मूला अनि के छ नि अर्थोक– चोरेर नखाए त के धाक लाउनु हो साथीहरूसँग ? मेरा छिमेकीको घरमा बाटोतिरै बेलौतीको एउटा बोट छ। फल लाग्ने मौसमभरि नै ती बिचरी बूढीमाउ झ्यालमा बसेर कराइराखेकी हुन्छिन्। के गर्ने ? केटाहरू बिहानैदेखि ढुङ्गा हान्न थाल्छन् फल झार्न। एक पटक त तिनको झ्यालको ऐना पनि फुटेको थियो ढुङ्गाले।

पार्कको पल्लो छेउ पुग्दा एक ठाउँमा त्यस्तै एउटा बेन्च देखेर बसेको थिएँ, अनि मैले फेरि चारैतिर हेरेको थिएँ। त्यहाँबाट पनि मैले हिउँले ढाकिएको माउन्ट रेइनियर टल्किरहेको पाएँ। चारैतिर हरियाली थियो। माथि सफा आकाश र पर दायाँबायाँ पहाडहरू थिए। कति राम्रो ! कति आनन्द ! हेरिराखूँ जस्तो, बसिराखूँ जस्तो लागेको थियो र सोचेको थिएँ– यस्तै, होइन योभन्दा पनि सुन्दर छ हाम्रो देश, मनोहर छन् हाम्रा पहाड अनि नदीनाला। हिमालको त के कुरा

गर्नु ? हिमाल त हिमालै हो नि !

एक पटक हिँडेर जिरी पुगेको थिएँ। त्यति खेर लामसाँघु-जिरी सडकको रेखाङ्कन भर्खर सुरु हुँदै थियो। सूर्यास्त हुनेहुने बेला भएको थियो। सूर्यको रक्तिम प्रकाशमा जिरीको सुन्दरता देखेर कति आह्लादित भएको थिएँ म ! उत्तरतिर फर्केर हेर्दा हरिया डाँडा, कलकल बग्दै गरेको खोला, वरपर लमतन्न परेका हरिया फाँट र त्यसको एक छेउमा टलक्क टल्केको सुन्दर चिज फ्याक्ट्री अनि पृष्ठभागमा उज्यालो हिमाल देखेर कसरी उफ्रेको थियो मसँगै हिँडेर लखतरान परेको मेरो ब्रिटिस मित्र ! मलाई गम्लङ्ङ अँगालो हालेर अङ्ग्रेजीमा कराएको थियो ऊ– "कति सुन्दर देश तिम्रो हँ, मिस्टर सुवेदी !"

त्यस्तै, एक पटक कामको सिलसिलामा सोलुखुम्बुको जुनीबेसी पुगेको थिएँ। बास बसेको ठाउँबाट बिहान यसो बाहिर हेर्दा उदाउँदो सूर्यको किरणमा हिमाच्छादित पहाडमुन्तिर सिलिक्क परेका डाँडाहरूको मनोभिराम दृश्य देखेर आनन्दले कस्तरी कामेको थियो मेरो शरीर

!

ओह ! सराङकोटको डाँडाबाट सूर्योदयको दृश्य हेर्दा अन्नपूर्ण र माछापुच्छ्रेको शुभ्र हिउँमा सूर्यको प्रथम प्रकाशले छरेको लालिमा देखेर दर्जनौं विदेशी पर्यटकहरू आनन्दको उत्तेजनामा चिच्याएको सम्झँदा मलाई अहिले पनि गर्वको अनुभव हुन्छ। हो, हामीकहाँ थोरै मिलेको छैन। सकिन्छ सिँगार्न, राम्रै। मात्र सामान्य इमानदारीको खाँचो छ। मैले यहाँ आएर यी कुइरेहरूको इमानदारी देखेँ। डाहा भयो। देख्दै जाँदा अनुभव गरेँ, यही प्राथमिक शक्ति रहेछ प्रगतिको।

"भौँ, भौँ, भौँ।" जोडसँग भुकेको आवाजले म झस्केको थिएँ। अजङ्गको कुकुर म बसेकै बेन्चतिर हान्निँदै थियो मलाई झम्टन। पन्ध्र-सोह्र वर्षकी किशोरीले सिक्री तानेर उसलाई अगाडि बढ्न नदिन भरमग्दुर प्रयास गर्दै थिई। तर उसलाई नै घिसारेर अगाडि बढ्दै थियो त्यो हिंस्रक। म बेन्चबाट उठेर कुदूँ कि भन्दै थिएँ, त्यसै बेला केटीको बाबु कुद्दै आई घाँटीमा समातेर रोकेको थियो त्यस जनावरलाई। म एक

छिनसम्म बेन्चमै हल न चलको अवस्थामा बसेको थिएँ। उठेर हिँड्ने आँट पनि आएको थिएन। मेरो सम्पूर्ण शरीर एक छिन थरररर कामेपछि कठ्याङ्ग्रिएको थियो। त्यस व्यक्तिले याचनायुक्त अनुहार लाएर केके भनेको थियो, तर मैले त्यस बेला केही ठम्याउन सकेको थिइनँ। पछि थाहा पाएको थिएँ– त्यस पशुले मलाई टोकेको वा चिथोरेको भए बिचरो त्यस मोटेको बिजोग हुने रहेछ। यहाँ कुकुर-बिरालाले कसैलाई टोकेमा मालिकलाई सजाय हुँदो रहेछ।

सोचेको थिएँ– यहाँ पाल्तु जनावरसम्बन्धी कुराहरू व्यवस्थित गरिएको रहेछ। हाम्रातिर त व्यस्त सडकको बीचमै बडेमानको साँढे साँढे पल्टेर बसेको हुन्छ। बाबै, मेरो टोलमा कुकुरहरूको जगजगी ! सम्झँदै शरीरभरि काँडा उम्रन्छन्। बाटामा दुईतिर फर्केर एक-अर्कालाई खाउँलाझैं गरी दाह्रा किट्दै-भुक्दै गरेकाहरूको लस्करछेउबाट हिँड्नुपर्दा सातै जान्छ मेरो त। हरे, मेरा एक पाहुनाको कस्तो बिजोग पारेको थियो तीमध्येकै एउटा भुस्याहाले !

केही वर्षअगाडिको कुरो हो। श्रीमतीको टाउको दुख्ने रोगको उपचारका निम्ति भैरहवाबाट आएका थिए मेरा ती आफन्त। एक दिन पशुपति दर्शन गर्न जाने भनेर हाम्रो घरबाट श्रीमतीसहित निस्केका थिए। एक ठाउँमा एउटा भुस्याहा ख्याकख्याक गर्दै उनीतिर आएछ। उनले धपाउन "जा-जा" भन्दाभन्दै त्यसले क्याप्प दाह्रा गाडेर खुट्टा रगताम्मे पारिदिएछ। टोकाइको बहले रन्थनिएका बिचरा मन्दिर जान त कताकता, फार्मेसी कता छ भनेर खोज्दै हिँडेछन्। कम्पाउन्डरले उनको घाउको मलमपट्टी गरेपछि एन्टी-रेबिज सुई लाउन सल्लाह दिएछ।

"बौलाहा रै'छ भने त्यो दस दिनमा मर्छ। मरेन भने त्यति डर छैन। नभए त पछि कुकुरहरू जस्तै गरी भुक्ने रेबिज रोग लागे कुनै डाक्टरले केही गर्न सक्दैन।" उसले सबै कुरा खोलेर भनेको रहेछ।

तर त्यो सडकको जनावर कता गयो, मर्‍यो-मरेन, कहाँ हेर्दै हिँड्ने? एक-दुई दिनको छटपटीपूर्ण सन्तापपछि उनी गएका थिए वीर अस्पताल। हिजोआज त केही

विकसित सुई निस्केको छ। महँगो भए पनि कष्ट कम हुन्छ। तर त्यस बेला? ओहो, के लेखूँ! मोटो सियो भएको सुई चौध दिनसम्म लाउनुपर्थ्यो, त्यो पनि पेटमा। उनले भोग्नुपरेको तकलिफ देखेर हामीलाई साह्रै ग्लानि अनि पीडा भएको थियो। ती ठूला भुँडी भएका मानिस, सुईको घोचाइका कारण पेटमा उठेका गाँठाको पीडाले गर्दा प्रत्येक दिन "अहँहँ" गर्थे र उनकी जहानले नुन तताएर सेकिदिन्थिन्। हरे, कत्रो सास्ती!

त्यसै क्रममा मैले हाम्रा तिर कुकुरको प्रजनन नियन्त्रण गर्न गरिएका प्रयासहरू पनि सम्झेको थिएँ। एक पटक कुनै संस्थाका स्वयंसेवकहरू ती चौपायाहरूलाई खसी पार्ने भनेर बोराले छोप्दै टोलटोल हिंडेको पनि देखेको थिएँ। तर सहरमा तिनको उपद्रव लेश मात्र पनि घटेको छैन; बग्रेल्ती देखिन्छन् अझै सर्वत्र। यो उपलब्धिहीन अवस्थाको कारण के हो? अझै थाहा पाउन सकेको छैन। त्यस्तैत्यस्तै सोच्दै म घरतिर लागेको थिएँ।

# पापको सहरमा आफ्नासित

सियाटलबाट उडेको विमान दुई घण्टा बीस मिनेटपछि ओर्लिएको थियो, लास भेगासको हवाईपट्टीमा ।

“कस्तो बालुवैबालुवा रहेछ है एयरपोर्टमा पनि !” विमानबाट ओर्लेर सामान सङ्कलन कक्षतिर जाँदा रानीले भनिन् ।

जहाज ओर्लने बेला मैले पनि यसो तल चियाएको थिएँ, सहर हेर्न। हरियाली त्यति भएझैं लागेको थिएन । झन् सहर आउनुअघि माथि आकाशबाट हेर्दा ढुङ्गैढुङ्गा, माटैमाटो भएका पहाडहरू देखेको थिएँ ।

“अँ, बन्जर रहेछ जताततै ... ।” मैले बोल्दाबोल्दै मोबाइलको घण्टी बज्यो ।

फोनमा मेरा भाइ प्रा.डा. लक्ष्मीप्रसाद ज्ञवाली बोल्दै थिए– “दाइ नमस्कार ! कहाँनेर हुनुहुन्छ ? म त

एयरपोर्टभित्र आइसकेको छु।"

"हामी तीन जना नीला मान्छे भएको विज्ञापन पाटीको मुन्तिर उभिएका छौँ भाइ!" मैले यताउति हेरेर हाम्रो सही अवस्थिति जनाएँ। बिहान सियाटलबाट उड्ने बेला फोनमा कुरा हुँदा उनले हामीलाई यही कक्षमा भेट्ने कुरो जनाएका थिए।

"म पनि त त्यहीँनिर छु।" उनले कुरा नटुङ्ग्याउँदै हामीले एक-अर्कालाई देख्यौँ। उनी प्रफुल्लित मुद्रामा नमस्ते गर्दै हामीतिर आए। उनको अनुहारमा मैले सधैँ देख्ने गरेको उही निश्छल हाँसो थियो। म पनि केही अगाडि बढेँ। त्यस बिरानो भूमिमा उभिएर हामी दुवैले एक-अर्कालाई अङ्कमाल गर्‍यौँ।

"दाइ, तपाईंहरूलाई आज यहाँ देख्न पाउँदा मलाई निकै खुसी लागिरहेको छ।" उनले प्रसन्नता व्यक्त गरे– "आउनुहोस्, जाऊँ।"

हामीले रोक्दारोक्दै पनि उनी हाम्रो ब्याग समातेर हिँडे। "मेरा दाइलाई यहाँ ल्याउने धोको थियो तर

जुरेन, पछुतो लागिरहन्छ।" उनले भावुक स्वरमा भन्दै गए– "आज तपाईंहरूलाई यहाँ भेट्दा मन केही हलुङ्गो भएको छ।"

उनका दाइसित मेरो मित्रवत् सम्बन्ध रहेका हुनाले मलाई पनि उनले सानैदेखि दाइ नै भनेर सम्बोधन गर्थे र हाम्रो पारस्परिक व्यवहार पनि त्यस्तै थियो। उनी मेधावी विद्यार्थी थिए। स्नातकोत्तर गरेर पढाउँदापढाउँदै छात्रवृत्ति पाएर उच्च शिक्षाका लागि यहाँ आएका थिए। कम्प्युटर साइन्समा पीएच.डी. गरे अनि यतैको नेभाडा विश्वविद्यालयमा पढाउन थाले। अठार-बीस वर्ष त भयो होला।

"पहिले त एक-दुई वर्ष यताको अनुभव पनि बटुलेर हेरूँ न भन्ने लागेर बसिहालेँ। तर गर्दागर्दै यतैको बासिन्दा पो भइयो दाइ!" उनी हाँस्न थाले।

बाहिर निस्केर हामी गाडीमा बस्यौँ। हप्प गर्मी थियो। भाइले गाडीको ए.सी. खोले। मैले बाहिर हेरेँ। ठूलठूला खजुरका रूखहरू, होचाहोचा नाङ्गा डाँडा, ठाउँठाउँमा बालुवा र ढुङ्गा। लाग्यो, अरबतिर

पो छु कि !

"यो मरुभूमि हो कि क्या हो भाइ?" मेरी श्रमितीले बाहिरतिर हेर्दै सोधिन्।

"हो भाउजू, यो मोजाभे डेज भनिने मरुभूमि नै हो। त्यसैमा आजभन्दा सय वर्षअघि अमेरिकाले यो सहर बसालेको हो। उः हेर्नुस् न केक्टस !" बाटाछेउ देखिएका सिउँडीका जस्ता रुखहरूतर्फ इङ्गित गर्दै उनले भने। त्यसै बेला उनले हामीलाई यस भूभागका बारेमा धेरै जानकारी दिएका थिए।

पहिले यो इलाका मेक्सिकोको थियो। त्यस मुलुकसँगको लडाइँ जितेर अमेरिकाले यस भूभागलाई आफ्नो राष्ट्रमा गाभ्यो र सन् १८६४ तिर नेभाडा नामको छत्तीसौँ राज्य बनायो। त्यस राज्यको सबैभन्दा बढी आबादी भएको सहर हो लास भेगास। यहाँको जनसङ्ख्या छ लाखको हाराहारीमा छ। तीमध्ये सत्तरी प्रतिशत गोरा, दस प्रतिशत अफ्रिकी-अमेरिकी, पाँच प्रतिशतजति एसियाली र थोरै स्थानीय बासिन्दा छन्। जुवा लगायत विभिन्न थरीका मनोरञ्जनका

साधन यहाँ सहज उपलब्ध छन्। रक्सी बिक्री पनि खुला छ; हाम्रो नेपालमा जस्तै सहजै जतातत्तै पाइन्छ। 'संसारको विलासिताको राजधानी' भनेर प्रचारित यस सहरमा विशाल र भव्य क्यासिनोसहितका होटेलहरू छन्। संसारभरिका धनीमानीले यहाँ आएर जुवा खेल्ने धोको पालेका हुन्छन्। आउँछन्, जुवा खेल्छन् र आफ्नो सौख अनुसारको मनोरञ्जनको मज्जा लिन्छन्। विश्व च्याम्पियन बक्सिङ, रेसलिङ आदि प्रतियोगिताहरू पनि यहीँकै होटेल परिसरमा हुन्छन्। हाम्रा पालाका एल्भिस प्रेस्ली, डिन मार्टिन जस्ता बडेबडे गायकका कन्सर्ट यहीँ हुन्थे। अहिले सेलिन डायन, टोनी ब्राक्सटन, इल्टन जोन, बेरी म्यानिलो जस्ता ख्यातिप्राप्त गायक-गायिकाका सो पनि यहाँ भइरहन्छन्। यस सहरको भव्यता र विलासी क्रियाकलापका कारण यसैको सेरोफेरो समातेर थुप्रै उपन्यास रचिएका छन् र त्यतिकै सङ्ख्यामा चलचित्रहरू पनि निर्माण भएका छन्। विलासी व्यापार प्रवर्धन गरिएकाले यो सहर आर्थिक रूपले समुन्नत हुँदै गयो। तर त्यसै कारणले

पनि होला, यहाँ अमेरिकाको सबैभन्दा बढी आत्महत्या र पारपाचुकेका घटना हुन्छन् रे। पारपाचुके लिनेदिनेहरूका निम्ति सम्पूर्ण नेभाडा राज्य नै स्वर्ग मानिन्छ। यिनै दुष्कृतिजन्य गतिविधिका कारण यस सहरलाई 'पापको सहर' (सिन सिटी) पनि भन्दा रहेछन्।

हाई वेबाट दाहिने मोडेर भाइले सोतो बाटातिर गाडी कुदाए। "हेर्नुहोस्, यही हो यो पापी सहरको मुख्य अखडा। यस सडकलाई लास भेगास स्ट्रिप भनिन्छ।"

हामीले गाडीभित्रैबाट हेर्‍यौँ– बाटाका दुवैतिर लहरै ठूलठूला अट्टालिकाहरू।

"राति बत्तीको उज्यालोमा पो देखिन्छ यसको रौनक, यी क्यासिनोहरूको भव्यता।" भाइले भन्दै गए– "आज राति आउँला नि हेर्न।" बोल्दै गर्दा भाइको अनुहारतिर हेरेर मैले यहाँ हुने चमकदमकपूर्ण रङ्गीन रातको अनुमान लगाएँ।

हामी विमानस्थलबाट हिँडेको आधा घण्टा भएको थियो। भाइले आफ्नो टोलतिर जाने बाटामा गाडी मोडे। बाटोबाटो जताततै हालसालै रोपिएका बिरुवाहरू देखिएका थिए। कतैकतै बाटाका छेउमा ससाना झाडी भएका बगैँचाहरू पनि देखिए। तर ठूला-पुराना रूख भने त्यति देखिएनन्। उही खजुर र ताडका बूढा रूखहरू नै थिए जताततै।

दुई-तीन घुम्तीपछि उनले गाडी रोकेर भने– "ल दाइ, यही हो मेरो अमेरिकाको कुटिया।"

सामुन्ने दुईतले सुन्दर घर देखियो। बाहिर दुवै छेउमा हरिया रूखहरू। गाडीबाट ओर्लेर चारैतिर हेरेँ– यहाँका घरहरूको बनोट पनि अन्यत्रतिरको भन्दा भिन्दै देखियो। मोटामोटा गाराहरू, माटाका हुन् कि जस्ता। सिमेन्ट जस्तै वस्तुले बनेका हुन् रे। छाना पनि झिँगटीको पो हो कि जस्तो, गिलास आकारका गोलाहरू छापिएका।

"मरुभूमीय मौसम भएर यहाँ सबैतिर यस्तै डिजाइनका घर बनाइन्छन्।" भाइले जानकारी दिँदै थिए– "आजको

तापक्रम कति छ हेरौँ। एक सय दुई डिग्री फारेनहाइट, अर्थात् ?" उनले मनमनै गुनेर भने– "उनन्चालीस डिग्री सेन्टिग्रेड भनौँ न। सेप्टेम्बरमा यत्तिको छ। धेरै गर्मी हुँदा यहाँको तापक्रम छयालीससम्मै पुग्छ। तथापि आर्द्रता कम हुने हुनाले पसिना त्यति आउँदैन र हाम्रो मधेशमा जस्तो गर्मी महसुस हुँदैन यहाँ।"

भाइले दिएको जानकारी अनुसार यहाँ वर्षा भनेको हुँदैन भन्दा
हुन्छ; फाट्टफुट्ट मात्रै। जाडोमा पनि तापक्रम चार डिग्री सेन्टिग्रेडसम्म हुन्छ रे। यहाँको रेकर्ड बुकमा उल्लेख भए अनुसार चालीस वर्षजति अघि एक पटक माइनस तेह्रसम्म झरेको थियो रे यस भेकको तापक्रम। यहाँ हिउँ पर्दैन तर जाडोयाममा पहाडका टाकुराहरूमा भने देखिन्छ रे।

घरभित्र पसेपछि बुहारी र छोराछोरीसँग भलाकुसारी भयो, अनि हामीले हल्का नास्ता गर्‍यौँ। नास्तापछि थरीथरीका फलफूलहरू पनि खायौँ– स्याउ, मेवा, तरबुजा, किवी, अन्जीर र अन्य केही नयाँनयाँ, मैले

पहिले नदेखेका। फलफूल खानमा मेरो त्यति रुचि छैन। तर यहाँ मैले देखेका फलफूलहरू रहरलाग्दा थिए र स्वादिला पनि। डाइनिङ टेबलबाटै मैले भान्सापछाडि लटरम्म फलेको अनारको बोट देखेँ र खुसी हुँदै उठेर नियालेँ।

भाइ केही सम्झेझैँ गरी जुरुक्क उठे र "ए, ल तपाईंहरूलाई म आफ्नो बारीको अनार ख्वाउँछु" भन्दै घरपछाडि लागे। म पनि बारी हेर्न उनको पछिपछि हिँडेँ। काजु, कटुस, बदामका रूखहरू; धनियाँ, पुदिना, साग, भन्टा, सिमी, बोडी जस्ता थरीथरीका तरकारीहरू।

"ओहो, रहरलाग्दो रै'छ तिम्रो करेसा बारी! आफैँ गर्छौ?" मैले छक्क पर्दै सोधेँ।

"ज्यामी राख्न त यहाँ सकिँदैसकिँदैन दाइ। सबै आफैँ हो। यसो फुर्सतमा अलिअलि गर्दै आफ्नो सौख पूरा गर्छु।" अनि उनी अनार टिप्न गए।

बारीको छेउमा खन्ने-गोड्ने औजार र पानी छर्कने पाइप राखिएका थिए। मैले एउटा गमलामा तुलसी

पनि देखेर सोधेँ– “यो कहाँबाट ल्यायौ नि ?”

“हामी सबैले मिलेर यहाँ नजिकै शिव मन्दिर स्थापना गरेका छौँ। त्यहीँबाट एउटा बिरुवा ल्याएको थिएँ।” उनी बोल्दाबोल्दै पानी आएको थाहा पाएर कुद्दै पाइप समाउन गए। “यहाँ पानीको अलिक अभाव छ।” उनले बारीको चारैतिर पानी छर्कंदै भन्न थाले– “घरहरूमा बगैँचाका निम्ति तोकिएको दिनमा मात्र अडकलेर पानी दिइन्छ। यो रूखो जमिन भएको सहरलाई हरियोपरियो पार्न जेरिस्केपिङ पद्धतिको अभियान चलाइएको छ। तपाईँहरूले बाटाका छेउछेउमा जताततै झाडी जस्ता बिरुवाहरू देख्नुभयो नि, ती सबै थोरै पानीमा हुर्कने वनस्पति हुन्। दूबोको साटो त्यस्तै बिरुवा रोपिएका छन् यहाँ सहरैभरि।”

ओर्लने बेला हामी चढेको जहाजले सहरको एक फन्का मारेको थियो। त्यसै बेला मैले एक ठाउँमा एउटा बाँध जस्तो संरचना देखेको थिएँ। बडो सुन्दर देखिएको थियो त्यसको परिवेश।

“त्यो हुभर बाँध हो दाइ!” भाइले जानकारी दिए–

“सन् १९३६ तिर बनेको हो क्यार। त्यसैले फेरियो नि यो सहरको काया।”

हामी दिउँसो खाना खाएपछि भाइसँगै उनको विश्वविद्यालय हेर्न गयौँ। विभागतिर जाँदा उनले आफ्ना सहयोगी प्राध्यापकका चेम्बरहरू देखाउँदै भनेका थिए– “यहाँ विभिन्न देशका विद्वान्हरू छन् पढाउनेमा। यस कोठाको कोरियन हो; यो इरानी हो; त्यो जापानी हो; उता कोठाको क्यानाडाको हो; त्यसपछिको भारतीय हो।” उनले बाह्र जना प्राध्यापकका बारेमा भन्दा नौ जना त अमेरिकाबाहिरकै भएको थाहा पाइयो। “यसरी संसारभरिकै प्रतिभा ल्याएर राखेपछि विकास नगरोस् त अमेरिकाले? हँ दाइ, भन्नुहोस् त?”

हामीलाई चेम्बरमा बस्न लाएर उनी आफ्नो कामले विभागतिर गए। मैले उनको कोठाको चारैतिर हेरेँ। एकातिरको टेबलमा कम्प्युटर थियो। त्यसको छेउमा केही पत्रपत्रिका थिए। तीमध्ये दुई-तीन वटा नेपालतिरका पनि थिए। पछाडिको र्‍याकमा किताब र रिपोर्टका ठेलीहरू थिए। ढोकाको पृष्ठभागमा हिमालको ठूलै

फोटो टाँसिएको थियो। त्यसैको छेउमा दसैंको शुभकामना कार्डसँगै भगवतीको तस्बिर र नेपालको एउटा पहाडी गाउँको आकर्षक दृश्य भएको फोटो पनि पिनले खोपेर अड्याइएको थियो। केही पत्रपत्रिकाका नेपालसम्बन्धी समाचारका कटिङहरू पनि टाँसिएका थिए। सबै हेर्दा यी मेरा प्राध्यापक भाइ विषयगत विद्वान् हुनुका साथै विभिन्न विषयमा रुचि भएका व्यक्ति हुन् भन्ने अनुमान लाउन गाह्रो परेन। अझ गहिरिएर हेर्दा यी स्वदेशको सम्झनामा भिजिरहन मन पराउँदा रहेछन् भन्ने निष्कर्ष पनि सजिलै निकाल्न सकिन्थ्यो।

एक छिनपछि भाइ आए। गर्मी भएर मलाइ तिर्खा पनि लागेको थियो। उनले मलाई कुनाको अग्लो टेबलबाट मिनरल वाटरको बोतल झिकेर दिए। मैले पानी खाँदै भनें– "भाइको कोठामा नेपाल सम्झाउने थुप्रै सामग्रीहरू रहेछन् नि !"

मेरो कुरा सुनेर उनी स्वाभाविक हाँसो हाँसे, अनि दराजभित्रबाट थरीथरीका तस्बिर र पत्रपत्रिका झिकेर

देखाए। नेपालमा भएका ताजा घटना र विभिन्न क्षेत्रमा भइरहेका क्रियाकलापउपर उनको टिप्पणी सुनेर म छक्क परेँ। उनले चर्चा गरेमध्ये धेरै घटना त मैले पहिले थाहा पाएकै पनि रहेनछु।

"ओहो, भाइले त सूक्ष्म अवलोकन गरेका रै'छौ सबै थोकको!" मैले आश्चर्य व्यक्त गर्दै भनेँ।

"सधैँ एक छिन म इन्टरनेट हेर्छु। नेपालको खबर पढ्छु। देशको मायाले तानिराख्छ नि दाइ! मैले यहाँ बसेर तपाईंको प्रकाशित कथा त इन्टरनेटमा पढेको छु।" उनले भने– "रिटायर भएपछि नेपालै गएर बस्ने विचार छ।" बोल्दाबोल्दै भावुक भए उनी। "आफ्नो देश भनेको आफ्नै हो। होइन, भन्नुहोस् त दाइ?" उनले मतिर पुलुक्क हेरे।

म पनि टाउको हल्लाएर मुसुक्क हाँसेँ, अनि सोच्न थालेँ– सन् ६० र ७० को दशकतिर उच्च शिक्षा हासिल गर्न अमेरिका आएकाहरूले फर्केर नेपालमै काम गरिरहेको त देखेको छु, तर त्यसपछिकाहरू भने कमै फर्केका होलान्, बरु धेरैजसो ग्रीन कार्ड लिएर

यतैका बासिन्दा भएका छन्। नयाँ पुस्ताका अधिकांश युवाहरू त अमेरिकै बस्ने उद्देश्यले स्कुलको पढाइ सकिएलगत्तै यहाँ आउन थालेका छन्। फर्कन्छ को र ?

मेरो मानसपटलमा एक घनिष्ठ मित्रको चित्र पनि घुम्न थाल्यो। उनले पनि यहाँ आएर पीएच.डी. गरेका थिए र परिबन्दमा परेर पढाउन थालेका थिए। पढ्दाको केही ऋण थियो। त्यसलाई चुक्ता गरेर फर्कन्छु आफ्नै देश भन्ने ठूलो मनसुबा थियो। पाँच वर्षको पढाइ, त्यसपछि परिवारको भरण-पोषणका साथै ऋण चुक्ताको थप पाँच वर्ष। हरेक दिनजसो उनी आफ्नो प्यारो देशको सम्झना लिएर सुत्थे; दिनभरि आफूलाई नै बिर्सने जस्तो कार्यव्यस्ततामा भुलेर राति फेरि छटपटिन्थे पुरानै सम्झना मनमा लिएर, अनि ओल्टेकोल्टे फर्कंदै निदाउँथे कुनै बेला। ठ्याक्क यस्तै हुन्थ्यो उनलाई भनेर म ठोकुवा त गर्न सक्तिनँ। तर म उनको मन जान्दथेँ; उनको भाव बुझ्थेँ र उनको सोचबारे पनि मलाई राम्रै जानकारी

थियो। त्यसैले उनीसँग इमेलमा लेखापढी हुँदा प्रवासमा बसेर उनलाई त्यस्तै भइरहेको होला भनेर म कल्पना गर्थें। त्यस्तैत्यस्तैमा यहीँ बाह्रतेह्र वर्षे बित्यो उनको। उमेर बढ्दै गयो; घरायसी दायित्व पनि थपिँदै गयो। त्यसैबीच स्वदेशमा द्वन्द्व चर्कियो र देशको वातावरण अशान्त बन्दै गयो। अब उनी फर्कलान् र? भेटेरै कुरा गर्न पाए हुन्थ्यो भन्ने छ मनमा। तर यहाँ सबै ठाउँ टाढाटाढा पर्दा रहेछन्। उत्कट अभिलाषा हुँदाहुँदै पनि भेट्ने मौका जुराउन सकिराखेको छैन।

हामीलाई भाइले विश्वविद्यालय घुमाउँदै त्यहाँको पुस्तकालयमा पनि छिराए। ठूलै रहेछ पुस्तकैपुस्तकको भण्डार। शोधका निम्ति बहुमूल्य मानिँदो रहेछ त्यो पुस्तकागार। त्यहाँको किताब झिक्ने रोबोटको कार्य देखेर हामी छक्क पर्‍यौँ। इन्टरनेटमा पुस्तकालयको क्याटलग हेरेर आफूलाई चाहिएकाको नम्बर र नाम लेखेर पठाए त्यस मेसिनले उल्लिखित किताब झिकेर वितरण डेस्कमा राखिदिँदो रहेछ। एक छिनसम्म हामीले त्यो नयाँ प्रविधिको रमाइलो हेरिरह्यौँ।

"होइन, दाइले केही भन्नुभएन नि म पछि नेपाल गएर बस्छु भन्दा !" हामी फर्कने बेला उनले पुनः आफू नेपाल बस्ने कुरो झिके।

"तिमी सक्छौ र अब ?" मैले उनीतिर हेरेर हाँस्दै भनेँ।

"किन नसक्ने ? सकिहाल्छु नि। मेरो रहनसहन, सोच फेरिएको छैन क्यारे। म उस्तै छैन र, हँ दाइ ?" उनले एकटक मलाई हेरे।

"बाबूलाई त उस्तै देखेँ मैले।" पछाडिको सिटबाट केही अगाडि सरेर चालकतिर हेर्दै मेरी श्रीमतीले भनिन्।

"तिमी बिलकुलै फेरिएका छैनौ। इच्छा र अठोट भए त सकिन्छ फर्कन। पुराना साथीभाइहरूसँग तिम्रो सम्पर्क कायमै छ। आउजाउ गरिरहेका छौ। आफ्नो घर पनि त छ त्यहाँ तिम्रो। तिमीलाई नेपालमा समय काट्न गाह्रो नहोला।" यसो भन्दै गर्दा मैले

सियाटलछेउका एक मित्रकहाँ भएका कुराकानी सम्झेँ।

ती मित्रको निम्तोमा हामी सियाटलदेखि अलि पर रहेको बेल भ्यु पुगेका थियौँ। उनकी छोरीको जन्मदिन रहेछ। त्यहाँ अरू नेपाली परिवार पनि भेटिएका थिए। सियाटलतिर थुप्रै नेपालीहरूको बसोबास रहेछ। पन्ध्र-सोह्र सय परिवार बस्छन् भन्ने थाहा पाएको थिएँ। न्यु योर्क, वासिङ्टन डी.सी. र डेनभरतिर नेपाली आबादी अरू बढी छ रे।

जन्मदिनको कार्यक्रमपछि खानपानका बेला कुरा हुँदा सबैले नेपालको गतिविधिबारे नै बढी जिज्ञासा राखेका थिए। त्यसै बेला एक जना स्वास्थ्य विज्ञका रूपमा काम गर्ने शर्माजीले भनेको सम्झन्छु।

“खत्तम छ नेपाल। हेर्नुहोला, त्यहाँ केही हुनेवाला छैन। भाषण गरेर मात्र हुन्छ र? उत्तरदायित्व भन्ने ठ्याम्मै छैन कसैमा पनि।” उनले विरक्तिएको अनुहार लाएका थिए।

“साह्रै पो बिग्र्यो है हाम्रो त्यस्तो राम्रो देश ?” धेरै बेर चुप लागेर सुनिरहेका मेरा मित्र बोलेका थिए र रेड लेबलको बोतलबाट “फर द रोड” भन्दै सबैका ग्लासमा अलिअलि खन्याएका थिए ह्विस्की ।

“हेर्नुस् त, स्वाहा पारे हाम्रो त्यस्तो सुन्दर देश हाम्रा नेता र तिनका अपरिपक्व सोचले !” शर्माजीले भनिसकेर मतिर हेर्दै ह्विस्कीमा सोडाका साथै कुरा पनि थपेका थिए– “नराम्रो नमान्नुहोला बन्धु, तपाईंको विचारसँग म अलिकति सहमत छैन । हेर्नुहोला, त्यहाँ अब गृहयुद्ध हुन्छ, कम्बोडियामा जस्तै । त्यस्तो ठाउँमा हामी फर्केर गएर कसरी बस्ने ? त्यसैले मैले पोहोर साल गएर जग्गाजमिन, श्रीसम्पत्ति सबै बेचेँ ।”

उनका कुरामा सही थाप्दै अर्का पाहुना बोलेका थिए– “तपाईं ठीक समयमा जानुभएछ । अब त कतै हिँडडुल गर्न पनि सकिन्न रे ।”

“छुट्टीमा नेपाल जाने कुरा गर्दा त नाक चेप्र्याउँछन् छोराछोरी । आफू मात्रै भावनामा बहेर के गर्नु ? काम छैन त्यहाँ सम्पत्ति राखेर ।” अरू अर्का पाहुनाले

थपेका थिए।

त्यहाँ धेरैले शर्माजीका जस्तै विचार राखेका थिए। तर मेरा मित्रको सोच भने अलि भिन्नै थियो– “मलाई त अझै पनि फर्केर आफ्नै देशको सेवा गर्ने मन छ। यहाँ मरीमरी पराईका लागि गरेर के काम ... ?”

उनले कुरा सक्न नपाउँदै घरभित्र छिर्ने बेला पिडौँला फर्केर सोफामा पल्टेका थापाजी पड्केका थिए– “आफैँसित छल नगर। भाडा तिर्ने बराबर रकमको किस्ता तिरे ब्याङ्कबाट तीसवर्षे ऋणमा घरै किन्न पाइन्छ भनेर पोहोर यो घर लियौ; अब तिमी कहिले फर्कन्छौ र गफ लाउछौँ !” उनी बोल्दाबोल्दै उठेका थिए र हामीतिर फर्केर बस्दै उराठिलो अनुहार लाएर भनेका थिए– “उनी पनि आएदेखि नै फर्कौं कि फर्कौं भनेर क्याउँक्याउँ गर्थिन्। फर्कौं भन्ने मलाई पनि लागेको थियो। माया त लाग्छ नि आफ्नो देशको। तर के गर्ने त्यहाँ गएर ? केटाकेटीको करिअर के त्यहाँ ?”

म सोच्दै थिएँ सबै कुरा, भाइले गाडी घरभित्रै रहेको ग्यारेजमा छिराए।



राति आठ बजेतिर हामी लास भेगास स्ट्रिपको सयरमा निस्कियौँ। कस्तो झिलिमिली चारैतिर! लाग्यो, संसारभरिको उज्यालो र चमक यहीँ छरिएको छ, यही एक किलोमिटरजतिको सोझो बाटाका दुवैतिर। कतै पेरिसको आइफल टावर चम्किरहेको छ त कतै न्यु योर्कको स्ट्याचु अफ लिबर्टी; कतै इजिप्टको पिरामिड र त्यसको अगाडि स्पिङ्क्स ठडिएको छ; अनि कतै रोमका ठूलठूला कलात्मक मूर्ति।

"यहाँका यी सबै क्यासिनो होटेलहरू अर्बौंको लागतमा संसारका एकएक अजुबाहरूको अवधारणामा बनाइएका छन्। उः त्यो विन नामको होटेल हो।" भाइले बाटाको दाहिनेतिर देखाउँदै भने– "यसको निर्माणमा दुई अर्ब सत्तरी करोड डलर खर्च भएको अनुमान छ। यो रकम नेपालीमा कति हुन्छ दाइ?"

मैले मनमनै गुनें– हाम्रो देशको एक वर्षको बजेटभन्दा पनि बढी !

भाइले पार्किङ खोज्न यताउति लाँदै गाडीलाई बाटामा फनफनी घुमाउँदै थिए । अन्तमा “यहाँ भाले पार्किङ गरौँ है” भन्दै एउटा होटेलको पाँच तलामाथि पुऱ्याए ।

गाडी थन्क्याएर विद्युतीय भऱ्याङबाट तल ओर्लेपछि मैले होटेलभित्रै ठूलठूला खजुरका रूखहरू देखेँ र आफैँलाई सोधेझैँ बोलेँ– “प्रकाशको व्यवस्था कसरी गरेका होलान् यिनमा !”

“ए दाइ, त्यस्तरी सबै कुरा सोच्दै नहिँड्नुहोस्; बुझिसाद्धे छैन यहाँ । केके गरेका छन् केके नि यी कुइरेहरूले !” भाइले मलाई डोऱ्याउँदै भने ।

हामी होटेलको क्यासिनोको एक छेउ हुँदै बाहिर निस्कियौँ । ओहो, कस्तो भीड क्यासिनोमा ! सङ्गीतको हल्का धुन पनि सुनिँदै थियो जताततै । ठिटाठिटीहरू कोही हात समातेर हाँस्दै, कोही इत्रिँदै, कोही अङ्कमाल गर्दै अनि कोही म्वाइँ पनि खाँदै हिँड्दै थिए ।

केटीहरूका लुगा पनि कामुक प्रकृतिका थिए।

"यो होटेल मिराज हो दाइ ! सन् १९८९ मा यो खुलेपछि यस स्ट्रिपमा क्यासिनो होटेलहरूको बाढी आउन थाल्यो। यसअघि यहाँभन्दा एक माइलजति उताको फ्रेमोन्ट स्ट्रिटमा मात्रै थिए क्यासिनो र नाइट क्लबहरू। नौ बज्यो; यहाँ अब हामीले ज्वालामुखीको प्रदर्शनी देख्न पाउँछौँ। सामुन्ने पहाड छ नि, त्यही हो कृत्रिम भल्केनो।"

भाइले व्याख्या गर्न नभ्याउँदै होटेलको आँगनमा रहेको तलाउका बीच बनाइएको पहाडबाट ठूलो आवाजसाथ आगोको मुस्लो निस्कियो, अनि लाभा हुरहुरती निस्कँदै तल पानीमा खस्न थाल्यो। एकै छिनमा सम्पूर्ण तलाउ आगैआगोले भरियो। एक मिनेट पनि लागेन यो सब हुन। मान्छेहरूले थपडी बजाउँदै त्यो विद्युतीय चमत्कारप्रति खुसी जनाए।

हामी त्यहाँबाट अगाडि बढ्यौँ, बेलाजियो होटेलमा पानी-नाच हेर्न। थुप्रै मान्छे प्रतीक्षामा थिए। सबै आ-आफ्नो क्यामेरा लिएर तयार थिए, ठूलो पोखरीको

चारैतिर। केही क्षणमै सङ्गीत बज्यो, अनि त्यसैको तालमा पानीका फोहोराहरू तालबाट माथि उठ्दै नाच्दै गर्न थाले। मैले फाउन्टेन एन्ड म्युजिकका कार्यक्रमहरू अन्यत्र पनि देखेको थिएँ, तर यो त गजबको रहेछ। लाग्यो, कुशल नर्तकीहरू कम्मर मर्काईमर्काई नाचिरहेका छन्; घरी रक एन्ड रोल, घरी बेले डान्स, घरी सालसा। दर्शकहरू थपडी बजाउँदै खुसीले कराउन थाले, अनि आँखै तिरमिराउने गरी चम्किए क्यामेराका सहस्र फ्ल्यासहरू।

"आउनुहोस्, यतायता।" भाइले हामीलाई मन्डेला बे होटेलमा छिराए। पस्नासाथै एउटा मूर्तिनेर पुऱ्याएर उनले भने– "ई हेर्नुहोस् दाइ, तपाईंका लेनिन यहाँ, अमेरिकामा उभिएका छन्। देख्नुभयो ?"

साँच्चै, अविश्वसनीय थियो त्यो दृश्य। सन् १९९१ मा गोर्बाचेभको पालामा रूसमा कम्युनिस्ट शासन ढलेकै बेला त्यो विशालकाय प्रतिमा पनि ढलाइएको थियो। त्यसै बेला भाँच्चिएको थियो क्यारे त्यसको टाउको। त्यही छिन्नमस्तक लेनिनको अनुकृति अमेरिकाको

होटेलभित्र देख्दा म तीन छक परेँ।

"त्यही मूर्ति हो त यो भाइ ! कस्तो आश्चर्य है ! कसरी ल्याए यो यहाँ ?"

"त्यही त आश्चर्य छ दाइ ! के गर्दैनन् यी अमेरिकीहरूले ?" उनले हाँस्दै भने– "त्यसैले भनेको, यहाँ धेरै बुझ्न नखोज्नुहोस् भनेर।"

क्यासिनोको रमाइलो हेर्दै हामी अगाडि बढ्दै थियौँ। भाइले बेलाबेला मलाई यताका क्यासिनोका विशेषताहरूबारे जानकारी पनि दिँदै थिए। मेरी श्रीमती बुहारीसित कुरा गर्दै थिइन्। "हो दिदी, यहाँका क्यासिनोहरू एकदमै ठूलठूला छन्। जति हिँडे पनि सकिँदैन।" उनको जिज्ञासामा बुहारी भन्दै थिइन्।

हामी बाहिर निस्कियौँ। बाटामा मान्छेको हूल थियो; बेलाबेला नारिँदै हिँड्नुपर्थ्यो। "यो तिलस्मीनगरीमा बाह्रैमास यस्तै हो दाइ।"

भाइका कुरा सुन्दासुन्दै म एउटासित ठोक्किन पुगेछु। एक ठाउँमा सोझै अगाडि जान पनि पुल

चढ्नुपर्ने रहेछ । पुलमाथिबाट मैले फेरि सरर हेरेँ– झिलिमिलीको संसार ! राता, नीला, हरिया, पहेँला ... सप्तरङ्गी बत्तीको चमकमा मैले देखेजतिको ठीकसित ठम्याउन सकिनँ ।

त्यहाँबाट हिँड्दै हामी अर्को होटेल सिजर प्यालेसमा पस्यौँ । पस्दापस्दै रोमन शैलीका कलात्मक मूर्तिहरू देखिए । नियालेर हेर्दा रोमका सन्काहा राजा नीरोसम्बन्धी केही घटना चित्रित गर्न खोजिएको जस्तो लाग्यो ।

हामी बाटाका दुवैतिर ठूलठूला कम्पनीका पसलहरूको सजावट र वरपरको रमिता हेर्दै अगाडि बढ्दै थियौँ । एक ठाउँमा बाटामा छापिएका ढुङ्गाहरू भिजेको जस्तो देखेर मैले चारैतिर हेरेँ, तर कतै पनि पानी नदेख्दा छक्क परेर महाभारतको कथा सम्झन पुगेँ । पाण्डवहरूको घर जाँदा दुर्योधन यस्तै भ्रममा त परेका थिए होलान् ! म रल्लिँदै अगाडि बढेँ । केही पर एउटा चोक थियो । त्यसको मध्य भागको गोलाकार वेदीमा पहाड, वायुपङ्खी घोडा र सङ्गमर्मरका सुन्दर मानवमूर्तिहरू थिए । पहाडको टाकुराबाट झरना पनि खस्दै थियो ।

चोकको चारैतिर पसलैपसल थिए। जतातततै मान्छेको भीड थियो। पर आकाशतिर दरबारको कौसी र त्यसमा लहरै उभिएका सन्तहरूका प्रतिमा देखिए। भाइका अनुसार त्यहाँ उभिएर चारैतिर हेर्दा रोमको सेन्ट पिटर्स स्क्वायर देखे जस्तै लाग्छ रे। एक छिन त्यहाँको रमणीय परिवेश हेरेर हामी बाहिर निस्कियौँ।

त्यस होटेलको परिसर नाघेलगत्तै हामी पहिले गाडीबाट देखेको स्पिङ्सको मूर्तिनेर पुग्यौँ। त्यसैको पछाडि लुक्सोर होटेल थियो। सिसैसिसा भएको त्यो पिरामिड आकारको भवन बत्तीले झलमल्ल थियो। भाइले हामीलाई माथितिर हेर्न लाए। त्यस भवनको टुप्पाबाट आकाशतिर टर्चलाइट देखाए जस्तो गरी तेज किरण फालिएको रहेछ। त्यसको प्रकाश निकै शक्तिशाली भएझैँ लाग्यो। त्यो उज्यालो बादललाई छिचोलेर अनन्तसम्म पुगेको छ कि क्या हो! बुझ्दै जाँदा, चन्द्रमाबाट तल हेर्दा चीनको पर्खाल देखिएझैँ त्यो किरण पनि देखिएको थियो रे भन्नेसम्मको अपुष्ट जानकारी पाएँ।

हामी त्यहाँबाट पेटीपेटी फर्कियौँ। होटेल मिराज नाघेपछि होटेल ट्रेजर आइल्यान्डको प्राङ्गणमा पन्ध्रौँ-सोह्रौँ शताब्दीतिरका जस्ता दुइटा ठूलठूला पानीजहाजहरू देखिए। भाइले दिएको जानकारी अनुसार ग्राहक आकर्षित गर्न त्यहाँ समुद्री डाँकाको कार्यक्रम देखाइन्छ रे। डाँकाहरूले जहाजमा आक्रमण गर्ने, दुवैतिरकाले तरबार लिएर लडाइँ गर्ने, आगोको मुस्लो फालेर जहाजै जलाइदिने आदि जस्ता आकर्षक कार्यक्रम प्रस्तुत गरिन्छन् रे। तर केही अघिसम्म ऐतिहासिक घटनाका आधारमा प्रस्तुत गरिने ती रमाइला कार्यक्रमहरूमा हिजोआज अर्धनग्न केटीहरूका उत्तेजक नाच पनि मिसाएर अश्लीलता प्रदर्शन गर्न थालिएको छ रे। तोकिएको समयमा मात्रै देखाइने हुनाले हामीले त्यो कार्यक्रम हेर्न पाएनौँ।

त्यसैको छेउबाट बाटो काटेर हामी होटेल भेनेसियन पुग्यौँ। त्यस होटेलभित्र हिँड्दा हामीलाई भेनिसको बजारमा डुलिरहेको भान भइरह्यो। एक ठाउँमा ठूलै नहर देखियो। त्यहाँ पारम्परिक लुगा लगाएका

युवायुवतीहरू नौका-विहार गर्दै थिए। एक छेउमा बगैँचे रेस्टुरेन्टमा मान्छेहरू खानपान गर्दै थिए। त्यहाँको परिवेश र सेरोफेरो सबैलाई भेनिसको नहर भएको इलाका जस्तै गरी प्रस्तुत गरिएको रहेछ। हामीले भाइबाटै थाहा पायौँ– वास्तविकभन्दा पनि सुन्दर देखिन्छ अरे त्यो दृश्य। हिजोआज भेनिसका नहरहरूको पानी बरु त्यति सफा छैन रे। हामी पुल तरेर नहरपारि पनि गयौँ। त्यता एक ठाउँमा कार प्रदर्शनी रहेछ। त्यहाँबाट फर्कंदा भाइले हामीलाई आकाशतिर हेर्न भने। बादलका चारैतिर भर्खर सूर्य अस्ताउन थालेको जस्तो लालिमा देखियो।

"देख्नुभयो त चमत्कार! हेर्नुहोस्, कस्तो गर्न सकेका य ी
अमेरिकीहरूले!" भाइ घडी हेर्दै भन्दै थिए– "हेर्नुहोस्, अहिले रातिको एघार बजेर चालीस मिनेट भइसकेको छ, तर लाग्छ हामी साँझपख भेनिसको सडकमा डुल्दै छौँ। होइन त दाइ?" उनी अझ हौसिए– "दाइलाई हेक्का छ कि छैन, हामी छत भएको होटेलभित्र छौँ

नि !”

साँच्चै, कस्तो दुरुस्तै ! हामी सबैले रल्लिएर हे¥यौँ त्यो सुन्दर प्राविधिक चमत्कार ।

मैले एक पटक फेरि त्यो नक्कली आकाशतिर हेरेँ अनि सम्झिएँ दुई दशकअघि टोक्योमा घुम्दा मेरा बङ्गलादेशी मित्रले पोखेको बह ।

हामी सिन्जुकुको सडकमा किनमेल गर्दै हिँड्दै थियौँ । एक ठाउँमा झिलिमिली बत्ती बालेर अनौठा र आश्चर्यजनक दृश्यहरू प्रस्तुत गर्दै गरेको देखेर मैले उनलाई पनि देखाइदिन डाकेको थिएँ । तर उनी आउन मानेका थिएनन् । मेरो सोधाइको जवाफमा उनले अनुहारमा एक चिम्टी हाँसो फुस्स फुस्काउँदै मतिर एकटक हेरेर भनेका थिए– “केके हेर्नु भाइ ? पाँच महिनापछि म नोकरीबाट अवकाश पाउँदै छु । घर गएर मैले यहाँ देखेका अजब-गजब कुराहरू सुनाएँ भने सबैले ‘लौ यो बूढो त खुस्केछ; त्यस्तो पनि कहीँ हुन्छ र ?’ भन्छन् । कसैले पत्त्याउँदैनन् ।” त्यस

बेला उनको कुरा मलाई निकै घत लागेको थियो। उनले ठीकै भनेका थिए। चन्द्रमामा मान्छेले पाइला टेके भन्ने कुरा त हाम्रा तिर धेरैले पत्याउन खोज्दैनन् अझै। यो सबै चेतनाको अभावका कारण हो; सबै गरिब देशका जनताको आम मानसिकता हो यो भन्ने लाग्छ।

रमिता हेर्दाहेर्दै धेरै ढिलो भइसकेकाले हामी फर्कने उपक्रममा थियौँ। थप अलमल नगरी हाम्रो गाडी राखेतिर जान लाग्दा मैले पेटीको छेउमा केही मान्छेहरूले सुस्तसुस्त बोलेर लुकाएझैँ गरी बाटो हिँड्नेलाई कार्ड बाँड्दै गरेको देखेँ। उनीहरूको हाउभाउ मलाई पहिलेपहिले हामी सिनेमा हेर्न जाँदा रञ्जना, जय नेपाल आदि सिनेमाघरतिर ब्ल्याकमा टिकट बेच्नेहरूको जस्तै लाग्यो। मैले जिज्ञासावश भाइतिर हेरेँ। उनी हामीलाई उछिनेर अगाडि लम्किसकेछन्।

छिटछिटो कदम चाल्दै नजिक पुगेर मैले शङ्का निवारण गर्न सोधेँ– “के हो यो भाइ?”

उनले अत्तालिँदै "दाइले लिनुभयो कि क्या हो" भनेर प्रतिप्रश्न गरे, अनि एक छिन मतिर हेरेर "त्यही हो, त्यही हो दाइ !" भन्दै हाँस्न थाले। म जिल्लिएको देखेर उनले सबै कुरा खोलेर एउटा रमाइलो घटना सुनाए।

ती सबै केटीका दलाल रहेछन्। त्यस कार्डमा उनीहरूको नाम, ठेगाना, सम्पर्क फोन नम्बर आदि हुँदो रहेछ। एक पटक नेपालबाट पुगेका भाइका एक वरिष्ठ मित्रले रहर गरेर त्यही कार्ड लिएछन्। फोनमा कुराकानी गरेर गन्तव्य स्थानमा पुगेछन् पनि। ढोकामा बसेकी एउटीले दुई सय डलरको टिकट काट्न भनिछ। रकम तिरेपछि अह्राए अनुसारै उनी निर्दिष्ट कोठाभित्र गएर बसेछन्। एकै छिनमा सङ्गीतको तालसँगसँगै झिमिकझिमिक गरिरहेका रङ्गीन बत्तीको मधुरो प्रकाशमा सामान्य त्यान्द्राले आफ्ना धरोहर छोपेर एउटी गोरी सुन्दरी आइछ, मादक चालमा उनको नजिक। अझ नजिक अनि अझ नजिक। के गर्नुपर्छ अब ? भाइका ती वरिष्ठ मित्रले

सोच्दै थिए रे। क्षणमै कोठाको बत्ती झलमल्ल चम्केछ, अनि उसले ती त्यान्द्रा पनि स्वाट्ट तानेर फालिछ। उनी हत्त र पत्त उठेर तरुनीछेउ पुगेछन्। उसलाई समात्न यसो हात बढाएका मात्र थिए रे, बत्ती ग्याप्प भएछ। सबै कुरो एक निमेषमै भएछ। उनले केही बुझ्न नभ्याउँदै कोठामा पुनः प्रकाश छरिएछ। तर त्यस बेलासम्म त्यो तरुनी त्यहाँबाट गइसकेकी रहिछ। उनी एक्लै कोठामा अलमलिएर अब के हुन्छ भनेर सोच्दै थिए रे, त्यत्तिकैमा एउटा पहलमान आएछ र उसले ढोका खोलेर उनलाई बाहिर जाने बाटो देखाइदिएछ।

"ओह, कम्ता चलाख छन् यी कुइरेनीहरू ! पूर्णतः व्यावसायिक।" भाइले कुरो टुङ्ग्याए।

हामी पार्किङ स्थलमा पुगिसकेछौँ। भाले पार्किङ गर्दा सुरुमा लिएको चिट काउन्टरमा बुझाएर हामी बरन्डामा राखिएको बेन्चमा पर्खेर बस्यौँ। पाँच मिनेटपछि एउटा चालक हाम्रो गाडी लिएर आयो। हामी पापको सहरका रमाइला सम्झनामा रम्दै गाडीमा

बस्यौँ, अनि असङ्ख्य बत्तीको उज्यालो प्रतिबिम्बित भएर चम्किरहेको बाटामा भाइले गाडी घुइँक्याए।

हामी घर पुग्दा रातिको एक बजेको थियो।



"दाइको भनाइ अनुसार तपाईं हामीहरू त स्वर्गमा छौँ रे।" बाँड्दाबाँड्दैको तास रोकेर प्राध्यापक भाइले मतिर हेरेर हाँस्दै भने।

हामी आएको भनेर उनले आफ्ना तीन जना साथीलाई पनि सपरिवार बोलाएका थिए र मोमो पार्टीको आयोजना गरेका थिए। दिउँसो खाना खाएपछि नै बनेको थियो त्यो कार्यक्रम। त्यसपछि हामी डिपार्टमेन्टल स्टोर गएका थियौँ, मोमोका निम्ति कुखुराको थिलथिले मासु र बेलेर तयार पारिएको मैदाको रोटी किन्न। बाटामा जाँदा भाइले जानकारी दिएका थिए– त्यहाँ भएका नेपालीहरूबीच बेलाबेला त्यस प्रकारको जमघट भइरहन्छ। सबै मिलेर कहिले मोमो खाने, कहिले खसीको सेकुवा खाने कार्यक्रम बनाउँछन् रे।

"सेलरोटीसम्म त बनाएर खाइन्छ दाइ !" उनले उत्तेजित हुँदै कुरा थपेका थिए।

"ए ! पूरा नेपाली आयोजन अमेरिकामा ? तासमास हुँदैन ?" मैले रमाउँदै सोधेको थिएँ।

"हुन्छ नि, म्यारिज खेलिन्छ।" उनले भनेका थिए।

"अनि ट्वाँट नि ?" मैले हाँस्दै अन्तिम प्रश्न राखेको थिएँ।

"त्यो पनि हुन्छ दाइ ! नाचगान सबै हुन्छ।" अनि उनी पनि हाँसेका थिए।

मैले सम्झेको थिएँ– बेल भ्युमा जन्मदिनको पार्टीमा पनि सबैले नाचेर कस्तो रमाइलो गरेका थिए ! थापाजीकी श्रीमती त कस्ती सिपालु नाच्नमा ! ती मित्र दम्पतीले 'सिमसिमे पानीमा ...' गीतमा त कसैलाई छोडेका थिएनन्। सबैले नाच्नुपरेको थियो। तानीतानी नचाएका थिए। फर्कने बेला तीजको निम्तो पनि दिएका थिए मित्रले। बर्सेनि पालैपालो एक-एक परिवारका घरमा सबै नेपाली भेला भएर मनाउँदा

रहेछन् तीज, दसैँ अनि त्यस्तै चाडबाडहरू। कामविशेषले गर्दा तीजको रमाइलो हेर्न जान त पाएका थिएनौँ, तर त्यस अवसरमा खिचिएका फोटाहरू इमेलमा हेरेर हामी दुवै जना रोमाञ्चित भएका थियौँ। रातो साडीमा चुरा, बाला, पोते, तिलहरी गहनाले ढपक्क सजिएका नेपाली नारीहरू आनन्दविभोर भएर नाच्दै गरेका तस्बिरहरू देखेर मैले पशुपतिमा तीजका गीत गाउँदै छमछम नाच्दै गरेका आइमाईहरू सम्झेको थिएँ।

पसलमा पुगेपछि भाइले मासु, दूध, अन्डा, मोमोको र्‍यापर र फलफूलहरू टिप्दै ट्रलीमा हालेका थिए। एक ठाउँमा पुगेर उनी एक छिन अलमलिएका थिए र सिभास रिगल ह्विस्कीको बोतल टिपेर मलाई देखाउँदै सोधेका थिए– "यो चल्छ दाइ? काठमाडौँमा दाइकोमा भोड्का खाएको सम्झन्छु नि!" हामी दुवै जना एक-अर्कालाई हेरेर निकै हाँसेका थियौँ, दुई दशकअघिका कुरा सम्झेर।

"कसरी दाइ?" मेरा प्राध्यापक भाइको भनाइले

कुतकुत्याएर होला, अर्का इन्जिनियर भाइले च्वाइस कार्ड टिप्दै जिज्ञासु अनुहार लाएर सोधे।

"दिउँसो मैले सामान किन्दा तिमीहरूकोमा त जे पनि सस्तो– तीन रुपैयाँमा एक किलो मासु, तीनै रुपैयाँमा एक लिटर दूध भन्दै हुनुहुन्थ्यो दाइले।" किनमेल गर्दाका बेला मैले भनेका कुरा भाइले अहिले पाहुनाहरूलाई सुनाउँदै थिए– "अरू एक क्रेट अन्डा लिँदा यसो हातमा हिसाब गरेर 'ए, साठी पैसामै अन्डा' भन्दै छक्क पर्नुभएको थियो।"

"कहाँ साठी पैसा हो र दाइ?" इन्जिनियर बाबू चर्के– "साठी सेन्ट भन्नुस् न, अर्थात् बयालीस रुपैयाँ।"

"त्यस्तो विनिमय दरले गुणन गरेर हेर्ने त हामी जस्ता रुपैयाँले डलर साटेर घुम्न आएकाले हो। तपाईंहरू यहाँ डलरै कमाउनेले गर्न त मिल्दैन नि त्यस्तो हिसाब।"

मेरा कुरा सुनेर अर्का प्राध्यापक मित्रले सही थापे–

"त्यो त सोह्रै आना सही हो। दाइका अरू अनुभवहरू पनि सुनौँ न !"

यसैबीच बुहारीले मोमो ल्याएर टेबलमा राखिन्। मैले काँटा-चम्चाले एउटा डल्लो कोप्दै भनें– "पख्नुस्। पहिले बुहारीले ल्याएका देख्दै रहरलाग्दा यी ताता मोमो खाऊँ, अनि भनुँला मेरा कुरा।"

बुहारी मुसुक्क हाँसिन्। मैले तिल र टिम्मुर हालेको गोलभेँडाको चटनीमा मोमो चोबेर मुखमा हालेँ, अनि सुइसुइ गर्दै खाएँ। "आहा, स्वादिष्ठ ! साह्रै मीठो ! तिमी त औधी सिपालु रहिछ्यौ बुहारी !" मैले नेप्किनले हात पुछ्दै थपेँ– "तिमीले यहाँ मोमो बनाउने होटेल खोले निकै चल्छ।"

"धन्यवाद, दाइले मीठो मानिदिनुभयो। होटेल त पछि खोल्दै गरौँला, अहिले सबैले तातैमा खानुहोस्; म अरू ल्याउँछु।" उनी भान्सातिर गइन्।

मैले अर्को मोमो मुखमा हाल्दै प्रश्न तेर्स्याएँ– "यहाँ एउटा मजदुरले दुई हजार त कमाउँछ होला महिनाको

?”

“अँ, लगभग।” अर्का प्राध्यापक मित्रले जवाफ फर्काए।

“हामीकहाँ एउटा ज्यामीले यहाँकाको भन्दा डबल, चार हजारजति कमाउँछ भने हाम्रा मजदुरले पनि त्यही अनुपातमा डबल रकम तिरेर छ रुपैयाँ किलोका दरले मासु र दूध अनि एक रुपैयाँ बीस पैसामा एउटा अन्डा पाउनुपर्ने नि, होइन त? तर उसले त ... ”

मैले कुरा सक्न नपाउँदै प्राध्यापक मित्र टाउको हल्लाउँदै बीचैमा बोले– “हो त है? कस्तो गाह्रो छ हाम्रो नेपालमा जीवन धान्न!” उनले आफ्नो विचार राख्दै गए– “दाइले ठीक भन्नुभयो। यहाँको अर्थतन्त्र मान्नुपर्छ। निम्न आयवर्गलाई पनि जीवनयापन सहज हुने वातावरण बनाउन सकेको छ सरकारले।”

“दाइ पनि त्यही भन्नुहुन्छ।” मेरो साटो भाइ बोलिदिएथे। तर म भने हाम्रै गाउँघर सम्झँदै थिएँ– साँच्ची कस्तो है जीवन? सासै मात्र त धानेका छन्

नि ! त्यही पनि कस्तो कष्ट ... !

"अङ्कललाई नमस्ते गर !"

एक्कासि नारीस्वर सुनेँ र त्यतै हेरेँ। अर्का प्राध्यापक मित्रकी श्रीमती छेवैमा उभिएर छोरालाई अह्राउँदै थिइन्। ती बाबू कतै अन्त गएका रहेछन् र आउन केही ढिलो भएको रहेछ।

"के गर्दै छौ बाबू ?" नमस्ते गरेर अप्ठ्यारो मान्दै उभिएका ती नवयुवकतिर हेर्दै मैले सोधेँ।

"म नोकरी गर्छु।" उनले अङ्ग्रेजीमा जवाफ दिए।

"नेपालीमा बोल न बाबू अङ्कलसित।" उनकी आमाले सुस्त स्वरमा भनिन्।

"गाह्रो लाग्छ र नेपाली बोल्न ?" मैले स्मित हाँस्दै सोधेँ।

उनले केही हाँसे जस्तो गर्दै नेपालीमै भने– "त्यसो होइन अङ्कल। त्यति बानी छैन।" तर उनको नेपाली उच्चारण राम्रै थियो।

मैले बेल भ्युको पार्टीमा भेटिएकी मेरी श्रीमतीकी साथीसँगको कुरा सम्झेँ– छोरो के.जी. मा पढ्दापढ्दै उनीहरू अमेरिका आएका रहेछन्। छोरी भने यहीँ आएपछि जन्मेकी रहिछ। परिचयपछि कुरा हुँदा आमाचाहिँ "नेपालीमा बोल न" भन्दै थिइन्, तर दुवै छोराछोरीले मातृभाषाको उच्चारण ठ्याम्मै गरेका थिएनन्। अन्त्यमा ती महिलाले केही लाज अनि केही दुःख मान्दै उनलाई भनेकी थिइन्– "हेर्नुस् न, उहाँले मरिहत्ते गर्दा पनि यिनीहरू नेपाली बोल्नै खोज्दैनन्। छोरो त झन् 'त्यो नचाहिने भाषा बोलेर के काम' भन्दै रिसाउँछ।"

उनले मेरी श्रीमतीसित आफ्नी तेह्र वर्षीया छोरीका कुरा गरेर पनि धेरै चिन्ता व्यक्त गरेकी थिइन्। छोरी स्कुलबाट आउँदा कुनै केटो सँगै ल्याएर "आमा, यो मेरो ब्वाइफ्रेन्ड हो" भन्छिन् कि भन्ने डर उनलाई सधैँ भइरहँदो रहेछ। स्कुलबाट फर्केर छोरी नबोलीकन सोझै कोठामा पसी भने पनि उनलाई चिन्ता लाग्दो रहेछ। केही पो भयो कि ! "के गर्ने हेर्नुस् न, यहाँ

सात-आठ क्लास पढ्दाका केटाकेटीहरू डेटिङ गर्दै हिँड्छन्। यस्तो खुला समाजमा हामीलाई त गाह्रो हुँदो रहेछ। छोराछोरी कुइरेसित लागे भने! उहाँले त झन् खप्नै सक्नुहुन्न।"

आफ्नो दुखेसो पोख्दै जाने क्रममा उनले यहाँ भोगेका थुप्रै सामाजिक अप्ठ्याराको चर्चा पनि गरेकी थिइन्। स्कुल पढ्दाताका त छोराले हैरानै पारेको रहेछ। सहपाठीबीच वादविवाद हुँदा उसलाई लघुताभास भएर होला, एक दिन स्कुलबाट हान्निँदै घर आएछ र "नेपालमा खान पाएका थिएनौ र यहाँ आएका" भनेर बाबुलाई छाँसेको रहेछ। बेलाबेला आफ्नो हातको छाला तान्दै "मलाई यस्तो काले पुड्के किन बनाएको" भन्दो रहेछ।

"अहिले के गर्दै छन् बाबूले?" मेरी श्रीमतीले सोध्दा ती महिलाले भनेकी थिइन्– "बी.ए. गऱ्यो। एम.ए. पढ् भनेको, मान्दैन। काम गर्छु र आफैँ पढ्छु भन्छ। धेरै कर गर्न पनि हुन्न। घर छोडेर हिँड्देला भन्ने डर। यहाँका केटाकेटी त स्कुल सकेपछि घरै

बस्दैनन् ।”

त्यसै बेला उनले एउटो केटाको कथा पनि सुनाएकी थिइन् । उनको छिमेकमा बस्ने गोरा दम्पतीको छोरो काम गर्छु भन्दै अबेरसम्म बाहिरै बसेर रातिराति घर आउँदो रहेछ । एक दिन बाबुचाहिँले “यसरी मनपरी गर्न पाइन्न; टाइममा घर आउनू” भनेको त, उसले उत्ति खेरै घर छोडेर हिँडिदिएछ रे । त्यस केटाकी आमाले उनीसँग भेट हुँदा आँखाभरि आँसु पारेर आफ्नो मनको बह पोख्ने गर्छिन् रे ।

यहाँका केही अन्य नेपालीसँग कुरा हुँदा पनि उनीहरूलाई त्यस्तै सामाजिक तथा सांस्कृतिक द्वन्द्व र द्विविधा भएको मैले अनुभव गरेको थिएँ । लाग्यो, प्रवासमा यस्तो हुनु स्वाभाविकै हो ।

त्यसै क्रममा मैले पन्ध्र-सोह्र वर्ष यहाँ बसेका एक सज्जनलाई गत वर्ष ललितपुरका एक व्यापारी मित्रका घरमा भेटेको कुरा सम्झेको थिएँ । उनी आफ्नो छोराका निम्ति ती मित्रकी छोरी माग्न आएका थिए । मित्रले पनि एउटा सानोतिनो अनुष्ठानै आयोजना

गरेका थिए त्यस अवसरमा। कुरा गर्दै जाँदा उनले उताकै नागरिकता लिएको थाहा पाइएको थियो। हामीलाई जानकारी दिने सिलसिलामा उनले अलि गर्विलो अनुहार पारेर अमेरिकी लवजमा नेपाली बोल्दै भनेका थिए– "यु.एस. को नागरिक भनेपछि संसारभरि छुट्टै सान हुन्छ।" आफ्नो अमेरिकी पासपोर्ट देखाउँदै उनले कुरा थपेका थिए– "यो देखाएर धेरै देशमा सोझै छिर्न सकिन्छ। भिसा लिइराख्नुपर्दैन।"

फर्कने बेला मसँगै रहेका अर्का साथीले गरेको रोचक टिप्पणी पनि सम्झन पुगेको थिएँ– "हाउभाउ, लवज, अरु मनै अमेरिकी भइसकेका मान्छेलाई नेपाली बुहारी नै किन चाहिएको होला र यत्रो खर्च गरीगरी यहाँसम्म आएका ! कस्तो बुझिनसक्नु कुरा है ? तपाईंलाई के लाग्छ ?"

मेरा निम्ति पनि यो जटिल कुरो थियो। सोचेर निर्क्योलमा पुग्न सक्ने नदेखेर नबोली हिँडेको थिएँ।

मैले सियाटलमै एक मित्रका घरमा भेटिएका स्याङ्जाली बन्धुको विचार भने भिन्न पाएको थिएँ। उनले मसँग

अङ्ग्रेजीमा कुरा गरेका थिए। उनले अरूसित नेपाली बोले-बोलेनन् कुन्नि, मसित कुरा गर्दा घरीघरी बटारिने उनको जिब्रो, तन्किने मुख र हात तथा जीउको मर्काइ देखेर उनलाई मातृभाषा बोल्न गाह्रो हुन्छ होला भन्ने मैले अडकलेको थिएँ। तर उनको प्रस्तुति रोचक थियो।

"बुझ्नुभो मेरा साथी !" उनले मेरो काँधमा हात राखेर लेग्रो तान्दै भनेका थिए– "छोडेर आइसकिएको थलो सम्झेर रुनुको कुनै औचित्य छैन। जहाँ छौँ त्यहींको भएर बाँच्न सिक्नुपर्छ।"

बिहे गरेपछि उनी यहाँ पढ्न आएका रहेछन्, अनि यतैको रैथाने भएछन्। अठार वर्षको उमेरमै भएको रहेछ उनको बिहे।

"म भर्खरको थिएँ यहाँ आउँदा। कृपया यो समातिदिनुहोस् त साथी!" उनले ह्विस्कीको ग्लास मलाई समात्न दिएर दुवै हातले कोटका पाकेटहरू छामछुम गरेका थिए र आफ्नो पर्सबाट एउटा फोटो झिकेर मलाई देखाउँदै

भनेका थिए– "ई हेर्नुहोस्, हामी दुई जना यहाँ आउँदाको फोटो ! कलिला देखिँदैनौँ त हामी त्यस बेला, हँ साथी ? हेर्दाहेर्दै बाइस वर्ष भएछ यहाँ बसेको। पूरै जवानी सकियो यहाँ। तर मलाई केही चिन्ता छैन।" उनले ग्लासको क्षेल स्वाट्ट पार्दै सुनाएका थिए– "पछुतो पनि छैन। म यहीँ भिजेको छु। यहीँ राम्रो लाग्छ सबै थोक।"

उनले हातले अन्य अतिथिहरूतिर देखाउँदै भनेका थिए– "यी साथीहरूले चिन्ता गरेको सुन्छु। तर मेरो छोराले गोरी केटी मन पराउँछ र बिहे गर्छ भने ठीक छ। त्यो उसको विचार हो। उसको रोजाइको कुरो हो। मेरो संस्कृति भाँडिन्छ भनेर म फिक्री किन गर्ने ? भन्नुहोस् त साथी !"

त्यस बेला पनि म केही बोलेको थिइनँ। सोचेको थिएँ– भाँडियो भन्ने कुरो त होइन, तर देश छोडेर परदेशमा आएर बस्दा आफ्नो भाषा-संस्कृतिमा थोरबहुत परिस्थिति अथवा परिवेशजन्य बदलाव स्वभावत: आउँछ भन्ने ठान्छु। अरु अमेरिका जस्तो बिलकुलै विपरीत

भूगोल र भिन्न गणित भएको देशमा त थुप्रै सम्झौता गर्नुपर्छ होला जस्तो पनि लाग्छ। परदेशको के कुरा, हिजोआज त नेपालमै पनि भाषिक र सांस्कृतिक विचलनहरू देखिन थालेका छन्। नयाँ पुस्ताको सोच, रहनसहन, बोलचाल, खानपान आदिमा विदेशी संस्कृतिको टड्कारो प्रभाव सहजै अनुभव गर्न सकिन्छ।

पहिले तयार पारिएको बाहान सबै हामीले खाएर सिद्धयाएछौँ क्यार, अब अरू मोमो खाने कि भुजा खाने भनेर बुहारी सोध्न आइन्। सबै पाहुनाले अघाएको भाव व्यक्त गरे। मलाई पनि थप केही खान मन थिएन। बुहारीले डेजर्ट भनेर फलफूल हालेको पुडिङ बनाएकी रहिछन्। सबैले त्यो मीठो परिकार खायौँ।

रातको नौ बजिसकेको थियो। पाहुनाहरूलाई टाढा जानु थियो। उनीहरूले बिदा लिए।



म्याक्करन विमानस्थलको सुरक्षा कक्षमा पस्ने बेला

मैले फेरि एक पटक फर्केर हेरेँ। भाइ प्रस्थान कक्षबाहिर उभिएर हामीलाई बिदाइको हात हल्लाउँदै थिए। अघि त्यहाँ उनीसित अन्तिम पटक अँगालो हालेर बिदा लिँदा कस्तो गह्रौं भएको थियो मन ! "सियाटल पुगेर फोन गर्नुहोला है दाइ !" उनको स्वर पनि कामेको थियो। घरमा बुहारी र छोराछोरीसँग छुट्टिँदा पनि पाइला चाल्न गाह्रो भएको अनुभव भएको थियो। घरबाट निस्कँदा मेरी श्रीमती पनि विचलित थिइन्। तीन दिनको बसाइमा हामीले उनीहरूबाट पाएको आत्मीयता र आतिथ्य बिर्सिनसक्नु थियो। म पछिल्तिर कदम चाल्दै हात हल्लाउँदै थिएँ। सुरक्षाकर्मीले "यताबाट" भनेको सुनेर सोझिएँ।

विद्युतीय बाटोबाटो गुड्किँदै हामी हवाईजहाजभित्र पस्ने अन्तिम काउन्टरनेर पुग्यौं। आधा घण्टाजति बाँकी नै थियो हाम्रो उडानमा। यताउति हेरेँ। त्यहाँ पनि जुवा खेल्ने मेसिनहरू राखिएका रहेछन्। हामी आउँदा त्यस्तै मेसिन बाहिर बरन्डामा पनि देखेको थिएँ। सोचेँ– जाँदाजाँदैका मान्छेको बाँकी रकम धुत्ने

विचारले जहाजमा छिर्ने ठाउँमा पनि दाउ थापेका डाँकाहरूले ! संसारप्रसिद्ध जुवाको अड्डामा आएको, अनुभवका लागि भए पनि यसो खेलौँ न भनेर हिजो हामी दुवै जना बसेको त दुई सय डलरजति भुटे नि साइँदुवाहरूले !

बेलुकी फ्रेमोन्ट स्ट्रिट घुमाएपछि "यहाँको ठूलो र प्रसिद्ध होटेल अनि जुवाघर हो दाइ यो" भनेर भाइले छिराएका थिए एम.जी.एम. ग्र्यान्ड नाम गरेको त्यस होटेलमा। त्यसमा पाँच हजारभन्दा पनि बढी बेडरुमहरू छन् रे। होटेलमा पसेर सिँढी ओर्लेपछि रेस्टुरेन्टछेवैमा घुम्दै गरेको अडिटोरियम देखिएको थियो। त्यहाँ जोडीजोडीमा युवाहरू सङ्गीतको तालमा नाच्दै थिए। केही अगाडि पुग्दा ऐनाको बाक्लो पातामाथि दुइटा अजङ्गका सिंह घाम तापेर मस्त सुतिरहेको देखेका थियौँ। एक हूल मान्छे ती जनावरहरू हेर्दै, फोटो खिच्दै थिए। त्यहाँ नजिकै सिंहको ओडार नै बनाइएको रहेछ। होटेलको बाहिर पनि त्यस जनावरको काँसको ठूलै मूर्ति राखिएको देखेको थिएँ। हामी त्यहाँबाट देब्रे

घुम्दा सामुन्ने क्यासिनो देखिएको थियो। त्यस विशाल जुवाघरमा भीड पनि प्रचुर थियो। यताउति गर्दा हराइएला भनेर बीचको कफी सपनेरको ब्ल्याक ज्याक खेल्ने टेबल छानेका थियौँ हामीले, आफ्ना रहर पूरा गर्न।

मैले अग्लो स्टुलमा बसेर पर्सबाट एक सय डलरको नोट झिकेको थिएँ। कोरियन जस्ती देखिने होची तर हिसी परेकी केटीले मीठो पाराले मुस्काउँदै साटेकी थिई मेरो त्यो कटकटिया फ्र्याङ्कलिन साहेबको तस्बिर भएको डलर र दिएकी थिई केही रातानीला गोटीहरू। म कहिले मेरी सुवासिनीलाई र कहिले भाइलाई सोध्दै अर्को तास माग्ने अथवा आएकै दाउमा कुर्ने गर्दै खेल्दै थिएँ। हाम्रै छेउमा पहिलेदेखि खेल्दै गरेको कुइरेलाई ड्रिङ्क्स दिन भनेर एउटी परिचारिका आएकी थिई। उसले केही झुकेर दाहिने हात हल्लाउँदै "हाई गाइज" भन्दै सोधेकी थिई– "तपाईंहरूलाई के ल्याऊँ?"

मैले ऊतिर यसो हेरेको थिएँ– अप्सरा जस्ती सुन्दरी

हातमा ट्रे लिएर मीठो मुस्कानसाथ हामीलाई हेरिरहेकी थिई। रङ्गीबिरङ्गी पहिरनमा सजिएकी त्यस तरुनीका लुगाले उसका न्यूनतम अङ्ग मात्र बल्लतल्ल छोप्न सकेका थिए।

सम्झेँ– केहीअघि हामी फ्रेमोन्ट स्ट्रिट घुम्दा पनि एउटा जुवाघरबाहिर ढोकानेर त्यस्तै लुगामा सजिएर मनमोहक मुद्रामा उभिएका तरुनीहरू देखेका थियौँ। तिनीहरूले त नजिकै आएका मान्छेहरूलाई अँगालो हाल्ने, म्वाइँ खाने पनि गरिरहेका थिए। त्यो ठाउँ पनि गजबकै लागेको थियो हामीलाई। पहिले त्यहीँबाट भएको रहेछ यहाँको रङ्गीन रातको व्यापारको सुरुवात। अहिले त्यस साँघुरो एक किलोमिटरजतिको सडकमा सवारी निषेध गरेर पूरै इलाकालाई हिँड्ने बजारका रूपमा विकास गरिएको रहेछ। त्यहाँ थुप्रै क्यासिनो, होटेल, नाइट क्लब र किसिम-किसिमका पसलहरू थिए। त्यस ठाउँलाई बटुवाको बजार (पेडेस्ट्रियन मल) पनि भनिँदो रहेछ। भाइले छेवैको तलैतला भएको र एक पटकमा पन्ध्र सयजति गाडी राख्न

सकिने विशाल पार्किङ प्लाजामा गाडी राखेका थिए। हामी हिँड्दै बजारसम्म पुगेका थियौँ। त्यहाँको सडक र वरपरको सम्पूर्ण इलाकालाई फलामका खाँबामाथि जस्ताको गोलो आकारको अनौठो छत बनाएर छोपिएको थियो। राति निअन लाइटको रङ्गीचङ्गी प्रकाशको माध्यमले त्यस छतमा थरीथरीका आकृतिहरूको प्रतिविम्ब प्रदर्शित गरिँदो रहेछ। थुप्रै विद्युत् खर्चेर देखाइने त्यो धेरै आकर्षक र मनोरञ्जनात्मक मानिने कार्यक्रम हामीले समयाभावका कारण हेर्न पाएका थिएनौँ।

मैले सबैको सल्लाहमा परिचारिकालाई पिनाकोलाडा ल्याइदिन अह्राएको थिएँ। ती सुन्दरीले ल्याएको भुइँकटहरको रस र नरिवलको क्रिमयुक्त रम खाएर नभ्याउँदै मैले साटेका सबै गोटीहरू सकिएका थिए। म हार्दै गरेको देखेर मेरा सहयोगीहरू त्यहाँबाट उठेर जुवा खेल्ने मेसिन राखिएको कक्षतिर गइसकेका थिए। म मेरा डलरे गोटीहरू जित्ने ती युवतीलाई धन्यवाद दिँदै उठेको थिएँ र भाइहरू भएतिर गएको थिएँ। त्यस मेसिनमा खेल्दा श्रीमतीले पहिले त केही

जितेकी रहिछन्, तर "लौ-लौ" भन्दाभन्दै अर्को सय डलर सकिन खासै बेर लागेको थिएन।

उडानको समय भएपछि हामी जहाजभित्र पस्यौँ। पहिले हामी आउँदाको जस्तै आकारको त्यो पचाससिटे जहाज क्षणमै आकाशमा उड्न थाल्यो। हामी दुवैले तल हेर्‍यौँ। असङ्ख्य रङ्गीन बत्तीको झिलिमिलीमा नाचिरहेझैँ देखियो संसारको स्वप्ननगरी– लास भेगास।

# बाई गाइज

१९ सेप्टेम्बर, २००७।

विमानस्थल जान घरबाट बुधबार बिहानै निस्कने निधो गरेर मङ्गलबार राति हामी खाना खाईवरी सुतेका थियौँ। अबेरसम्मै निद्रा लागेको थिएन र ओल्टेकोल्टे फर्केको थिएँ म। हाम्रो फिर्ती उडान बुधबारको दिउँसो बाह्र एकचालीसमा थियो। हामी अमेरिका आएको दुई महिना अनि तीन साता भएछ। छोरीले छ महिना बस्न बोलाएकी थिइन्।

"कति काम मात्रै गर्नुहुन्छ ! यहाँ आएर आराम गर्नुहोस्।" छोरीको आग्रह थियो। आराम गर्ने भन्दैमा के गरेर काट्ने त्यहाँ त्यति लामो अवधि ? मैले सोचेको थिएँ। श्रीमतीलाई स्कुलले तीन महिनाभन्दा बढीको छुट्टी दिनै नमानेकाले हामीले त्यसै अवधिभित्र फर्कँदा एक साता ब्याङ्कक पनि बस्ने निधो गरी

आतेजाते टिकट लिएका थियौँ।

"दस बजेसम्म त पुगिसक्नुपर्छ एयरपोर्ट।" ज्वाइँसाहेबले राति खाना खाने बेला भन्नुभएको थियो।

"त्यसो भए बिहान साढे आठ बजेतिर खाजा खाएर निस्कौँला, हुन्न ?" छोरीले भनेकी थिइन्।

"बिहान अफिस आवरमा गाडीको घुइँचो बढी हुने हुनाले केही अगाडि निस्कँदा ठीक हुन्छ।" अमेरिकाका सडकमा सवारी चलाउँदाको अनुभवका आधारमा ज्वाइँले भन्नुभएको थियो– "हामी साढे सातमा निस्कँदा ठीक हुन्छ।"

आफ्ना पोकापन्तुराहरू हामीले साँझै ठीक पारिसकेका थियौँ। फर्कँदाका सामानमा चुहुने-फुट्ने केही थिएनन्; समय लाग्ने कुरो पनि भएन।

बिहान निस्कँदा मुसलधारे पानी परिरहेको थियो। रातभरि पनि त परेको थियो। म राति लघुशङ्काका लागि उठ्दा कस्तो डरलाग्दो गरी दर्केको थियो वृष्टि !

"यस पटक एक महिनै ढिलो सुरु भयो वर्षायाम।" अस्ति बजार गर्न निस्कँदा दिनभरि झरी परेको देखेर छोरीले भनेकी थिइन्। हुन पनि वर्षाका निम्ति अमेरिकाभरि प्रख्यात यस इलाकामा हामी बसुन्जेल खासै पानी परेको थिएन। तर पछिल्ला पाँच-छ दिन त इन्द्रदेवले आँखै देखेका थिएनन्।

हामी छिटै पुग्यौँ विमानस्थल। युनाइटेड एयरलाइन्सको उडान नम्बरको सङ्केत हेर्दै निकै परसम्म हिँडेपछि हामीले हाम्रो प्रस्थान कक्ष भेट्यौँ। निकै ठूलो र भव्य थियो सियाटल टाकोमा विमानस्थल। जतातते झिकिझकाउ पसलहरू थिए– डिपार्टमेन्टल स्टोर, नामुद कम्पनीका पसलहरू, कफी सप, रेस्टुरेन्टहरू अनि ठाउँठाउँमा थिए सफासुग्घर शौचालयहरू। अमेरिकाको सातौँ व्यस्त मानिने त्यस विमानस्थलमा यात्रुहरूको भीड पनि ठूलै थियो। हामीले पहिलो पटक अमेरिका ओर्लंदा र लस एन्जेलस तथा लास भेगास जाँदा-आउँदा गरी पाँच चोटि देखिसकेका थियौँ यो सुन्दर विमानस्थल। तर मलाई यति खेर भने अलिकति पनि

राम्रो लागेको थिएन। उनी पनि तल मात्रै हेरिरहेकी थिइन्। हामी एक छिन मेचमा बस्यौँ। दुवै चुपचाप।

कस्तो अस्थिरता मनमा ! बिछोडको बेला मलाई जहिले पनि छटपटी हुन्छ। त्यसैले छुट्टिने बेला म छिटछिटो हिँडेर अरूका आँखाबाट ओझेल हुने गर्छु। सम्झाउने, बुझाउने र भन्नुपर्ने कुरा केही छन् भने मैले अघि नै भनिसकेको हुन्छु। छोरी-ज्वाइँसँग पनि मैले गाडीमै कुराकानी गरिसकेको थिएँ। त्यही अग्लो भवनको सात तलामाथि गाडी राखेर हामी विमानस्थल छिरेका थियौँ।

म सम्झँदै थिएँ– बिदाइको बेला सास बाउँठिएर कस्तो पीडा भएको थियो मलाई। उनी भने सुँक्कसुँक्क गर्न थालेकी थिइन्। छोरी हात समातेर डोऱ्याउँदै थिइन् आमालाई। हुन त पीडा छोरीलाई पनि हुनसम्मकै भएको थियो। बेलाबेला उनको बोली लरबराइरहेको थियो, तर विचलित भइहालेकी भने थिइनन्। ज्वाइँसाहेब पनि अमिलो अनुहारले तल हेरेको हेऱ्यै हुनुहुन्थ्यो।

एयरलाइन्सको औपचारिकता पूरा गरेपछि भारी मनले हामी लाममा उभिएका थियौँ। सुरक्षा कक्षभित्र पस्ने ढोकामा पुग्दासम्मै छोरी-ज्वाइँले हामीतिर हेरेर बिदाइको हात हल्लाइरहेका थिए। यहाँ समूहमा सम्बोधन गर्नुपर्दा सामान्यतया “हाई गाइज” भन्ने गरिँदो रहेछ। टेलिभिजनका कार्यक्रमहरूको प्रारम्भमा उद्घोषकले पनि त्यही भनेको सुन्थेँ। त्यसै गरी छुट्टिने बेला छिटछिटो हात हल्लाउँदै “बाऽई” भनेका हुन्थे। मैले पनि छोरी-ज्वाइँका आँखाबाट ओझेल हुने बेला “बाई गाइज!” भन्न खोजेको थिएँ, तर मुखबाट शब्दहरू भने निस्केका थिएनन्, भित्रै अड्केझैँ भएका थिए। फगत हात मात्रै हल्लिएको थियो।

सुरक्षा कक्षको लामो घुमाउरो लाममा हिँड्दा पनि खुट्टा लरबरिएझैँ भएका थिए। नरमाइलो मनले एक्स-रे जाँचका निम्ति चस्मा, जुत्ता र पेटी खोलेर प्लास्टिकको भाँडामा राखेको थिएँ र लागेको थिएँ बाटामा ठडाइएको सुरक्षाको विद्युतीय ढोकातिर। ओहो! के भएको? सँघार नाघ्न खोज्दा अत्याउने गरी

घण्टी पो बज्यो त! त्यहाँ खटिएकी महिला कर्मचारीले भृकुटी उचालेर मतिर हेरेकी थिइन्। म झल्याँस्स भएको थिएँ– ए, पर्समा सुटकेसका चाबीहरू राखेको थिएँ! हत्त र पत्त क्षमायाचनासहित ती फलामे सामग्रीहरू झिकेर देखाएको थिएँ। ती महिला सहज भएकी थिइन्। मैले पर्स लगेर एक्स-रेमा राखेको थिएँ र पुनः आएर सुरक्षाको त्यो लक्ष्मणरेखा नाघेको थिएँ। ती महिलाले मुसुक्क हाँसेर अघि जान इसारा गरेकी थिइन्।

"जहाज उड्न निकै समय रै'छ।" उनले लामो सास तानिन्।

मैले घडी हेरेँ– अझ सिङ्गै दुई घण्टा रहेछ जहाज उड्न।

उनी छटपटिँदै उठिन् र भनिन्– "मलाई त कफी खान मन लाग्यो। त्यहाँ रेस्टुरेन्ट रै'छ।"

चिया भनेपछि म हुरुक्कै हुने मान्छे हुँ। तर डाक्टरले चिनी नखानू भनेदेखि मलाई त्यसप्रतिको

चाख स्वात्तै घटेको थियो। कफी खाने पनि खासै रुचि थिएन। मेरो मनोभाव बुझेर होला, उनी "म खान्छु है" भन्दै रेस्टुरेन्टतिर लागिन्।

म एक्लै टोलाउँदै सोच्न थालेँ– अब हामी एकै छिनमा यो संसारभरिकै सुसम्पन्न, समुन्नत र विश्वका धेरै मानिसहरूका निम्ति स्वप्ननगरीका रूपमा रहेको देश अमेरिकालाई बाईबाई गर्दै छौँ। राम्रै बित्यो भन्नुपर्छ हाम्रो यहाँको बसाइ। खुपै रुचि भएर म यहाँ आएको थिइनँ, तर यहाँ आएर थुप्रै अनुभव बटुलेँ। धेरै कुरा देखेँ, जानेँ, सिकेँ। धेरै कुराको बोध पनि भयो।

एक पटक ज्वाइँसाहेबका एक अमेरिकी सहकर्मीसित भेट हुँदा उनले "कस्तो लाग्यो तपाईंलाई अमेरिका" भनेर सोधेका थिए। त्यस बेला मैले मुसुक्क हाँस्दै "राम्रो लाग्यो" भनेर टुङ्ग्याएको थिएँ। एक पटक एक जना फिलिपिनोले पनि मेरा सामु त्यस्तै प्रश्न राखेका थिए।

ती मोटा शरीरका सज्जनसित बडो नाटकीय रूपले

परिचय भएको थियो। एउटा डिपार्टमेन्टल स्टोरबाट निस्कँदा छेवैको बर्गर किङ शृङ्खलाको पसलमा 'एक डलरको बर्गर' लेखेको काठे बोर्ड देखेको थिएँ। ओहो, एक डलरमै चिकन बर्गर! हेरूँ न कस्तो रहेछ, ठीक लागे घर लैजाउँला भनेर म पुगेको थिएँ त्यसको काउन्टरमा। त्यहाँ देखेको थिएँ दुई डल्ला रोटाबीच तारेको कुखुराको मासु, चिज, प्याज, गोलभैँडा, सस आदि हालेको वजनदार बर्गर। अडकलेको थिएँ– दुइटा खाए त यहाँ पढ्न आएका हाम्रा युवाहरूलाई एक छाक पेटभरि हुन्छ। कस्तो सस्तो! घण्टाको थोरैमा आठ डलर ज्याला पाउने देशमा दुई डलरमा टन्न भोजन, स्वादिलो अनि तागतिलो पनि। यहाँका मान्छेहरूको रहनसहन, यहाँको वातावरण र यहाँ उपलब्ध साधन अनि सुविधा देख्दा मलाई लाग्यो– जनतालाई आफ्ना आधारभूत आवश्यकता पूर्ति गर्दै जीवन निर्वाह गर्न सहज छ यहाँ। हामीतिरझैँ चिन्ता र तकलिफले चाउरिनुपर्ने अवस्था छैन। यहाँ चिन्ता भनेको त आफ्नो करिअरप्रतिको वा ठूलठूला

आकाङ्क्षाप्रतिको वा आफ्नै अन्तर्द्वन्द्वबाट निस्केको हुन सक्छ भन्ने पनि लाग्यो। अँ, खट्नु भने पर्छ यहाँ; पूरै आठ घण्टा कस्सेर लिन्छ रे काम।

त्यहीँ पल्लो कुनामा देखेको थिएँ ती अधबैँसेलाई। उनलाई देख्दा २०४५ सालमा मैले धनकुटामा भेटेका, भुइँचालोपीडितलाई उद्धार गर्न अहोरात्र खटेका स्वयंसेवक राईसाहेब हुन् कि भन्ने लागेर सोध्न पुगेको थिएँ। हरे, कस्तो समानता! म त पूरै झुक्किएको रहेछु। ती मेरा राईसाहेब त फर्नान्डो नामका फिलिपिनो पो रहेछन्! अमेरिकामा एसियाली मूलका बासिन्दाहरूमध्ये चिनियाँपछिको दोस्रो बढी जनसङ्ख्या यी तगालोगभाषीहरूकै रहेछ। मैले सन् १९८१ तिर फिलिपिन्समा अध्ययन गर्ने क्रममा भेटेका प्रायः सबैजसो शिक्षित युवाहरू अहिलेका नेपाली तन्नेरीहरू जस्तै अमेरिका जाने सपना बोकेर हिँडेको पाउँथेँ। यसरी ब्रेन ड्रेइन अर्थात् प्रतिभा पलायन हुँदै गए फिलिपिन्सको स्थिति के होला भन्ने लागेको थियो, मलाई त्यस बेला। तर हिजोआज हामीकहाँ पनि त्यही अवस्था देखिएको छ। त्यस बेला

फिलिपिन्सका धेरैजसो मानिस अमेरिकी जीवनशैलीप्रति मोहित भएको देख्थेँ म ।

उनीहरूको अमेरिकाप्रतिको आसक्तिको एउटा कारण के पनि हुन सक्छ भने, त्यो प्रशान्त महासागरीय टापु तीन सय वर्षभन्दा पनि बढी अवधि स्पेनको अधीनमा थियो । सन् १८९८ मा स्पेनसँगको युद्ध जितेर अमेरिकाले फिलिपिन्सलाई आफ्नो उपनिवेश बनाएको थियो । तर दोस्रो विश्वयुद्धको अन्तिमतिर जापानीहरूको कब्जामा परेर ज्यादती खेपेका फिलिपिनोहरूको त्राण गर्दै अमेरिकाले सन् १९४६ को जुलाई ४ कै दिन फिलिपिन्सलाई स्वतन्त्रता प्रदान गरेको थियो । त्यसैले हामीसँग कुरा हुँदा उनीहरूले अमेरिकीलाई गडफादर जस्तै मानेर तारिफ गरेका हुन्थे ।

हामी कुरा गर्दै आ-आफ्नो गन्तव्यको बस कुर्न नजिकैको बिसौनीको बेन्चमा बस्न पुगेका थियौँ । कुरा हुँदै जाँदा उनी विद्यार्थी राजनीतिमा लागेका रहेछन् र तेइस-चौबीस वर्षअघि मार्कोसको शासनकालमा

विरोधी नेता सिनेटर बेनिग्नो अक्विनो जुनियरको हत्या भएपछि भागेर यता आएका रहेछन् भन्ने थाहा पाएको थिएँ। पछि तिनै सिनेटरकी श्रीमती कोराजोन अक्विनो सन् १९८६ को चुनावमा मार्कोसलाई हराएर फिलिपिन्सकी एघारौँ राष्ट्रपति भएकी थिइन्।

"श्रीमती अक्विनो राष्ट्रपति भएका बेला आफ्नो देश जानुभएन त ?" मेरो प्रश्नमा उनी नबोली टाउको हल्लाएर तल हेर्दै एक छिन घोरिएका थिए। आफैँलाई अप्ठ्यारो लागेर मैले विषय फेर्दै यहाँका नगर-बसबारे कुरा झिकेको थिएँ। त्यति खेर उनीबाट नै मैले थाहा पाएको थिएँ– यहाँका बसहरू सरकारी अनुदानमा चल्दा रहेछन्। यहाँ प्राय: सबैका निजी सवारी हुन्छन्। आफ्नो गाडी छोडेर बढी मानिसले बस प्रयोग गरून् र सडकमा सवारीको चाप अनि प्रदूषण पनि कम होस् भन्ने उद्देश्यले सरकारले नगर-बस सेवालाई टेवा दिएको रहेछ।

उनले मलाई यहाँको सिस्टमबारे पनि धेरै जानकारी दिएका थिए। त्यसबारे कुरा हुँदा उनले भनेका थिए–

"हाम्रो देशमा कसैले कुनै काम गर्नु-गराउनु छ भने ऊ चलाख हुनुपर्छ, सोर्स-फोर्सवाला हुनुपर्छ, नभए हुँदैन। तपाईंहरूतिर कस्तो छ कुन्नि?" अनि मतिर हेरेका थिए।

मैले सोचेको थिएँ– यिनलाई के जवाफ दिऊँ? एक मनले सोचेको थिएँ– उनले कुनै नेपालीबाट यो कुरा सुनेर मेरो मन चोर्न यसरी मिलाएर भनेका त होइनन् ? फेरि अर्को मनले सोचेको थिएँ– हाम्रो भन्दा निकै विकसित थियो यिनको देश त्यस बेला नै मैले देख्दा। तर त्यहाँ हेर्दै-बुझ्दै जाँदा मैले जताततै अव्यवस्था त देखेको थिएँ नि। देखेको थिएँ मार्कोसको हुकुमी शासनले उत्पन्न गरेको भद्रगोल स्थिति, अनि व्याप्त भ्रष्टाचार र थुप्रैथुप्रै गैरकानुनी क्रियाकलापहरू। त्यहाँका प्राध्यापकहरूसँग बेलाबखत अनौपचारिक कुरा हुँदा कस्तो नैराश्य पोख्थे उनीहरू! हिजोआज हामीकहाँका विद्वान्हरूले भन्ने गरेझैं भन्थे– "देशै बिग्र्यो; खत्तमै भयो।" मैले पुनः उनको अनुहारमा हेर्दा देखेको थिएँ, उही मेरा राईसाहेबमा देखिने जस्तो सरलता। मैले

केही बोलेको थिइनँ, मात्र उनीतिर हेरिरहेको थिएँ।

"तर हेर्नुहोस्, यहाँ त्यस्तो छैन।" मेरो प्रतिक्रियाको प्रतीक्षा नगरी उनले भन्दै गएका थिए– "यहाँ हुने काम हो भने हुन्छ, नभए कसैको पनि हुँदैन। यहाँ सुन्दर सिस्टम छ, न्याय छ, सबै कुरा निष्पक्ष अनि पारदर्शी छ। त्यसैले यहाँ बस्दा जसले पनि आफूलाई निरापद र सुरक्षित अनुभव गर्छ। अनि त एक पटक यहाँ आएर बसिसकेको कसैले पनि सितिमिति फर्कने विचार गर्दैन।" बोल्दाबोल्दै उनी एक छिन रोकिएका थिए र मतिर हेरेर सोधेका थिए– "तपाईं कति भयो यहाँ आउनुभएको?"

मैले "यस्तै दुई महिनाजति" भनेपछि उनले थपेका थिए– "मैले आफ्नो मात्रै विचार राख्दै गएँ। तपाईंले पनि त आफ्नो अनुभव बटुल्नुभएको होला। कस्तो लाग्यो अमेरिका तपाईंलाई ? देख्नुभयो होला नि यिनीहरूको शिष्टता?" उनी एकटक मलाई हेर्दै भन्दै थिए– "कति अनुशासनप्रिय र इमानदार छन् यी अमेरिकीहरू !" अन्त्यमा उनले लामो सास फेरेका

थिए र आफैँसँग बोलेझैँ भुइँतिर हेर्दै भनेका थिए– "हामी यिनीहरू जस्तो कहिले हुन सकौँला खोइ ?"

छोटो अवधिमै भए पनि यहाँ डुल्दै-हेर्दै जाँदा मैले जताततै देखेको थिएँ अमेरिकीहरूको शिष्टता र अनुशासित क्रियाकलाप, अनि अनुभव गरेको थिएँ यिनीहरूको इमानदारी। बेलाबेला बाटामा एक्लै हिँड्दा सोच्थेँ– यहाँका अट्टालिका, ठूलठूला सडक र त्यस्तै भौतिक विकासका संरचनाहरू त हिजोआज कमबेस अन्य विकासोन्मुख देशहरूमा पनि देखिन्छन्। तर यी अमेरिकीहरूले गरेको मानसिक विकास? ओह, कल्पनातीत छ। यसको सम्झनाले बेलाबेला म भित्रभित्रै गलेझैँ अनुभव गर्थें र फर्नान्डोले भनेको जस्तै सोच्थेँ– यस्तो हामी हुन सके त, आहा !

यसैबीच म चढ्नुपर्ने बस आइसकेको थियो। मैले उठ्दै भनेको थिएँ– "तपाईंको विश्लेषण बिलकुलै सही छ। मेरो अनुभव पनि तपाईंको जस्तै छ।"

उनी पनि उठ्दै बोलेका थिए– "त्यसैले त यिनीहरूले यस्तो प्रगति गरेका छन्। त्यसै बन्छ र कुनै देश ?"

म टाउको हल्लाउँदै स्मित हाँसेको थिएँ, अनि उनीसँग हात मिलाएर "तपाईंसित भेट भएर खुसी लाग्यो; फेरि भेटौँला" भन्दै बिदा भएको थिएँ।

मेरी श्रीमती कफी खाएर फर्किसकेकी थिइन् र छेउमा बसेर एउटा पत्रिका पल्टाउँदै थिइन्। विमान आधा घण्टा ढिलो उड्ने सूचना दिइएको थियो। मान्छेहरू छटपटिएर यताउति गर्दै थिए। म अन्यमनस्क भई घरी सामुन्नेको विमानपट्टीतिर हेर्ने, घरी आफ्नै सोचमा डुब्ने गर्दो थिएँ। अमेरिकामा आफूले देखेका र अनुभव गरेका कुराहरू सोच्दै म बेलाबेला रोमाञ्चित पनि भइरहेको थिएँ। यहाँको प्रगति, यहाँको सम्पन्नताका कुराहरूको सम्झनाले मलाई घरीघरी नेपालका पहाड, गाउँ-ठाउँ, उकाली-ओरालीमा पनि पुऱ्याइरहेको थियो।

म सोचमा रुमलिइरहेका बेला एकाएक श्रीमती बोलेको सुनें– "लास भेगास जस्तो मरुभूमिलाई कस्तो झिलिमिली पारेका है यिनीहरूले !" उनी पत्रिकाको एउटा तस्बिर हेर्दै आफैं बोलेकी थिइन्।

म पुनः स्मृतिमा हराएँ– हो त। लास भेगास

स्ट्रिपमा हिँड्दाहिँड्दै एक ठाउँमा पुलमाथिबाट हेर्दा मैले सहस्र बत्तीको उज्यालोमा कस्तो झलमलाउँदो देखेको थिएँ चारैतिरको परिवेश ! त्यसै बेला त हो मैले २०३२ सालतिर पाल्पाको बसमा भेटिएका विराटनगरका एक विद्यार्थीलाई सम्झेको ।

एन.डी.एस. कार्यक्रम अन्तर्गत पाल्पाको कुनै एक गाउँमा खटिएका ती एम.ए. पढ्ने युवक त्यस दिन छुट्टी सकेर घरबाट फर्कंदै रहेछन् । "केके गर्नुपर्छ बाबू गाउँमा बसेर ? कस्तो छ त्यहाँको वातावरण ? रमाइलो लाग्दै छ ?" मेरा जिज्ञासाको उत्तरमा उनले गरेको रोचक टिप्पणी लास भेगासको चमक हेर्दै गर्दा मेरो स्मृतिमा गुन्जिएको थियो । उनले भनेका थिए– "गाउँमा रमाइलो के छ र खोइ ! उही गाउँलेको सेवा गर्दै छु भनेर रमाइलो मान्ने न हो ! अँ, राति टुकी बालेर केटाकेटीलाई पढाउँदै गर्दा कोठाको झ्यालबाट तानसेन डाँडोको झिलिमिली देख्छु; रमाइलो लाग्छ र त्यो त अमेरिका हो भन्ने सोच्छु मनमनै ।"

आफ्ना कुरा भनिसकेर उनी मुसुक्क हाँसेका थिए ।

हाल ती बाबू कहाँ होलान् कुन्नि, कि उनी पनि त्यही लास भेगासका झिलिमिलीयुक्त बाटामा हिँडिरहेका होलान्, थाहा भएन । तर उनले देखेको त्यो उज्यालो तानसेन, उनी बस्ने विराटनगरसहित नेपालका सम्पूर्ण सहर र बत्ती पुगेका औँलामा गन्न सकिने हाम्रा गाउँ सबै, अहिले दिनको कम्तीमा आठ-आठ घण्टाको लोडसेडिङको मारमा परेका छन् । मैले जाने अनुसार अब आउँदा दिनहरूमा यो समस्या झन् विकराल हुँदै जान्छ र नेपालीले दिनहुँ पन्ध्र-सोह्र घण्टासम्मैको औँसीको पीडा खेप्नुपर्नेछ । मरुभूमिमय क्षेत्रमा ठडिएको त्यस सहरको झिलिमिलीले मलाई त्यस बेला संसारमा जलस्रोतको दोस्रो धनी देश भनेर चिनिने हाम्रो देशलाई ठूलै व्यङ्ग्य गरिरहेझैँ पनि लागेको थियो र उखरमाउलो भएर पसिनैपसिना भएको थियो मेरो शरीर । मैले एकाएक बेल भ्युको जन्मदिनको पार्टीमा भेटिएका स्वास्थ्य क्षेत्रका विज्ञ शर्माजीको टिप्पणी सम्झेको थिएँ । सोचेको थिएँ– हाम्रो गरिबी र

पछौटेपनको कारक तत्त्व कतै हाम्रो सोचको अपरिपक्वता र जिम्मेवारी बोधको अभाव नै त होइन ?

यसैबीच, हाम्रो उडानको घोषणा भइसकेको थियो। हामी दुवै उठेर लाममा उभियौँ। रुकरुकाउँदो शरीरकी गोरी महिला आएर "माफ गर्नुहोला" भन्दै मेरो पछाडि उभिइन्। उनको पहिरन, हाउभाउ सबैबाट सम्पन्नता झल्किन्थ्यो। उनी नजिकै आउँदा चारैतिर मगमग बास्ना फैलियो। मैले एकाएक लास भेगासमा मेरा प्राध्यापक भाइसँग त्यहाँको रङ्गीन दुनियाँ हेर्दै हिँडेको कुरा सम्झेँ, अनि सम्झेँ उनीकहाँ मोमो-भोज खाँदै अमेरिकाको सम्पन्नताको चर्चा गरिरहेका बेला मेरो स्मृतिपटलमा धेरै पछि अनावरण भएको एउटा स्वदेशी दृश्य।

तीस वर्षजति अघि म कामविशेषले पहाडी इलाकाको यात्रामा थिएँ। अनेकौँ डाँडाकाँडा र जङ्गलका गोरेटाहरू छिचोल्दै म एक सहयोगीसित खोटाङको उत्तरी भेगतिर जाँदै थिएँ। जाडोयाम थियो। छिटै अँध्यारो भइसकेको थियो। भरिया नपाएर हामीले हाम्रा लुगाफाटाका

झोला पनि आफैँ बोकेका थियौँ। हिँडाइका साथै भोकले पनि निकै थकित तुल्याएको थियो। अघिल्लो दिन एक ठाउँमा बास बस्दा भुटेका मकै खान जुरेको थियो। बिहान त्यहींबाट सामलका रूपमा अलिकति मकै गोजीमा हालेर हिँडेका थियौँ। तर बाटो बिराएर जङ्गलैजङ्गल निकै बेर दुःख खेपेपछि साँझपख मात्र बल्लबल्ल एक ठाउँमा उज्यालो देखेर छिरेका थियौँ। त्यो सानो छाप्रोको बीचमा आगो बालेर एउटी आइमाई आफ्ना तीन जना लालाबालासहित बसेकी थिइन्। मैले यताउति हेरेको थिएँ, लोग्नेमान्छे त्यहाँ कोही थिएन। सामान्य उज्यालोमा त्यहाँ फगत विपन्नता छरिएको देखेको थिएँ चारैतिर। सोचेको थिएँ– यिनका लोग्ने साहूको भारी बोक्न मधेशतिर गएका होलान्। तीन-चार दिनजति लाग्छ रे एक पटकको भारी बोकेर धरानबाट त्यहाँ पुग्न। अथवा, मुग्लानै गएका पो हुन् कि कमाइको खोजीमा! हामीले त्यहाँ बास पाउने सम्भावना देखेका थिएनौँ। कुराकानीमा उनले बास दिन असमर्थता जनाउँदै पल्लो घरतिर

जान भनेकी थिइन्। त्यस बेला सुत्नुको भन्दा पनि भोकको नै मलाई बढी चिन्ता भइरहेको थियो। उनको सिल्टेको थालमा भुटेका मकै देखेर "हामीलाई अलिकति खान दिनुहोस् न" भन्दै गोजीबाट बीस रुपैयाँ झिकेर उनका अगाडि राखिदिएको थिएँ। तर अफसोच ! ती आइमाईले भुइँबाट रुपैयाँ टिपेर मलाई फर्काउँदै रुन्चे स्वरमा असमर्थता जनाएकी थिइन्। उफ्, अहिले पनि म ती दु:खी महिलाको अनुहार झलझली सम्झिरहेको छु र सम्झन्छु कामेको स्वरमा उनको विवश बोली– "हजुरहरूलाई यो मकै दिए मेरा केटाकेटी भोकै रहन्छन्।"

लाम अघि बढ्दै थियो। श्रीमती उडान कागजात लिएर अघि थिइन्। म सानो हाते झोला काँधमा भिरेर उनको पछिपछि जहाजसम्म पुग्ने सुरुङ बाटोबाट हिँड्दै सोच्दै थिएँ– अघि उडान कुरेर बस्दा मेरो छेउमा एउटी केटीसित कुरा गरेर बसेको केटाले एकाएक जुरुक्क उठेर "म अब आउँदिनँ" भनेको थियो। केटीले जिल्लिएको अनुहार लाएर ऊतिर

हेरेकी थिई। केही बोलेकी थिइनँ। मैले उनीहरूका सबै कुरा नसुनेका हुनाले उसले के सन्दर्भमा भनेको हो बुझेको थिइनँ।

अस्ति छोरीले हामीलाई “फेरि आउनुपर्छ है” भनेर आग्रह गरेकी थिइन्। ज्वाइँसाहेबले पनि सही थाप्दै “अब त पाँच वर्षलाई भिसा छँदै छ; केही समस्या हुन्न आऊजाऊ गर्न” भन्नुभएको थियो। प्रत्युत्तरमा म केही बोलेको थिइनँ। हाँसेको मात्र थिएँ मुसुक्क र सोचेको थिएँ– काम परे त हो। एक पटक हेर्ने भनेको अमेरिका हेरिहालियो। दुई-चार दिन भेटघाटलाई पनि ठीकै होला। नभए यहाँ आएर हामी जस्ताले के गर्नु ? कसरी समय काट्नु यो बिलकुलै एकाकी दुनियाँमा, जहाँ मेरो आफ्नो पहिचान केही छैन ?

“पेटी बाँध्नुस् रे।” उनले मलाई यसो धकेल्दै भनिन्। म झस्कैं। सामुन्ने परिचारिका हाँस्दै उभिएकी थिइन्। मैले सिटको पेटी कसैं। निमेषमै जहाजले अमेरिकाको भुइँ छोड्यो।



टोक्यो पुग्न जहाजलाई साढे नौ घण्टाजति लाग्यो। ओर्लनुभन्दा केही अघि माथिबाट हेर्दा ससाना सुन्दर र मनोरम हरिया टापुहरू देखिएका थिए। नारिता विमानस्थलमा हाम्रो तीन घण्टाको कुराइ थियो। जहाजबाट ओर्लेर हामी ब्याङ्कको उडानका निम्ति युनाइटेड एयरलाइन्सको काउन्टर खोज्दै हिँड्यौं। म गुड्किने फलामे बाटामा उभिएर चारैतिरका पसल र तिनका सङ्केतपाटीहरू पढ्दै थिएँ। बाटो सुलुलुलु बग्दै हामी यात्रुहरूलाई अगाडि डोऱ्याउँदै थियो। उनी भने छेउको पेटीपेटी उस्तै चालमा सँगसँगै हिँड्दै थिइन्। एक ठाउँमा पुगेर त्यो स्वचालित बाटो सकियो। त्यहाँको ठूलो बरन्डामा थुप्रै यात्रुहरू कतैको उडान कुर्न बसिरहेका थिए। एकाएक अनौठो लवजमा अङ्ग्रेजी बोलेको नारीस्वर सुनेर म रोकिएँ।

ससाना कपहरू राखिएका ट्रे समातेकी एउटी जापानी केटीले मतिरै हेरेर भन्दै थिई– “चाख्नुहुन्छ सर ?” मैले उसलाई सरसरी हेरेँ– गोरो सुकसुकाउँदो शरीर, कसिएका छोटाछोटा लुगा, विभिन्न रङ्गमा रङ्ग्याएर

सिलिक्क पारेको कपाल अनि टाठो हाउभाउ। ऊ निकै आकर्षक देखिन्थी।

मैले स्मित हाँस्दै सोधेँ– "के हो यो?"

ऊ फुर्तिलो चालले हिँडेर नजिकै आई र एउटा कप समातेर अनुहारभरि हाँसो छर्दै भनी– "यो ह्विस्की हो सर, चाख्नुहोस्!"

म "नाइँ, धन्यवाद" भनेर त्यहाँबाट अगाडि लागेँ र सोच्न थालेँ– हिजोआज त धेरै फेरिइसक्यो होला जापानको सामाजिक परिवेश पनि। अहिले यस केटीलाई देखेर मैले दुई दशकभन्दा पनि अघि जापान आउँदा टोक्यो विश्वविद्यालयका समाजशास्त्रका प्राध्यापकलाई भेटेको कुरा सम्झेँ।

टोक्यो पुगेको भोलि पल्ट काठमाडौँका एक प्राध्यापक मित्रको कोसेली पुर्‍याइदिन भनेर मैले उहाँलाई फोन गरेको थिएँ। एक दिन बेलुकी मेरो सेमिनार सकिएपछि उहाँ आउनुभएको थियो र मलाई विश्वविद्यालय परिसर घुमाउँदै आफ्नो घर लानुभएको थियो। हामी

त्यहाँ पुग्दा उहाँकी श्रीमती मलाई स्वागत गर्न आँगनसम्मै आएकी थिइन्। किमोनो भनिने लामो खुट्टासम्म छोपिने गाउन जस्तो जापानी पारम्परिक पहिरनमा सजिएकी ती महिलाले जापानी भाषामा आदरार्थी शब्द उच्चारण गर्दै यसो झुकेर अभिवादन गरेकी थिइन्। मैले पनि उनले झैं गरी आदर फर्काएको थिएँ। जापानमा एक-अर्कालाई नमस्कार गर्दा अगाडि कम्मरसम्मै टाउको निहुराउने गरिन्छ। उनीहरूले त्यो स्तुत्य क्रिया बहुतै श्रद्धासाथ गरेको देख्थेँ। एक पटकमा तीन चोटिसम्म आदानप्रदान गरिने भए पनि हामीले नजानेर निहुरिरहे हामी नरोकिउन्जेल उनीहरू अदबसाथ झुकेर अभिवादन फर्काइरहेका पनि हुन्थे। उनीहरूको त्यो शिष्टता देखेर म बेलाबेला हामीकहाँ एक हात उचालेर गरिने विकृतिपूर्ण धारे नमस्कार सम्झन्थेँ र मनमनै लज्जित हुन्थेँ।

मलाई त्यस दिन ती गृहिणीले झुकेरै हातले अघि हिँड्न इसारा गर्दै ढोकासम्मै ल्याएकी थिइन् र जुत्ता

खोल्न लाएकी थिइन्। म अलमलिँदै थिएँ। उनले तत्काल एउटा चप्पल ल्याएर मेरा गोडानेर राखिदिएकी थिइन् र फुकालेका जुत्ता लगेर छेवैको ऱ्याकमा थन्क्याएकी थिइन्। उनले मलाई त्यस्तै सत्कारसाथ घरभित्र पुऱ्याएर बस्न इसारा गरेकी थिइन्। म ती गृहिणीको आतिथ्य देखेर नतमस्तक भइरहेको थिएँ। पछि थाहा पाएको थिएँ– जापानीहरूले पनि हामीहरू जस्तै अतिथिलाई निकै मान गर्दा रहेछन्।

त्यस दिन मैले त्यहीँ डिनर लिएको थिएँ। होचो टेबलनेर जापानी तरिकामा घुँडा टेकेझैँ बसेर दुइटा काठे सिन्काले टिप्दै खानेकुरा खाँदा मलाई अनौठो आनन्द लागेको थियो। त्यहीँ हो मैले पहिलो पल्ट उनीहरूको साके भनिने मनतातो पारिएको घरेलु रक्सी र साशिमी नामको काँचो माछा अनि भातमा काँचै माछा राखेर तयार पारिएको सुशी भनिने परिकार चाखेको। हरे, जापानीहरूले स्वाद मानेर खाने आलो माछाको चोक्टा खाँदा मलाई कस्तो दिगमिग लागेको थियो !

खाने टेबलमा प्राध्यापकज्यूले जापानी संस्कृतिबारे पनि चर्चा गर्नुभएको थियो। उहाँसँगको छलफलबाट मैले त्यस बेलाको जापानी युवा पुस्ता पाश्चात्य संस्कृतिप्रति आकर्षित हुँदै गइरहेको छ भन्ने बुझेको थिएँ। अङ्ग्रेजी भाषा, सङ्गीत र फेसनप्रति उनीहरूको मोह गहिरिँदै गएकाले समयमै त्यसबारे नसोचे सांस्कृतिक विचलनका कारण समाजमा ठूलो खतरा उत्पन्न हुन सक्नेतर्फ सबै बुद्धिजीवीहरू चिन्तित छन् भन्ने पनि मैले उहाँबाट जानकारी पाएको थिएँ।

साँच्चै, त्यस बेला नै जापानले अद्भुत विकास गरिसकेको थियो। त्यो देश सांस्कृतिक रूपले पनि निकै धनी थियो। त्यसको झलक म जतातातै सहजै देख्न पाउथेँ र आश्चर्यचकित भएर सोच्थेँ– यसरी आफ्नो संस्कृतिलाई अक्षुण्ण राख्दै विकासको यत्रो उचाइमा पुग्नु कुनै पनि जातिका निम्ति सामान्य कुरो होइन। विकास र संस्कृतिको त्यस्तो विलक्षण सामञ्जस्य अन्यत्र के कस्तो छ कुन्नि, अमेरिकामा त मैले ठ्याम्मै देख्न पाइनँ।

नारिता एयरपोर्टमा पनि भीड थियो। ठाउँठाउँका बैठकमा राखिएका कुर्सीहरूमा मान्छे भरिएका थिए। जापानमा दिउँसो भए पनि अमेरिकामा रात परिसकेको थियो। मैले घडी हेरेँ– रातको पौने एघार बजेको थियो। मेरो घडीमा अझै पनि अमेरिकाकै समय थियो। छेवैको भित्ते घडीले स्थानीय समय दिउँसोको पौने तीन देखाइरहेको थियो। हामी जापान ओर्लनुअघि नै अन्तर्राष्ट्रिय समय अनुसार एक दिन बढी भएर २० सेप्टेम्बर भइसकेको थियो। जापानको समय हामी आएको अमेरिकाको वासिङ्टन राज्यभन्दा सोह्र घण्टाजति अगाडि छ। अमेरिकामै पनि पूर्व र पश्चिममा अवस्थित राज्यहरूमा तीन घण्टासम्मको फरक छ। त्यस बेला अमेरिकामा रात परेको हुनाले त्यहाँका उडानबाट आएका सबै यात्रुहरूलाई निद्राले छोप्दै थियो। अमेरिकामा ओर्लेका केही दिन जेट-ल्यागका कारण दुःख पाएकाले हामी पनि कतै पल्टेर सुत्न पाए हुन्थ्यो भन्ने सोचमा थियौँ। खाली ठाउँ खोज्दै हामी पल्लोपट्टिको कुनामा पुग्यौँ। त्यहाँ केही

मेचहरू खाली रहेछन्। हामी त्यहीँ बस्यौँ। उनले यसो ढल्केर निदाउने प्रयास गरिन्। म यताउति हेर्न थालेँ।

छेउमा बसेको कुइरेले आफ्नो ल्यापटपमा केही टाइप गर्दै थियो। यसले इन्टरनेट खोलेको त होइन ? मलाई शङ्का लागेर चियाएँ। मेरो अनुमान सही रहेछ। उसले वायरलेस इन्टरनेटको माध्यमबाट इमेल पठाउँदै रहेछ। मैले सोचेँ– उडान-तालिका अनुसार हामी मध्यरातमा ब्याङ्कक ओर्लन्छौँ। विजय बाबूले इमेलमा हामीलाई विमानस्थलमै लिन आउने कुरो लेख्नुभएको थियो। बेलाबखत अन्तर्राष्ट्रिय उडानहरू पनि ढिला हुँदा रहेछन्। अमेरिकाबाट उड्दा पनि जहाजले निकै ढिलो गरेको थियो। हिँड्ने बेला उहाँसँग टेलिफोन सम्पर्क हुन सकेको थिएन। एक पटक यहाँबाटै फोनमा कुरा गर्न पाए हुन्थ्यो, नभए इमेल गर्न पाए हुन्थ्यो भन्ने लागिरहेको थियो। छोरी-ज्वाइँलाई पनि जापान राम्रैसित पुगेको जनाउ दिन मन लागिरहेको थियो।

"यहाँ यात्रुहरूका निम्ति त्यस्तो केही व्यवस्था गरेको होला नि !" उनले पनि ब्याङ्कक कुरा गर्दा राम्रो हुने विचार पोखिन् ।

म उठेर कतै त्यस्तो केही देख्छु कि भन्दै खोज्न हिँडेँ । ठाउँठाउँमा टेलिफोनको व्यवस्था रहेछ । एक ठाउँमा इन्टरनेटजडित कम्प्युटर पनि देखेँ । तर सबै ठाउँमा जापानी येन हालेर मात्र प्रयोग गर्न सकिने हुनाले एक छिन अलमलमा परेँ । अब मसँग भएको डलर साट्न सटही काउन्टर खोज्नुपर्ने भयो । आफू आएको बाटो यताउति कतै त्यस्तो काउन्टर देखेको थिइनँ । थकाइले शरीर लल्याकलुलुक पारेकाले अरू पर जाने जाँगर पनि आएन । त्यसै मन मारेर फर्केँ ।

उनी निदाइसकेकी रहिछन् । म छेउको कुर्सीमा आँखा चिम्म गरेर ढल्किएँ । एक छिन यसो झुपुक्क भएको थिएँ, रिसाएको बिरालो कराएझैँ सुनेँ र तर्सँदै ब्यूँझेँ । विमानस्थलमा कहाँबाट बिरालो होस् ? के हो त ? यताउति हेरेँ । अगाडिको बेन्चमा सानो हाते झोला सिरानी लाएर एउटी अमेरिकी अधबैँसे महिला

मस्त निद्रामा घुर्दै रहिछन्। बिचरी, उनलाई पनि निद्राले गलायो होला।

विमानहरू उड्दै थिए। यात्रुका बगाल यताउता आउँदै-जाँदै थिए। हवाईपट्टीतिर हेरेँ। यात्रुहरूलाई जहाजसम्म पुऱ्याउन बनाइएका फलामका सुरुङ पुलहरूको बाहिरपट्टिको भागमा ठूलठूला अक्षरले एच.एस.बी.सी. लेखिएको रहेछ। लाग्यो– हङकङ साङ्घाई ब्याङ्किङ कर्पोरेसन नामक यो अन्तर्राष्ट्रिय ब्याङ्कको कारोबार यहाँ राम्रै रहेछ। हाम्रो उडान समय बेलुकीको साढे छ बजे थियो। छेउको भित्तामा झुन्ड्याइएको विद्युतीय पाटीले जहाज सही समयमा उड्ने सङ्केत दिँदै थियो।

जहाजमा चढ्ने बेला भएको सूचना पाएपछि हामी लाममा उभियौँ। तर विमान भने तोकिएको समयभन्दा बीस मिनेट ढिलो उड्यो। विमानमा दिइएको जानकारी अनुसार हाम्रो ब्याङ्कको उडान पाँच घण्टा बीस मिनेटको रहेछ।



श्रीमती बेलाबेला बाहिर हेर्दै थिइन् । केही ठम्याउन सकिँदैनथ्यो । बाक्लो रुई जस्ता बादलका थुप्रा मात्रै देखिन्थे । उनले दिक्क भएर झ्यालको पर्दा बन्द गरिन् । हाम्रो विमान ओर्लने बेला हुन थालेछ । महिला क्याप्टेनले माइकमा दस मिनेटभित्र गन्तव्यमा पुगिने समाचार सुनाइन् । ब्याङ्कक आउन थालेछ, अब त तल झिलिमिली देखिन्छ होला भन्ने आसमा उनले पुनः झ्यालको पर्दा खोलिन् । तल एक-दुई ठाउँमा बत्ती झिलमिल गरेको देखियो । तर एकै छिनमा जताततै अन्धकार भयो र कालो बादल मात्रै देखिन थाल्यो, अनि गड्याङगुडुङ गर्दै बिजुली पनि चम्कन थाल्यो ।

दस मिनेटमा अवतरण गर्छ भनेकामा आधा घण्टा नै हुन लाग्यो । अझै सहरका बत्ती देखिएनन् । मलाई लाग्यो– हाम्रो जहाज ब्याङ्कको चारैतिर घुम्दै छ । बेलाबेला हल्लिँदै पनि थियो । मलाई केही डरको अनुभव भयो र यताउति हेरेँ । अन्य यात्रुहरूका अनुहारमा पनि भयको भाव देखेँ ।

एक पटक काठमाडौंबाट दिल्ली उड्दा हामी चढेको विमान आँधीहुरीमा परेर यसरी नै आकाशमै ढलमलिएको थियो। बाहिर कालो बादल देखिन्थ्यो र बेलाबेला अहिले जस्तै मुटु थर्काउने गरी बिजुली चड्किरहेको थियो। सबै यात्रुहरू डराएका थिए। एक-दुई जना अत्तालिएर कराउन पनि थालेका थिए। पाइलटले सबैलाई धैर्य राख्न माइकबाट सम्झाउँदै थिए। म र मेरा साथी दुवै जनाले त्रसित अनुहारसाथ एक-अर्कातिर हेरेका थियौं। छेउमा बसेका एक सज्जन हनुमान् चालीसा पाठ गर्दै थिए। जहाज कहिले माथि जान्थ्यो; कहिले एकाएक ह्वात्तै तल खस्थ्यो। त्यो वायुयान जतिजति तल खस्थ्यो मलाई मेरो मुटु नै अड्कियो भनेझैं लाग्थ्यो र सम्पूर्ण शरीर बाउँठिन्थ्यो। परिचारिका र उडान इन्जिनियर हस्याङफस्याङ गर्दै विमानभित्र घरी पाइलटतिर र घरी पुछारतिर कुदिरहेका थिए। सबैको अनुहार सोहोरिएको जस्तो पहेंलो देखिन्थ्यो। मृत्युको डर अति कष्टकर हुँदो रहेछ। जहाज हल्लिँदै थियो। बाहिर डरलाग्दो गरी बिजुली चम्किरहेकै

थियो। डर र त्रासका बीच एकाएक हाम्रो जहाजले लखनउ विमानस्थलमा आकस्मिक अवतरण गरेको थियो। दोस्रो जीवनप्राप्ति बोधको आनन्दमा लामो सास फेर्दै हामी ओर्लेका थियौँ, हवाईपट्टीमा। कस्तो अनौठो अनुभव थियो त्यो! मलाई त्यसको सम्झनाले धेरै पछिसम्मै सिरिङसिरिङ पारिरहन्थ्यो।

म त्यस्तै कल्पनाले झन् त्रसित भइरहेँ। हाम्रो जहाज अझै आकाशमै ढलमलिँदै थियो। घडी हेरेँ– पैँतीस मिनेट भइसकेछ हामी हावामै रिँगेको पनि। यस्तैयस्तैमा इन्धन सकियो भने? छेवैको कुनै विमानस्थलमा ओराले हुन्थ्यो नि! मैले फेरि मनलाई बुझाएँ– त्यस्तो इन्धनै सकिने अवस्था भए त अवश्य त्यसै गर्छन् होला नि। यता हामीतिर जस्ता अग्ला पहाड त छैनन्? मैले भट्टेडाँडामा भएको थाई विमान दुर्घटना पनि सम्झिएँ। लौ अब हाम्रो खरानी पनि पो भेट्ने हुन् कि होइनन् छोराछोरीले! म कल्पँदै थिएँ। भट्टेडाँडाको दुर्घटनामा परेका हाम्रा एक गाउँले भाइको त्यस्तै केही पनि नभेटिएर कुशको पुतला बनाएर

दाहसंस्कार गरेको पनि सम्झिएँ।

महिला पाइलट बेलाबेला सान्त्वना भरिएको स्वरमा भन्दै थिइन्– "बाहिर पानी परिरहेकाले हामीलाई ओर्लन ढिलो भइरहेको छ। कृपया एकै छिन धैर्य गरी बसिदिनुहोला। अब हामी केही बेरमै ब्याङ्कक एयरपोर्टमा ओर्लन्छौँ।"

लौ, केही बेर धैर्य गर भन्दाभन्दै सिङ्गै युग बित्न थालिसक्यो! ओर्लने पो हो कि होइन! विमानस्थलबाहिर हामीलाई लिन भनेर पर्खिरहेका हाम्रा आफन्त झन् कति आत्तिएका होलान्! पुगे त हो नि, नपुगे उनीहरूको स्थिति के होला! यस्तै ऊहापोहमा मथिङ्गल खलबलिन थालिसकेको थियो। उनले बाहिर उज्यालो बत्ती देखिछन् र कराइन्– "उः, ब्याङ्कक आइपुग्यो!"

मैले पनि बाहिर चियाएँ। विमानस्थलमा बत्ती झलमल्ल देखिए। मन हलुङ्गो भयो। जहाजका पाङ्ग्राले भुइँ छोए। सबै यात्रुहरूले आनन्दविभोर भएर ताली बजाए।

"विमानस्थलमा मर्मतको काम चलिरहेकाले यान अगाडि जान सक्दैन।" माइकद्वारा जानकारी दिइयो– "हाम्रा गाडीहरूले तपाईंहरूलाई अध्यागमन कक्षसम्म पुऱ्याउनेछन्। असुविधाका निम्ति क्षमा चाहन्छौँ।"

ठूलै पानी परेर भर्खरै थामिएको रहेछ। बलेँसीबाट थोपा खसिरहेका थिए। हामी ओर्लियौँ। बाहिर बसहरू लहरै लाम लागेका थिए। भुइँमा जमेको पानीबाट तर्कंदै हामी बससम्म पुग्यौँ। पन्ध्र मिनेट हिँडालेपछि अध्यागमन कक्षको ढोकामा पुगेर बस रोकियो। मर्मतको काम चलेकाले पनि राम्रै भयो भन्ने लाग्यो। होइन भने पहिले आउँदा हामीलाई त्यस ठाउँसम्म पुग्न निकै हिँड्नुपरेको थियो। अध्यागमनको औपचारिकता पूरा गरेर हामी सामान सङ्कलन कक्षमा पुग्यौँ। हाम्रा सबै सामान त आइपुगेका रहेछन् तर सानो झोला भने पूरै भिजेको रहेछ। धन्न, त्यसमा पानीले बिगार्ने सामान थिएनन्। तर हाम्रो एउटा सुटकेसको ताल्चा भने थिएन। मनमा शङ्का उत्पन्न भयो– ए, हाम्रो सामान उडाए कि क्या हो हँ?

अमेरिकामा एयरलाइन्सवालाले सामान जिम्मा लिने बेला हामीलाई ताल्चा नलाउन भनेको थियो। तर ब्याङ्ककमा चोरी हुन सक्छ भनेर हामीले साँचो लाएकै पोकापन्तुरा बुझाएका थियौं। सुरक्षाकर्मीहरूलाई शङ्का लागेर जाँच गर्दा ताल्चा काटिदिन सक्छन् भन्ने जनाउ दिँदै उसले हाम्रो सामान बुझेको थियो। हत्त र पत्त बाकस खोलेर हेरें। केही हराएको वा चोरी भएको जस्तो लागेन। देखें, टाउको काटिएको हाम्रो ताल्चा अमेरिकी सुरक्षा विभाग छापिएको कागजले मोडेर त्यसभित्रै राखिएको रहेछ।

ढिलो भएकाले हामी छिटछिटो बाहिर निस्क्यौं। हुन पनि अध्यागमनमा धेरै समय लाममा उभिनुपरेको थियो। हाम्रो विमान ब्याङ्कक अवतरण गर्दा माइकद्वारा स्थानीय समय अनुसार २० सेप्टेम्बर रातको एघार बजेर छयालीस मिनेट गएको जनाउ दिइएको थियो। बाहिर निस्कँदासम्म २१ सेप्टेम्बर भइसकेको थियो। सामुन्ने झुन्डिएको विद्युतीय घडीले रातिको बाह्र पचपन्न सङ्केत गरिरहेको थियो। निकासनेर पुग्दा

देख्यौँ– हाम्रा आफन्त हँसिलो अनुहारमा हात हल्लाउँदै थिए ।



हामी चढेको थाई एयरलाइन्सको विमान २६ सेप्टेम्बर बुधबार मध्याह्न पौने एक बजे त्रिभुवन विमानस्थलको हवाईपट्टीमा ओर्लियो । हामी छ दिन ब्याङ्कक बसेर स्थानीय समय अनुसार आजै बिहान दस चालीसमा त्यहाँबाट उडेका थियौँ ।

मैले जहाजबाटै चियाएँ । घमाइलो दिन थियो । आकाश पनि छ्याङ्ग थियो । यहाँ पनि ठूलै पानी परेको रहेछ । हवाईपट्टी पूरै भिजेको थियो ।

हामी विमानबाट ओर्लियौँ । यात्रुहरूको लर्कोबाट पन्छिएर मैले चारैतिर हेरेँ– आहा, सामुन्ने स्वच्छ, शुभ्र, स्निग्ध हिमाल हँसिलो अनुहारसहित दुवै हात फैलाएर हाम्रो स्वागतमा उभिएको थियो !

'पाताल प्रवास' यता अमेरिका घुम्न जाने जोकोहीले पनि लेखेका छन् अमेरिका । तर, सुवेदीले सानो क्यानभासमा निकै राम्रो अमेरिका लेखेका छन् ।

- अन्नपूर्ण पोस्ट

---

सरल, सहज र पठनीय शैलीमा यो वृत्तान्त लेखिएको छ । धेरै पछाडि नेपाली साहित्यमा यस्तो सुरूचिपूर्ण कृति आउन सकेको छ ।

- कान्तिपुर

---

अमेरिकामा पाइएको सभ्यता र सोचको फराकिलो दृष्टिकोणलाई अत्यन्तै मीठो शैलीमा प्रस्तुत गरिएको छ । छोटा र सरल वाक्य अनि चाखलाग्दा घटनाहरूले पुस्तकलाई रोमाञ्चक बनाएका छन् ।

- नयाँ पत्रिका

---

लेखकको अन्तर्दृष्टि तीक्ष्ण र गहन रूपमा प्रक्षेपित भएको छ । भाषा सरल, सम्प्रेषणीय र प्रभावोत्पादक छ ।

- नागरिक



publication nepa~laya



9 789937 835480

Rs. 300

www.nepalaya.com.np